# बुद्ध बोधि

## A Collection of Scholarly Articles
## by
## Pt. Dibya Vajra Vajracharya



श्री वज्रसत्व

संकलक:
सुमति वज्राचार्य

# बुद्ध बोधि

**A Collection of Scholarly Articles**

**by**

*Pt. Dibya Vajra*

संकलकः

सुमति वज्राचार्य

प्रकाशकः

दिव्यकेशरी परिवार

महाबौद्ध

प्रकाशक:

दिब्य केशरी परिवार, महाबौद्ध

छोरा/बुहारी : गौतम वज्र/देवलक्ष्मी, स्वस्तिवज्र/रुपमति,
पीयूषवज्र/रमिता, अमरवज्र/सविना

छोरी/ज्वाई : श्रीमती/प्रेमकाजी, सुमति, विपुल/भूवन बहादुर,
मञ्जु/गौतम, मालती/रोशन दर्शन

नाति/नाती बुहारी : सुभाष/रिंकी, सुगम/ज्ञानु, सरोज/संध्या सजिव/अञ्जना,
निरज सुधा, मण्डूर, वचन, प्रशन्न, आँतिस, पारस, स्वरूप, सगुन

नातिनी/नातीनी ज्वाइं : कुसुम/कविर, शशि/सागर, सुचित्रा/राजेन्द्र,
मिलन/सरोज, लुना/क्रिष्टोफर, सृष्टि/दिनेश पूजा,
टिना/शशिराज, पूनम, रुजा, रुविना

पनाति/पनातिनी : समिसन, आलान, शुभम्, संगम, सदिच्छा, शुभेक्षा, रुचिका,
हौसला, आयशा, जिज्ञासा, सुहानी, सामना, शलौनी, श्रेया, आस्था

प्रकाशन मिति : वि.सं. २०६३
ई.सं. २००६
बु.सं. २५५०

प्रथम संस्करण : ५०० प्रति

मूल्य रु. १५०/-

कम्प्यूटर अच्युत रत्न वज्राचार्य
छुस्यावहाल, ज्याठा

कभर डिजाईन : कास डेक्सटप
ठँहिटी, फोन: ४२२६६६१

मुद्रक : सिष्टमेटिक प्रिन्टिङ सर्भिस
असन, महाबौद्ध, काठमाडौं।



पूज्य पिता दिव्य वज्रको ८८ औं

जन्म जयन्तीमा

माता केशरी र पिता दिव्यवज्रमा

हार्दिक श्रद्धाञ्जली

२०६३ जेष्ठ

# विषय-सूची


| | | | |
|---|---|---|---|
| | | | पेज नं. |
| क. | बुद्ध बोधि हाम्रो श्रद्धासुमन | - सुमति वज्राचार्य | क |
| ख. | जिगु श्रद्धा भाव | - यज्ञ मानपति वज्राचार्य | ज |
| ग. | हाम्रा श्रद्धेय वैद्य स्व.पं. दिव्यवज्रका गुणानुस्मरण | - पीयूषवर्षि औषधालय परिवार | ब |
| १. | वज्रयान | - अप्रकाशित | १ |
| २. | वज्रयान थुइकेगु नियम | - ताइवानमा बौद्ध सम्मेलनमा प्रस्तुत २०४३ साल | १२ |
| ३. | वज्र महायान वज्रयान | - अंग्रेजी पत्रिका हिमालयमा अंग्रेजीमा प्रकाशित २०५२ | १८ |
| ४. | वज्रयानीतयेसं पालन याये मा:गु नियम | - विश्वशान्ति पत्रिका बु.सं.२५३७ | २३ |
| ५. | बौद्ध धर्ममा वज्रयानको महत्व | - - | ३० |
| ६. | मन्त्रयान के हो ? | - विश्वशान्ति पत्रिका | ३४ |
| ७. | शून्यताज्ञान | - बोधि प्रकाशन ल.पु.मा प्रकाशित | ४२ |
| ८. | वज्रयोगिनी | - अप्रकाशित | ४६ |
| ९. | गौतम बुद्ध | - अप्रकाशित | ५० |
| १०. | प्रत्येक बुद्ध | - अप्रकाशित | ५५ |
| ११. | बोधिसत्व | - अप्रकाशित | ६३ |
| १२. | प्रज्ञोपाय | - अप्रकाशित | ६७ |
| १३. | बौद्ध धर्ममा पञ्चकायको अवधारणा | - अप्रकाशित | ६९ |

| | | |
|---|---|---|
| १४. प्रणिधि वोधिचित्त | - शान्तिभूमि पत्रिका २०४४<br>अखिल नेपाल महायान बौद्ध समाज | ७२ |
| १५. आत्मनिरीक्षण | - शान्तिभूमि पत्रिका २०४०, अ.ने.म.वौ.स. | ७५ |
| १६. सम्यक् सम्वोधि | - शान्तिभूमि पत्रिका २०४३, अ.ने.म.वौ.स. | ७७ |
| १७. अवलोकितेश्वरको आदर्श परात्मपरिवर्तन | - शान्तिभूमि पत्रिका २०४२, अ.ने.म.वौ.स. | ८१ |
| १८. पासा मुना याये मा:गु ज्या | - न्हसला पत्रिका, लाभरत्न तुलाधर | ८५ |
| १९. छुं योजना दयेकेवलय् विचा: याये मा:गु खँ | - न्हसला पत्रिका, लाभरत्न तुलाधर | ८७ |
| २०. धर्मालोक (श्रद्धारुपी धर्मया प्रकाश) मुखपरिवर्त | - वुद्ध जयन्ती स्मारिका, ल.पु.,२०४५ | ९० |
| २१. प्रार्थना भजन | - वुद्ध जयन्ती स्मारिका<br>रुद्रवर्ण महाविहार, २०५१ | ९३ |
| २२. सप्तविधानोत्तर मानसिक पूजा तथा<br>पटपारमिता भावना | - २५३० वुद्ध जयन्ती, अ.ने.म.वौ.स. | ९४ |
| २३. स्मृतिसंप्रजन्य | - शान्तिभूमि पत्रिका २०४०, अ.ने.म.वौ.स. | ९६ |
| २४. पञ्चोपचार पूजा विधि | - पलेस्वां लोटस रिसर्च सेन्टर | १०० |
| २५. महासांघिकहरू महायानी होइनन् | - – | १०९ |
| २६. विज्ञानवादया छुं खँ | - विश्वभूमि पत्रिका | ११६ |
| २७. वुद्ध र गणेश एकै हो भन्नु महान मोह हो | - शान्तिभूमि पत्रिका २०४०, अ.ने.म.वौ.स. | ११९ |
| २८. गीताया महायानी व्याख्या | - शान्तिभूमि पत्रिका २०४०, अ.ने.म.वौ.स. | १२३ |

❑❑❑

# बुद्ध बोधि

# हाम्रो श्रद्धासुमन

प्रातः स्मरणीय हाम्रा बुवा स्वर्गीय पं. दिव्यवज्र वज्राचार्यका प्रकाशित एवं अप्रकाशित बौद्ध दर्शन सम्बन्धी अन्वेषणपूर्ण लेख रचनाहरुको संगालो "बुद्ध बोधि" प्रकाशनमा ल्याउन पाउँदा हामीहरुलाई ठूलो खुशी लागेको छ । त्यति मात्र होइन, जीवनका अन्तिम दिनमा उहाँले चाहाना गर्नुभए अनुरुप ढीलै भए पनि यो लेख रचनाको संगालो "बुद्ध बोधि" प्रकाशन गर्न पाउँदा हामीले आफूलाई कृतकृत्य सम्झेका छौं । बौद्ध धर्ममा अभिरुची हुने, बौद्ध दर्शन अध्ययन अध्यापन गर्न चाहने विद्वत वर्गहरुमध्ये एक व्यक्तिले मात्र यो संकलनबाट लाभान्वित हुन सके पनि हामीले आफूलाई धन्य सम्झनेछौं ।

आफ्नो सम्पूर्ण समय अध्ययन अध्यापनमा व्यतीत गर्ने हाम्रा बुवाले यी लेख रचनाहरुमा बौद्ध धर्मका शास्त्रीय आधार एवं प्रमाण भन्दा बाहिर गएर एउटा सिङ्गो वाक्य पनि लेख्ने प्रयास गरेको देखिदैन । यो उहाँको तल्लीनता र विद्वताको द्योतक हो ।

आज देशी तथा विदेशी विद्वानहरु हाम्रो देश नेपालमा प्रचलित बुद्ध धर्म र संस्कृतिका रहस्यहरु बुझ्न अत्यन्त उत्सुक छन् । त्यसमा पनि सेक्स फ्री परिवेशमा हुर्केका पश्चिमेलीहरुलाई हाम्रा वज्रयान दर्शन सम्बन्धी युगल मूर्तिहरु तथा कामुकता प्रदर्शन गरिरहेका विभिन्न शक्ति पीठ एवं देवस्थलहरुको टुँडालहरुमा पाइने कलाकृतिहरु देख्दा भिन्नै कौतुहलता हुनु स्वाभाविक छ ।

सयौं वर्ष अघि ब्रिटिस राजदूतका रुपमा नेपाल पसेका ब्रेन ह्युगटन हडसनका समयदेखि नै धेरै विदेशी विद्वानहरु हाम्रो बौद्ध दर्शनको दार्शनिक एवं व्यावहारिक पक्षलाई बुझ्न निरन्तर प्रयत्न गर्दै आइरहेको कुरा पनि सर्वविदितै छ । वाग्वज्र, लीलावज्र र सुरतवज्र जस्ता बौद्ध सिद्धहरुले जन्म लिई बौद्ध दर्शनको चरम प्रगति गरिसकेको यो बुद्ध जन्मभूमि नेपालमा आज स्वय बौद्धहरुले आफ्नो धर्म संस्कृति बुझ्न छोडेको देखिन्छ ।

चरम गरीबीको रेखामुनि बाँचिरहेका हामी नेपालीहरुलाई सधैं हात मुख जोर्न धौ धौ छ । यसरी गरीबी र अभावमा जिउनु परेका बौद्ध समुदायमा आफ्नो धर्म,

संस्कृति एवं दर्शन गहिरिएर अध्ययन गर्ने समय नहुनु स्वाभाविक छ । इच्छा भएर पनि आफ्नो धर्म दर्शन अध्ययन गर्न नसक्दा आफ्ना धर्म दर्शन बुझ्न छोडे । आफ्नू धर्म दर्शन आफूले त बुझेन भने अरुलाई बुझाउन गाह्रो मात्र होइन, असम्भव हुन थाले ।

तर हाम्रा बुवा दिव्यवज्रले महायान, वज्रयान दर्शनको क्षेत्रमा नौलो जागरण ल्याएको कुरामा हामीले मुक्त कण्ठले तारिफ नगरी रहन सक्दैनौं । उहाँका जति पनि लेख रचनाहरु यहाँ सङ्कलित छन्, ती सबै महायान, वज्रयान दर्शनमै आधारित छन् । यी लेखहरुद्वारा उहाँले नेपालमा प्रचलित बौद्ध धर्म बुद्ध बोधिकै लागि हो, "बुद्धो भवेयम् जगतो हिताय"को उद्देश्यले नै चलिरहेको छ भन्ने तथ्य स्पष्ट पार्न "बौद्ध धर्ममा वज्रयानको महत्व" भन्ने लेखमा "बुद्ध बौधौ दधे मन:" भन्ने वज्रयानीहरुको गुरुमण्डल समाधिको वाक्य उद्धरण गर्नुभएको छ । त्यस्तै सर्व शून्यतावादी अर्थात् प्रज्ञापारमिताका अनुयायीहरु पनि बुद्ध बोधिकै लागि तत्पर छन् भन्ने कुरा देखाउन बोधिचर्यावतारको उल्लेख गर्नुभएको छ । फेरि (स्वचित्त दृश्य शून्यतावादी) विज्ञानवादीले पनि बुद्ध बोधि नै लाभ गर्न प्रचार गरेको छ भन्ने कुरा व्यक्त गर्न लङ्कावतार सूत्रको उल्लेख गर्नुभएको छ । अनि मन्त्रयानले पनि बुद्ध बोधि नै लाभ गर्न प्रचार गरेको छ, तर यी मन्त्रयान प्रचारक आचार्यहरुलाई असाधारण विज्ञानवादी भनिन्छ भन्ने कुरा व्यक्त गर्न कालचक्रको टीका विमलप्रभाको उल्लेख गर्नुभएको देखिन्छ ।

परापूर्वकाल देखि चल्दै आइरहेको बौद्ध दर्शन अर्थात् महायान, मन्त्रयान एवं वज्रयानको अध्ययन गर्न चाहनेले क्रमवद्ध रुपमा बौद्ध दर्शन पढ्नु पर्ने तथ्यलाई बोध गराउन उहाँले हेवज्र तन्त्रको विनय पटलमा उल्लिखित कुराहरु "वज्रयान थुइकेगु नियम" र "मन्त्रयान" भन्ने लेखमा व्यक्त गर्नुभएको छ । हेवज्र तन्त्र अनुसार सर्वप्रथम अष्टाङ्ग उपोषध ज्ञान दिनु, त्यसपछि दश शीलको उपदेश दिइ शीलमा राख्नु अनि स्थविरवादको सिद्धान्त वैभाषिक सिद्धान्त बुझाउनु । त्यसपछि क्रमश: सौत्रान्तिक दर्शन, योगाचार दर्शन र माध्यमिक दर्शन बुझाउनु । अनि बल्ल मन्त्रयान बुझ्ने हुन्छ । उपर्युक्त सबै कुरा बुझेपछि वज्रयान स्वत: बुझ्ने हुन्छ भनी उल्लेख गर्नुबाट मन्त्रयान, वज्रयान पढ्नु, अध्ययन गर्नु साधारण कुरा होइन भनेर व्यक्त गरेको बुझिन्छ ।

पाँचवटा धर्म, तीनवटा स्वभाव, आठवटा विज्ञान, दुईवटा नैरात्म्य नबुझीकन महायान दर्शन बुझ्न सकिँदैन भन्ने कुरा योगाचार (स्वचित्त दृश्य शून्यता) वादीहरुको विचार पनि उल्लेख गरेर मन्त्रयान एवं वज्रयान दर्शन पूजा कर्मकाण्ड र दीक्षाले मात्र बुझ्ने बुझाउने कुरा होइन भन्ने कुरा व्यक्त गर्नुभएको देखिन्छ ।

त्यस्तै हाम्रो शरीरमा रहेका क्लेशयुक्त पञ्च उपादान स्कन्धलाई क्लेशरहित बनायौं भने ती पञ्चस्कन्धले नै पञ्चबुद्धको रुप लिन्छ भन्ने मन्त्रयानीहरुको महत्वपूर्ण धारणालाई पनि "वज्रयान थुइकेगु नियम" भन्ने लेखमा उल्लेख गरिएको पाइन्छ ।

प्राय: वज्रयान सम्बन्धी सबै लेखमा त्यही कुराहरु दोहोरिएका छन् । मन्त्रयान फलात्मक (फलस्वभाव) र पारमितायान हेत्वात्मक (कारण स्वभाव) का हुन् । यी दुवै पानीमा पानी मिलाए जस्तो मिलेर बनेको यान नै वज्रयान हो भनी वज्रयानको परिचय दिन खोजेको छ । मन्त्रयानमा पनि पारमितायान (शून्यता, निस्वभाव) मा जस्तै संवृत्ति सत्य र परमार्थ सत्यका आधारमा धर्मदेशना हुन्छ भन्ने कुरा उल्लेख गरेको छ ।

मन्त्र के हो भन्ने कुरा बुझाउन "मन: सन्त्राणात् मन्त्र" भनी देखिने, सुनिने, छोइने पृथ्वी आदि स्थिर वस्तु र मनुष्य आदि चल वस्तुको नामको सबभन्दा अगाडिको अक्षरलाई नै चित्तवज्र वा बीजाक्षर भनिन्छ । वस्तुको पूरा नामलाई वागवज्र भनिन्छ । अनि ती नामको साथमा अरु शब्दहरु पनि जोडिएकोलाई कायवज्र मन्त्र भनिन्छ भनी चर अचर सम्पूर्ण वस्तुलाई मन्त्र भनी व्याख्या गरिएको शास्त्रोक्त कुरा स्पष्ट पारेको छ ।

वज्र महायान वज्रयान भन्ने लेखमा भगवानलाई "सम्यक सम्बुद्ध, त्रियानोत्म देशक" किन भनिन्छ भन्ने तात्पर्य श्री भगवान बुद्धले श्रावकयान, प्रत्येक बुद्धयान र महायान (वज्रयान) यी तीनै यानको उपदेश दिनुभएकोले हो तथा मनुष्यको प्रकृति हेरी उपायकौशल्यद्वारा जुन व्यक्तिलाई जुन यान (मार्ग) उपयुक्त छ, त्यही यानको उपदेश दिएकोले हो भन्ने तथ्य स्पष्ट पारेको छ ।

१) श्रावकहरुको मुख्य उद्देश्य अर्हत्व लाभ गर्नु र बहुजन हित गर्नु ।

२) प्रत्येक बुद्धको लक्ष्य हो, प्रत्येक बुद्धत्व लाभ गर्नु र आफ्नू ज्ञान आफैंमा सीमित राख्नु ।

३) सम्यक सम्बुद्धको लक्ष्य हो, "बुद्धो भवेयम् जगतो हिताय" अर्थात् बुद्धत्व लाभ गर्ने मात्र मेरो उद्देश्य होइन, जगत हित गर्नकै लागि म बुद्ध हुन सकूं भन्ने उहाँहरुको उद्देश्य हो । यसरी समस्त प्राणीहरुलाई हित सुख दिन नै निर्वाण साक्षात्कार गर्नुको सत्ता बारम्बार जन्म लिई प्राणी उद्धार गर्दै भगवान गौतम बुद्धले सम्यक सम्बुद्धत्व लाभ गर्नुभएको हो ।

यसरी अनुदारवादी बौद्ध अनुयायीहरूले स्थविरवादी दर्शन अपनाए भने प्रगतिशील उदारवादी बौद्ध अनुयायीहरुले निर्वाण र अर्हत्व भन्दा "बुद्धो भवेयम् जगतो हिताय"लाई नै सर्वोपरी मानी महायान, वज्रयानको मार्ग अपनाएको स्पष्ट हुन आउँछ ।

यति मात्र होइन, मन्त्रयानीहरुको ग्रन्थ नामसङ्गीतिमा भगवानलाई चतुर्मुद्रार्थदेशक अर्थात् कर्ममुद्रा, ज्ञानमुद्रा, समयमुद्रा र महामुद्राको उद्देश्य व्याख्या गर्ने भनी उल्लेख गरिएको छ । कर्ममुद्रा सेक्ससम्बन्धी व्याख्या भएको धर्मदेशना हो भन्ने उद्धरण गरी अत्यन्त कामुकहरुलाई क्लेशयुक्त जीवनबाट बाहिर ल्याई धर्ममा आकृष्ट गर्न नै यी मुद्राहरुको छुट्टा छुट्टै वर्णन गरिएको हो भन्ने शास्त्रीय आधारहरु पनि दिइएका छन् । तर हाल हाम्रो देशमा केवल समय मुद्रा मात्र प्रचलित भएको तथ्य पनि वर्णन गरिएको छ ।

हाल हाम्रो नेपालमा चलिरहेको वज्रयानी, मन्त्रयानी एवं महायानी पूजाआजा कर्मकाण्डहरुको एक मात्र उद्देश्य सम्यक सम्बोधि अर्थात् बुद्ध बोधिकै लागि हो भन्ने स्पष्ट पार्न प्रणिधि बोधिचित्त, सम्यक सम्बोधि, सप्तविधानोत्तर पूजा आदि लेख रचना गर्नुभएको प्रतीत हुन्छ । समस्त प्राणीहरु चाहे किरा फटेंग्रा होस् वा ठूलो जात र सानो जातका मानिस नै किन नहोस्, सम्पूर्णको उद्धार गर्न नै बुद्ध हुन सकूं भन्ने फराकिलो लक्ष्यलाई बारम्बार प्रार्थना गर्ने, बुद्ध, धर्म, संघको अगाडि त्रिस्कन्ध (शरणागमन, पुण्यानुमोदन, पापदेशना) गरी अन्तस्करण शुद्ध गर्ने वज्रयानीहरुले समस्त प्राणीहरुलाई समचित्तले, समभावले उद्धार गर्नुपर्ने कुरा उहाँको सबैजसो लेखको मुख्य धेय रहिआएको देखिन्छ ।

"शून्यता" भन्ने लेखमा महायानीहरुको श्रद्धेय ग्रन्थ अष्टसाहस्रिका प्रज्ञापारमिता अनुसार महायानी विपश्यना (शून्यता भावना) द्वारा हरेक वस्तुलाई परतन्त्र, परिकल्पित, परिनिष्पन्न स्वभावको बुझी वस्तुप्रतिको आसक्ति छोड्ने र ग्राह्य ग्राहक (म मेरो भन्ने अहंकार ममकार) छोड्ने तरीका व्यक्त गरिएको पाइन्छ । "प्रज्ञापारमिता ज्ञान मद्वयं सा तथागत" भन्ने उद्धरणद्वारा अत्यन्त श्रद्धापूर्वक प्रज्ञापारमिता पाठ गर्ने गराउने हामी बौद्धहरुले शून्यता भावनाद्वारा सम्पूर्ण वस्तुमा अनासक्त हुन सिक्नुपर्छ भन्ने सन्देश दिएको छ ।

शुद्ध अशुद्ध, सानो ठूलो, तल्लो माथिल्लो आदि आपेक्षिक वस्तुको कारणले द्वय मानिएका काल्पनिक एवं व्यावहारिक कुरामा न अल्भुन् तथा काल्पनिक र आपेक्षिक वस्तुहरु सबै शून्य हुन्, निस्वभाव हुन् भन्ने कुरा बुझी प्रज्ञापारमिता नै अद्वय ज्ञान हो । अद्वय भन्नु र तथागत भन्नु एउटै हो भन्ने कुरा स्पष्ट पारेको छ ।

महायानीहरुले बुद्ध बोधि लाभ गर्न अभ्यास गरिने विपश्यना शून्यता भावना (प्रज्ञापारमिता) हो भने श्रावकहरुले अर्हत्व प्राप्त गर्न अभ्यास गरिने विपश्यना अनित्य, दु:ख, अनात्म भावना हो भन्ने कुरा महासांघिकहरु महायानी होइन" भन्ने लेखमा व्यक्त गरिएको पाइन्छ । त्यस्तै वज्रयानीहरुले बुद्ध बोधि लाभ गर्न अभ्यास गरिने भावना असाधारण सुख भावना हो भन्ने कुरा "वज्र महायान वज्रयान" भन्ने लेखमा नामसङ्गीतिको अमृत कणिका द्योत नामको टीकाको उद्धरणबाट व्यक्त गरिएको छ -

सुखं नीलं, सुखपीतं सुखं सर्वचराचरम् ।
सुख भाव सुखाभाव वज्रसत्व परं सुखम् ॥

अर्थात् नीलो पनि सुख, पहेंलो पनि सुख, भाव पनि सुख, अभाव पनि सुख, वज्रसत्व भने परं सुख हो ।

यी उपर्युक्त विपश्यनाहरुको आधारमा श्रावकयान, महायान र वज्रयानका तीनवटै बौद्ध दर्शनका शास्त्रीय आधारहरु ज्ञात हुन्छ भने श्रावकयान Negative Thinking विपश्यना पद्धति अर्थात् अनित्य, दु:ख, अनात्म भन्ने वैराग्यको अभ्यास गराई अर्हत्व लाभ गराउने मार्ग, माध्यमिकवादी महायानी विपश्यना मध्यम मार्ग राग (सुख) पनि होइन, वैराग्य (अनित्य, दु:ख) पनि होइन, सम्पूर्ण पदार्थ परतन्त्र, परिकल्पित, परिनिष्पन्न स्वभावका हुन्, आपेक्षिक हुन्, काल्पनिक हुन्, साँच्चै भएको होइन भनी अहंकार ममकार भावलाई त्याग्न लगाई अनासक्त बनाउने मार्ग, तदनन्तर यसरी विनित भएको मनुष्यलाई वज्रयानको असाधारण सुख भावना अर्थात् सुख, महासुख, आनन्द, परमानन्द, वीरमानन्द, सहजानन्दको क्रमश: भावना गर्ने विपश्यना (Positive Thinking) ले यो सम्पूर्ण विश्वलाई सुख र सन्तुष्टीले हेर्न सिकाएको बुझिन्छ ।

यसरी बौद्ध दर्शनमा चल्दै आएका तीनै प्रकारका विपश्यनालाई केलाएर हेर्दा महायानी र वज्रयानीले भावना गर्दै आएका सुख भावनाले सुख विना सिद्धि हुँदैन, सिद्धि विना लोकोपकार गर्न सकिँदैन भन्ने रहस्य स्पष्ट पारेको छ । "सुखेन साधयेत् बोधिम्" भन्ने उद्धरण र सुखितस्य चित्तं समाधियते भन्ने उक्तिले पनि वज्रयानमा विश्वास गर्ने व्यक्तिले आफ्नो मन मस्तिष्क सधैं प्रसन्न, सुखी र सन्तुष्ट पार्न सके चित्त समाधिमा लाग्छ भन्ने कुरा स्पष्ट पारेको छ । सुखपूर्वक थालेका कामले नै सिद्धि प्राप्त हुने कुरा धर्ममा मात्र होइन, व्यवहारमा पनि त्यत्तिकै सत्य साबित हुन्छ ।

वज्रयानी बौद्धहरुले यसरी सुखको भावना गर्ने हुनाले नै वुद्धका परिनिर्वाण अवस्थाको मूर्ति र छ वर्षसम्म कठोर तपस्या गरी सुकेको हाडैहाड मात्र भएको मूर्ति नेपालका कुनै देवस्थलहरुमा नपाइनुको मुख्य कारण हुनसक्छ । यस्ता वैराग्य उत्पन्न हुने मूर्तिहरु नेपालमा कहीं पनि भेटिंदैन किन होला भनी अन्वेपकहरु र विद्वत वर्गमाझ धेरै छलफल भएको सुनिन्छ । तर यसको कारण आज आएर हाम्रा वुवाका वज्रयान सम्वन्धी लेखले हाम्रो देशमा Negative Thinking होइन, Positive Thinking को भावना (अभ्यास) चल्दै आइरहेको रहेछ भन्ने अवगत हुन आएको छ ।

वस्तुत हिजो आजका मनोवैज्ञानिकहरुले दुःखमय संसारवाट निराश र उद्वेलित (Depressed) भएकाहरुलाई दुःख सागरवाट माथि ल्याई मानसिक उपचार गर्न जुन Think Positive भन्ने सल्लाह दिइन्छ, अभ्यास गराइन्छ, त्यो अभ्यास त आजभन्दा २००० वर्ष अगाडि नै बौद्ध दार्शनिकहरुले प्रचुर मात्रामा प्रयोग गरिसकेका रहेछन् भन्ने तथ्य केवल हाम्रा वाको लेखवाट मात्र व्यक्त हुन आएको छ । गुरु परम्पराको अभावले तथा शास्त्र नवुझ्नाले यस्ता महत्वपूर्ण बौद्ध विपश्यना पद्धतिहरु विलुप्त हुंदैछन् । यस्ता विलुप्त भइसकेका महायानी एवं वज्रयानी भावनालाई फेरि एकपल्ट जनमानसमा फैलाओस् भन्ने उहाँको आकांक्षा पनि यी लेख रचनाबाट झल्किन्छ । यति मात्र होइन, सम्पूर्ण बौद्ध धर्मावलम्वी नेपालीको लक्ष्य वुद्ध वोधि नै हुनुपर्छ भन्ने कुरामा पनि अत्यन्त जोड दिइएको महसुश हुन्छ ।

तर अफसोच वज्रयान सम्प्रदायमा आस्था राख्ने हामी वज्राचार्यहरुलाई शून्यता भावना विधि पटक्कै मन पर्दैन भने पनि अत्युक्ति नहोला । कारण हाम्रो बौद्ध पूजाआजामा अत्यन्त महत्व दिई प्रयोगमा ल्याइराखेको गुरुमण्डल समाधिमा उल्लेख भएको "स्वभाव शुद्धाः सर्वधर्माः स्वभाव शुद्धोऽहं शून्यताज्ञान स्वभावात्मकोऽहम्" भन्ने वाक्य पढी पूजाआजामा वारम्वार अधिष्ठान गर्दै आए पनि तदनुरुप आचरण गरेको पाइँदैन । यसरी पाइला पाइलामा वज्राचार्यहरुले सवै वस्तुहरु स्वभावैले शुद्ध छन्, म पनि स्वभावैले शुद्ध छु, म शून्यता वज्र स्वभावको हुं, म कसैले अशुद्ध गर्न नसकिने, छेदन भेदन गर्न नसकिने वज्र जस्तो हुं भनी आफूलाई अधिष्ठान गरे पनि तथा प्रज्ञापारमिता (शून्यता भावना) पाठ गरेर आयु आरोग्य कामना गर्दै आइरहेता पनि हाम्रा वज्रयानीहरु जात भातका कुरामा अल्झिरहेकै देखिन्छ । जुठो (अशुद्ध) भयो, छुवाछुट भयो भनी उत्तेजित हुनु "वुद्धो भवेयम् जगतो हिताय" भन्ने लक्ष्य लिएका बौद्धहरुलाई शोभनीय हुँदैन भन्ने देखाउन "मन्त्रयान" भन्ने लेखमा जनसमाजले अपमानित तल्लो जातका अछुटहरु पनि यो जन्ममै वुद्ध होउन् भनी मन्त्रयानमा प्रवेश गरी आचरण शुद्ध गरिदिने मन्त्रयानीहरुको विचारलाई कालचक्रको टीका विमलप्रभावाट उहाँले यसरी उद्धरण गरेको छ -

चाण्डाल वेणुकाराद्या: पञ्चानन्तर्य कारिण: ।
जन्मनीह वुद्धास्यु मन्त्रचर्या नुचारिण: ॥

शायद शून्यता भावनाको उद्देश्य न बुझेर नै वज्रयानीहरूले यी विपश्यना अनुसार आचरण गर्न नसकेको हुनुपर्छ । शून्यताको उद्देश्य र उपयोगिता बुझाउँदै महायानीहरुले बौद्धहरुलाई जसरी सांसारिक वस्तुप्रतिको आसक्ति छोड्ने उपदेश दिन्छ, ठीक त्यस्तै कृष्णले पनि आफ्ना भक्तहरुलाई सिद्धि असिद्धि (लाभ, अलाभ) को सङ्ग (आसक्ति) छोड्ने उपदेश दिन्छ भन्ने कुरा व्यक्त गर्न "गीताको महायानी व्याख्या" भन्ने लेख प्रस्तुत गरेको बुझिन्छ ।

समता, निस्वभावता भावना गरी सांसारिक परिपञ्चबाट माथि उठ्नुपर्ने नित्य, अनित्य, शुद्ध, अशुद्ध आदि भाव छोडी अनासक्त हुनुपर्ने वज्रयानमा शुद्ध, अशुद्ध, पानी चल्ने, नचल्ने आदि जात भातका भेदभाव गरे भने "वुद्धो भवेयम् जगतो हिताय" र "सर्वप्रकारं जगतो हिताय" भन्ने लक्ष्य प्राप्ति हुँदैन । यो कुरा एकदम स्मरणीय छ ।

सद्कर्म गर्दा, वहुजन हित सुख हुने सद्कार्य गर्दा अरुले के भन्ला, के गर्ला आदि पनि विचार गर्नु हुँदैन, अरुले असल काम गरे वा गरेन भन्ने पनि मनमा लिनु हुँदैन । केवल आफूले पुण्यादि काम गरें कि गरिनं ? भन्ने कुरा मात्र निरन्तर स्मृतिपूर्वक प्रत्यवेक्षणा गरिरहनुपर्छ भन्ने भगवान वुद्धको उपदेश "आत्म निरीक्षण" भन्ने लेखमा व्यक्त गरिएको छ । तसर्थ पुण्य भनेकै वहुजन हित हुने कार्य गर्नु हो । वुद्ध धर्मको सार संक्षेप नै यही बहुजन हित गरी वुद्ध बोधि प्राप्त गर्नु हो । "वुद्धो भवेयम् जगतो हिताय"को मार्गलाई केन्द्रित गरी लेखिएका हाम्रा वुवाका यी लेख रचनाहरुको सङ्कलन पढी, अध्ययन गरी एकजना मात्र पनि लाभान्वित हुन सकेमा, ज्ञानी विवेकी हुन सकेमा हामीले आफूलाई अत्यन्त धन्य सम्झनेछौं ।

अन्तमा, यी लेखहरु संग्रह गर्न मद्दत गर्ने श्री चूर्ण बहादुर वज्राचार्य र टुटे फुटेका पंक्तिहरु मिलाउन पालि ग्रन्थहरु देखाई सहयोग गर्ने श्री दुण्डबहादुर वज्राचार्यलाई पनि धेरै साधुवाद छ । त्यस्तै यो लेख संग्रहमा मन्तव्य लेखिदिनुहुने श्री यज्ञमानपति वज्राचार्यलाई पनि धेरै धन्यवाद छ । साथै कम्प्युटर सेटिङ्ग गर्ने अच्युत रत्न वज्राचार्य, कभर डिजाईन गर्ने विरेन्द्र जोशी र सिष्टम्याटिक प्रिन्टिङ्ग प्रेसका श्री सुधीर हर्ष वज्राचार्यलाई पनि धेरै साधुवाद छ । त्यस्तै यो लेख संकलन प्रकाशनका लागि सहयोग गर्ने हाम्रा सम्पूर्ण परिवारलाई पनि साधुवाद छ ।

*अस्तु !* **संकलक**

मिति : २०६३ साल जेष्ठ

***पिता दिव्यवज्रको ८८ औं जन्मजयन्तीको उपलक्ष्यमा ।***

# जिगु श्रद्धा भाव

पंडित दिव्यवज्र वज्राचार्यजुनाप जिगु म्हसीका दुग्यंक मदु । वसपोलनाप जिग
दुग्यंक म्हसीइका जुइगु स्वाभाविक नं मखु । वसपोल छम्ह बौद्ध विद्वान, संस्कृतज्ञ
पालिभाषाया नं विज्ञ ख: । जि स्वया यक्को यक्को हे वयस्कम्ह ख: । जि जुल जा
जक वज्राचार्य । केवल वसपोलयात जिं म्हस्यू । वसपोलं जित म्हसिउला म्हमसिउल
धाये मफु । म्हसिउ सा नं फलानाम्हसिया फलानाम्ह जक । वस थुलि हे । उया अप्व
मखु । थनि छगू दशक न्हयो तक थ्व हे अवस्था ख: ।

जिं जा वसपोलयात म्हसिकागु दु । वसपोलया जीवनय् ला: वसपोलयात जि
म्हसिउसां वसपोलनाप खँतक हे ल्हाये मखं धा:सां जिउ । छायधा:सा वसपोलना
खँल्हाना जुइगु जिके योग्यता हे मदु । वसपोलयात न्हापा स्वया: वसपोलया जीव
लिपा यक्को म्हसिया वल ।

२०४५ साल चैत्र ११ कुन्हु प्रज्ञापारमिता गुरुवज्राचार्यपि करिब ८० जवानपि
लायकूवहीली पा:थ्याकागु जुल । वसपोलयात नं निमन्त्रणा यानागु ख: । अन जिग
सरकारी कार्यालयया सम्वन्धया कारणं प्रज्ञापारमिता पाठ श्रवणया हेतुं गन्यमान
मनूतयत नं निम्तो बियागु ख: । थ्व हे अवसरय् भाया दिउपिं लाएकूया बडाका
हंसमानसिंह, अवलय्या मूल पुरोहित रमेश प्रसाद पाण्डेजुपिनिगु जिज्ञासा
प्रज्ञापारमिताया अर्थ व उद्देश्य वसपोलं इमित ध्वाथुकेत निगू प्यंगू शव्दय् कनाविज्या
खँ आ: नं अमृतपान सरह जुयाच्वंगु दु ।

वि.सं.२०५३ सालय् लायकूवहिली ज्ञानमाला भजनया आयोजन जूगु ख:
अवलय् वसपोलयात प्रवचन बिइगुलिइ व्वना:गु ख: । जिगु व्वनाय् वसपोल प्रवच
बियेत बिज्यागु जित आ: नं लुमंका च्वना: ।

जनवहा: द्यो रथय् तया: दच्छि छक्व: जात्रा याइगु परम्परा दु । रथ
जनवहा:द्य: तइगु याय्या पिनेसं जवं खवं जनवहा:या जेष्ठ स्थवीरपिन्सं विशेष कथं
स्थवीरवस्त्र पुना: च्वाम्वलं गायेकेगु रथयात्राया संस्कृति दु । पं.दिव्यवज्र वज्राचार्यजु
कनकचैत्य महाविहारया स्थवीर जुया बिज्यागु दु । वसपोलं नं थथे रथय् च्वना
जनवहा:द्य:यात च्वाम्वलं गाका: रथ यात्रा यागु स्वये लं । लोटस रिसर्च सेन्टरय
तत्वावधानय् यलय् जूगु छगू कार्यक्रम क्वचायेका अनं लिहांवयावलय् अनया का
पियुपया छेंय् पुलचोकतक वसपोलनापं जि छगः हे टयाकसी च्वना: वये लंगु दु ।

पं.दिव्यवज्र वज्राचार्यजुया लिच्वःगु जीवन काल बौद्धशास्त्रया आधिकारिक ग्रन्थ नेपाल भाषाय् उल्था यायेगु ज्याय् आपाः छ्यगुला धैर्ये च्वं। लंकावतारसूत्र, आर्यगण्डव्यूह, गुह्समाजतन्त्र व अकिया टीका प्रदिपोद्योतन, दशभूमिकसूत्र, आर्यअष्टसाहस्रिका प्रज्ञापारमिता, आदि भराय भरायपंगु ग्रन्थ थितुंथिक वसपोल अनुवादयागु सफूत प्रकाशित जुजुं पिहांवःगु खनेदु। गुह्यसमाजतन्त्र विषयय् अनुदित सफू वसपोल दिवंगत जूइधुंका जक विमोचन जूगु खः। सफू विमोचन कार्यक्रमय् लोटस रिसर्च सेन्टरं सफूया विषयय् जित मन्तव्य विकूगु जिगु स्मरण दु।

भगवान बुद्ध ८० दँ म्वाना निर्वाण प्राप्त जूगु खः । जन्म जूगु तिथि खुनु हे निर्वाण प्राप्त जूगु खः । गुगु महिनाया गुगु पक्षया गुगु तिथि कुन्हु जन्म जूगु खः उगु हे महिनाया उगु हे पक्षया उगु हे तिथि कुन्हु निर्वाण जूगु जुल । थ्व खँयात बुद्धया जीवनी विषयय् न्ह्याम्हसियां लुमंका तइगु खः । पं. दिव्यवज्र वज्राचार्यजु नं ८० दँतक नश्वर शरीर ग्रहण याना विज्यागु खः । प्रतिवर्ष जेष्ठ कृष्ण अष्टमी वसपोलया जन्म वुदिं माने याइगु दिन खः । वि.सं. २०५६ साल जेष्ठ कृष्ण अष्टमी कुन्हु वसपोलया कॅंहे, म्ह्यायूपिं छ्यपिं कायपिं थःथिति स्याःन्ह्याःपिं सकलें वसपोलया जन्मदिन हनेत लय् लय् तायाः वसपोलया न्ह्योने मुवनेगु ज्याझ्वः जुयाच्वंगु दिन खः । अहो ! आश्चर्य । मुने माःपिं सकलें थः थितिपिं मासंगल्ली वसपोलया छेँय् मुंला वल । तर जन्म वुदिं हनेत मखया वन । वसपोलया पार्थिव शरीरयात सिथं यंकेत मुनेगु जुल । दुखापिखां तिकेत, छ्वासय् वायेत, पिख्वयेत आदि इत्यादि ज्याय् तालाकेत मुनेगु जुल ।

सिर्दीया साइवावायागु आयु व साइबावा च्वनीगु कुटीइ तयातःगु अप्पा छ्पालिसे स्वापू दु धाइगु न्यना। व अप्पा छन्हु छम्हसियां क्या यंकेत्यंबलय् थःगु ल्हातं त्वःफिना कुतुंवनाः तज्यात। थथे थन व अप्पा तज्यात मेथाय् लँय् वनाच्वंम्ह साइवावा आकाभ्फाकां अभितभि जुइक उसाया मन्त। वल्लतल्ल कुटीइ लिहांवल। साइवाबाया मृत्यु जुल। सिर्दीया साइवावाया विषयय् न्यनातयागु खँ थ्व जुल।

को जूगु व सिमा क्वदगु पाः छ्गू हे जूगु धाये फु। पं. दिव्यवज्र वज्राचार्यजुया विषय न्यनागु खँ– वसपोलं अत्यन्त स्नेहपूर्वक वसपोलया बगैंचाय् राजवृक्ष सिमा छ्मा प्यूगु जुयाच्वन। सिमाया हांगा बिंगा दया वन। तःभ्फाः नं जुल। सिमाप्वः नं तप्वः हे जुल। भरायमागु म्हासुक स्वां ह्वयाच्वनीगु सिमा अन वनिपिं सकसिया खँ।

व सिमा गथे जू गथे जू थथे अथे धाये फूगु सुनां मखु। वसपोल मदये निन्हु प्यन्हु न्ह्यः व सिमाः नं आकाभ्काकां क्वः दल। थ्व घटनां गनं वसपोलया जन्म मरण थ्व सिमालिसे स्वापू दुगुला मखु ला धैगु विचार यायेगु विषय जुल। छाय धाःसा व राजवृक्ष सीमा क्वदगु खनेसात वसपोलं थः मसतय्त आःजि स्वन्हु प्यन्हु अप्वः म्वाइ मखुत धकाः भविष्यवाणी याना विज्यागु जुल धकाः न्यने दु।

केहेंपिनी 'रतनदाई', भिन्चापिनि 'रत्नपाजु', किजापिनि व किजाभौमचातय् 'रत्नकाइदाई' अले ज्वलिंज्व पासाभाइपिनिगु लागि 'रत्नकाजी' आदि सम्वोधित जुयाच्वनिम्ह पं.दिव्यवज्र वज्राचार्य शान्त स्वभावम्ह, न्ह्यूख्वाः तया जुइम्ह, सुं शत्रु मदुम्ह, प्रवचन याइवलय् खं दक्वं धुक्क कथं धाइम्ह, थःम्हं सिउगु खंय् दृढ जूम्ह आदि वसपोलया सामान्य स्वभाव या अनुभव जिं याना:।

जिं वसपोलयात म्हस्यूगु खँ थुलि जुल। वसपोल छम्ह नामिम्ह पण्डित। देश देशावरय् विज्याय् धूंकुम्ह। वौद्ध दर्शनय् नेपाःया आधिकारिक व्यक्तित्व दुम्ह। वौद्ध मिमांसाया तःगु मछि पवित्रग्रन्थत नेपाल भाषां अनुवाद याना: थ्व क्षेत्रय् च्वपिन्त ध्वाथुइकेगु माध्यम दयेका व्यूम्ह व्यक्तिया रूपय् नं वसपोल न्ह्यों दनाच्वंगु दु।

अजाःम्ह व्यक्तिं थीथी अवसरय् च्वया विज्यागु लेख रचनात अखे थुखे लाना च्वंगु मुनाः पिकायेगु ज्या तच्वंत हे वांलागु ज्या जक मखु अति आवश्यक नं खः। जितः भूमिका च्वयेगु जिम्मा वसपोलया म्हयाय् मयजु श्रीमती सुमति वज्राचार्यजुं विया विज्यागु जुल। जितः वसपोल जिम्मा विइगु खं ल्हावलय् उथाय् जिं आना कानी यानागु खः। छाय्धाःसा वसपोल पं.दिव्यवज्र वज्राचार्य थें व्यक्तियागु रचनाय् जिं भूमिका च्वयेगु धैगु जिं यःत थमतुं योग्य मखना। धूया मचा धूं धैइ गथे खः अथे हे विद्वान पं.दिव्यवज्रया म्हयाय् विद्वत व्यक्तित्व दुम्ह श्रीमती सुमतिजुं भूमिका च्वयेगु विषयय् जित हानं नं धयाविज्यागु वचनयात सम्मान याना थ्व भूमिका च्वयेगु आंत यानागु खः।

सरसर्ति लेख रचनात स्वयेवलय् वि. सं २०४३ सालं निसें कया वसपोल मदयेगु साल तकंया लेखत दुथ्याःगु दु। गुगुं लेखत भाषणया रूपय् दु सा, गुगुं लेख सफूचा (Leaflets) या रूपय् प्रकाशन जुयाच्वंगु नं खनेदु। अप्रकाशित लेखत नं दुथ्याकातःगु दु। थ्व अप्रकाशिन लेखत नं दुगु कारणं लेख प्रकाशन याये लागि अनुरोधय् जक लेख च्वयेगु बानी मखुसें वसपोलया नुगलय् खं वयेवं कलम न्ह्याकेगु

वसपोलया वानी खः धैगु सिइदु। लेखत नेपाल भाषाय् च्वयातःगु दु। अय् धकाः नेपाली भाषा पाखें वसपोलया ल्हाः मवं धैगु मदु। नेपाली भाषां च्वयातःगु लेख नं यक्कों थ्व सफुतिइ दुथ्याःगु खनेदु।

लेखत दक्को हे बौद्ध दर्शनया हे विषय खः। अकिस नं वज्रयान व वज्रयानया विविध पक्षय् दुग्यंक विश्लेपण सहित व्याख्यात्मक लेखत दु। वज्रयान धैगु छु धैगु खं निसें कयाः वज्रयान थुइकेगु, थुइकें विइगुया आधिकारिक चरण वद्धया खं, वज्रयानीपिन्सं पालन यायेमाःगु खं ग्व सिद्धि प्राप्त यायेगु खं तकं व्याप्त जुयाच्वंगु दु। नापं वज्रयानया दुने विशेष याना नेवाः बौद्ध संस्कृतिया मूल्य मूल्यगु अंग मध्ययया नांजाःगु वज्रयोगिनी व गणछीया विषय नं लेख दुथ्याकातःगु दु।

'पासा मुना यायेमाःगु ज्या' व 'छुं योजना दयेकेबलय् विचाः यायेमाःगु खं' थ्व निगू लेख नेपालय् बौद्ध दर्शनया अवस्था बांलाकेत सुधालाकेत मयासे मगाःगु खं न्हयथनातःगु दु । वसपोलं नेपालय् वज्रयानया अवस्था स्यस्यं वनाच्वंगु अवस्थाया लिधंसाय् याकनं मयासे मगाःगु व दीर्घकालीन ज्यात थन चित्रण यानातःगु दु । थकिइ 'सर्व प्रकारं जगतो' धैगु महायानया मू उद्देश्य खंयात वसपोलया समाज सेवा यायेगु भावनाय् ओतप्रोत जूगु आभास नं थन गाक्कं खनेदु ।

लेखय् प्रमाणया लागि गुह्यसमाजतन्त्र, हेवज्रतन्त्र, कालचक्रतन्त्र, नामसंगीति, सद्धर्मपुण्डरीक वैपुल्य सूत्र, लंकावतार सूत्र, चण्डमहारोषणतन्त्र आदि यक्कों यक्कों आधिकारिक ग्रन्थया लिधंसा कयातःगु दु। उद्धरण जूगु पंक्तिया अनुवाद तकं बिया व्वमिपिंत ध्वाथुइकेगु ज्या जुयाच्वंगु दु। थीथी थासय् छगू छगू ग्रन्थया मू मूगु खं उद्धरण सहित वियातःगुलिं उद्धरण यायेत कयातःगु ग्रन्थया संक्षेप खं व्वपिन्सं लाभ काये फु। थुपिं सफूया धलः दयेका स्वतः धाःसा बौद्ध दर्शनया छगू गेसुलाःगु विवरणया रूपय् न्ह्यदना वइगु खनेदु।

थौंकन्हयुयापिन्त वज्रयानया यक्कों शब्दत प्राविधिक कथंया स्वभाव जूगु ताइ जुइ। अजाःगु थुइकेत थाकुगु शब्दया लेखया सिलसिलाय् साधारण जनमानसं थुइके अपुइगु कथं अर्थतकं वियेगु वसपोलया लेखय् खनेदुगु विशेषता खः। मन्त्रनय, पारमितनय, पाराजिका, सम्यकसंम्बोधि, प्रत्येक बुद्ध, श्रावकयान, नेयार्थ, नितार्थ, उत्पतिक्रम, उत्पन्नक्रम, मदन पुष्पारोहण, वैपुल्य, वैतुल्य, कर्ममुद्रा, ज्ञानमुद्रा, मनवज्रमन्त्र, वाक्‌वज्रमन्त्र, कायवज्रमन्त्र वज्रयोग संप्रजन्य आदि इत्यादि यक्कों यक्को

खंग्व:या अर्थ लेख प्रस्तुत यायेगु ज्वलय् प्रष्ट यानात:गु दु। थ्व लेखमाला वज्रयान बौद्ध दर्शनया छगू शब्द संग्रह हे ख: ला धैथें नाला कायेे योग्य जू।

वज्रयानया अनुयायिपिन्सं पशुपति नं भक्तिभाव पूजा अर्चना या: वं, गणेद्य: नं पूजाया, बुद्धानिलकण्ठ विष्णुया थाय् नं वं, स्वयम्भू गुहेश्वरी नं वं आदि इत्यादि खं चर्चाया विषय ख: । भिन्द्य:, भैरव, अष्टमातृका, महाद्य: आदियात नं नेपा:या वज्रयानीपिन्सं पूजा थौं तकं याना वयाच्वंगु दु। थकियात मनूतय्सं नेपालय् धर्मया सहिष्णुता दुगु खं याउंक न्ह्यथना कायेगु याना वयाच्वंगु दु। तर वज्रयानया सिद्धान्त हे शून्यता व समता भाव ख: । शून्यता तत्व व समता भावया दुने 'व छंगु थ्व जिगु' धैगु हे दइ मखु।

अकिं वज्रयानया अनुयायिपिन्सं गुगुं धर्मयात आलोचना हेला आदि याये मज्यू। ख: थ्व विषयय् 'वज्रयान' धैगु लेखय् उद्धरण यानात:गु कालचक्रतन्त्रया टीका विमलप्रभाय् च्वंगु श्लोक मनन् याये योग्य जू। व थथे –

'येन येन हि भावेन मन: संयुज्यते नृणाम्।
तेन तन्मयता याति विश्वरुपो मणि यथा।

अर्थात् जुन जुन भावले मानिसको मन (आलय विज्ञान) मा लगाइन्छ त्यसद्वारा त्यो मन तन्मय हुन्छ। जसरी मणि (ऐना) को सामुन्ने जे जे पर्छ, त्यो ऐनामा त्यही त्यही रूप देखिने हुन्छ र विश्वरूपको निर्माण हुन्छ। यही सिद्धान्त अनुसार यो मनमा

(आलय विज्ञान) बुद्ध, राम, कृष्ण, आदि नाना प्रकारका देव देवताहरु प्रकट हुन्छ। यसरी मन्त्रयानमा यही उपर्युक्त सिद्धान्तको आधारमा विभिन्न देवदेवीहरुको मूर्ति तथा मन्त्रहरूको उत्पति भए'

लेखया छगू थासय् थथे च्वयात:गु 'जुन सुकै धर्मका कुरालाई पनि वज्रयानमा विलिन गरी वज्रयानको सिद्धान्त र विचारमा आकर्षण गरी वास्तविकतामा पुऱ्याउने लक्ष वज्रयानले राखेको देखिन्छ' नं च्वय् न्ह्यथनागु समता भाव लिसे पायछि खनेदु । वज्रयानया निम्तिं सुरतवज्रया चचा एमहीमण्डलया –'सर्व विषय एकु अनेका' अर्थात् फुक्कं विषयया स्रोत छगू हे ख:, व हे छगू विषयं दक्को दयावइगु ख: धइगु शून्यताया भाव सर्वोपरी ख:।

तर बुद्ध व गणेद्य: छम्ह हे ख: धायेगु धा:सा ठिक मजू। 'बुद्ध र गणेश एकै हो भन्नु, महान मोह हो' धैगु छपू व्यागलं लेख थ्व सफुलि दुथ्याकात:गु दु। बुद्धया च्वय् सुं नाय मदु। थ्व कारणं बुद्धयात विना नायक विनायक धा:गु ख:। गणेद्य:यात नं विनायक धाइ। गणेद्य:या नं च्वय् सुं दइमखु। अकिं मरु गणेद्ययात गजू स्वीकार्य मजूगु ख:। मरुगणेद्यया देगलय् गजू तयात:गु मदु। बुद्ध संघ गणया दकले च्वय् च्वंम्ह नायक ख:। अकिं गण नायक गणेश धा:गु ख:। थ्व आधारय् बुद्ध व गणेश छम्ह हे ख: धायेगु पायछि जुइ मखु। बुद्ध धर्मराज ख:। गणेद्य: विघ्नराज ख:। गणेद्य: छगू धार्मिक आस्था ख:। गौत्तम बुद्ध ऐतिहासिक व्यक्ति ख: धका: थन धयाच्वनिगु आवश्यकता मदुगु खं नं लुमंके वह: जू।

धर्मया नामय् विकृति पिकया हइगु खं मेगु हे जुल । धर्मय् अये विकृतिया ग्रहण मजूसा 'स्वभाव शुद्धा सर्वधर्मा....' अर्थात् धर्म दक्को स्वभावं हे शुद्ध पवित्र ख: धका: मू आजु ज्वना: न्ह्यावना च्वनीपिं वज्रयानीया मिखाय् फुक्क धर्म छगू हे खना च्वनिगु सामान्यया खं जुल । वज्रयानया डालाय् थ्व धर्म न्ह्यं व धर्म मन्ह्यं धैगु मदयेक दक्कों धर्म न्ह्यं । २०६३ साल जेष्ठ ४ गते कुन्हु प्रतिनिधिसभां नेपा: देयात धर्मनिरपेक्ष देश घोषणा यागु खं वज्रयानया आधारभूत खंनाप पायछी जूगु वज्रयानी अनुयाइपिन्सं ताइगु नं स्वाभाविक हे जुल ।

विमलप्रभा धैगु सफू कालचक्रतन्त्रया टीका ख:। थ्व आ: थौंकन्हय् च्वयात:गु सफू मखु, सलंस दं पुलांगु सफू ख:। थकिइ वज्राचार्यपिन्सं लिपा गजा गजा:गु मखुगु ज्या याइ धका: भवियष्यवानी यानात:गु खं 'वज्रयान' धैगु लेखय् न्ह्यथनात:गु खं आ: पापिं वज्राचार्यपिन्सं आत्मपरिक्षण यायेत थन नं न्हयथने वह: जू। विमलप्रभा प्रकाशित सफूया पृ.५१ स च्वयात:गु अंश थथे–

'इहार्यविषयेऽनागतेऽध्वनि वज्राचार्या द्रव्यलुण्ठका भविष्यन्तिह द्रव्यार्थं द्रव्याभिमानिनामीश्चराणां गृहं गत्वा धर्मविकयं करिष्यन्तिह अभव्यानां द्रव्यलोभेन लोकोत्तराभिषेकं दास्यन्तिह राजादीनां प्राक् किङ्करा: पश्चाद् गुरवो भविष्यन्तिह अन्येषां द्रव्यहीनानां भव्यचित्तानामपि दशाकुशलकर्मपथपरित्यक्तानां लोकोत्तराभिषेकं न दास्यन्तिह तेषां क्लेशमुत्पादयिष्यन्तिह द्रव्यवशाद् वज्रपदं दुष्टसत्वेभ्य: प्रकाशयिष्यन्ति अन्येऽपि वज्रपदमज्ञायमाना: परस्परं विवादं करिष्यन्ति: पण्डितभिमानेन तन्त्रार्यमजानन्तोऽपि तन्त्रटीकां करिष्यन्तिह मारकायिका: सत्वानां गुरवो भूत्वा वज्रपदं विपरीतं देशयिष्यन्ति; बुद्धज्ञानं द्वीन्द्रियजं सुखं बालमतीनां प्रकाशयिष्यन्ति'

थकिया अनुवादित अंश–

'भविष्यमा वज्राचार्यहरूले द्रव्य संग्रह गर्ने हुन्छ। धनीका घर घरमा गएर धर्म विक्रि गर्ने गर्छन्। धर्ममा श्रद्धा नहुनेलाई पनि लोकोत्तराभिषेक दिने हुन्छन्। श्रद्धा हुनेलाई भने अभिषेक नदिने हुन्छन्। धनको लोभले वज्रपद(सर्वज्ञ ज्ञान) दुष्टहरुलाई प्रकाश गर्ने हुन्छन्। तर वज्रपदको वास्तविक अर्थ नबुझी परस्परामा विवाद गर्ने हुन्छन्। तन्त्रको भाव नबुझनेले तन्त्रको टीका बनाई बुद्धज्ञान द्वीन्द्रियज सुख हो भनी बालजनहरू समक्ष प्रकाश गर्ने हुन्छन।'

थथे उपर्युक्त खँ धर्मया विकृति आः जक मखु , करिव करिव झिंनिसं दं न्हापा हे नं धर्मया विकृति वयेधुंकूगु खँ सिइदु।

वज्रयान धैगु पारमितायान व मन्त्रयानया सम्मिश्रण खः। थ्वयात अंकगणितीय आधारय् व्याख्या याये जिउ। गथेकि छगू सूत्र–

वज्रयान = पारमितायान + मन्त्रयान जुल ।

अकिं, वज्रयान - मन्त्रयान = पारमितायान जुल ।

अथे हे, मन्त्रयान = वज्रयान - पारमितायान ।

मन्त्रयान भनेको के हो धैगु लेखय् मन्त्रयान धैगु खँ अपुइक थुइकेत थथे गणितीयसूत्रया आधार कयातःगु नं उल्लेख याये बहः जूगु विशेषता खः ।

थम्हं मस्यूगु खँयात थथे अथे धकाः खःगु मखुगुं खँ धया आडम्बरपना क्यनिगु वसपोलया बानी मदु । 'वज्रयान थुइकेगु नियम' धैगु लेखय् 'थौं तक्क छगू निगू उद्धरण वियातःगु बाहेक सौतान्त्रिक तयगु ग्रन्थ जिं मखनानि' धकाः प्रष्ट रूपं वसपोलं धयाविज्यागु दु । गौत्तम बुद्ध जन्म जूगु वर्ष थवलय् हे जूगु खँ क्वःमजिनिगु, वसपोलया गृह त्याग वसपोलया काय राहुल दयेधुंका जूगु धयातःसां, पञ्चरक्षा थें जाःगु पुलांगु ग्रन्थय् राहुल प्वाथय् दुबले जूगु च्वयातःगु खँ, गौत्तम बुइत्यंबलय् वसपोलया मां मायादेवी ज्वंगु सिमा अशोक वृक्ष खः अथवा सालवृक्ष खः आदि मसिनगु मसिनगु खँ तकं अनुसन्धान याना क्वजिके माःगु खँ च्वयातःगु दु । 'तत्वज्ञानसंसिद्धि' प्रणेता शून्यता समाधिवज्र पाद सु खः गनयाम्ह खः गबलय्याम्ह खः धैगु वज्रयोगिनी नांगु लेखय् अनुसन्धानयाये मानिगु पंक्तिइ तया ब्यूगु दु । शून्यता समाधिवज्रपादया विषयय् आःतक खनेदुगु खँ क्वय् च्वयागु दु ।

शून्यता समाधिवज्र पादया विषय आःतक खनेदुगु संक्षिप्त खँ थन थये खः-

जन्म :

नेपालय् जूगु खः। वसपोलया नां न्हापाःगु दिवाकरचन्द्र खः । दीक्षित जुइ धुका शून्य समाधिवज्र पाद जूगु खः । ८ वर्षया अवस्थाय् वसपोलया इहिपा वसपोलया अबूजु यानाबिल । अबूजुयाके बिनति याना भारतय् वना अध्ययन याः वन ।

सन् १३९२–१४८१ पर्यायाम्ह तिब्बेटन गोस लोचावा धैम्हं च्वयातःगु ऐतिहासिक विवरण Blue Annals स शून्यता समाधिवज्र पाद नेपालय् यंगाल यमगाल वहालय् च्वंम्ह धकाः च्वयातःगु दु । "Devakaracandra, Whose Secret name was Suyatasamdhivajra. This acarya belonged to the nobility of the great city of Ya-'gal(Yam-'gal, name of a Vihra in Nepal ) ......"[1] यंगाल धैगु आः नं धस्वानाच्वंगु दु । तर थ्व यमवहाल धैगु यंगाःया इलाकाय् गन जुइ गुगु वहाः जुइ थ्व लुइकेगु उत्सुकता जुइगु स्वाभाविक खः । न्हापा न्हापा यमबहाः धैगु वहाः दु जुइ आः न्हना वनेधूकुगु नं जुइ फु । अथवा यमवहाः धैगु समय् ह्यूपा अपभ्रंश जुया मेमेगु नां जुया वनेधूंकुगु नं खयेफु । यथेष्ट प्रमाणया अभावय् थये अथे धाये थाकु ।

अयनं थ्व खँया विषय विश्लेषण याना अनुसन्धान धाःसा यायेगु न्यू (बीज) धाःसा मदुगु मखु । शून्यता समाधिवज्र पादजुया दीक्षा कायेन्ह्यया प्रारम्भिक ना 'दिवाकरचन्द्र' धयातःगु दु । थ्व 'दिवाकरचन्द्र' नां अवश्य नं वज्रयाननाप स्वापू दुगु पतीं मखु । वसपोलया आजुपिं वज्रयानीत मखुसे गैर वज्रयानी धकाः सिइके अपु । अर्थात् वसपोल गैर वज्रयानी समाजं वज्रयानी समाजय् वःगु समूहयापिं धकाः सिइके जिल । न्हापा न्हापा थजाःगु व्यवहार नं दु । गथेकि यलय् यशोधरा महाविहार (बूवहाः) नं ब्रम्हुतलिसे स्वापू दुगु विहार धाइ । येँया ओमवहाः नं ब्रम्हुतयगु विहार धाइ । ओमवहाःया वज्राचार्यपिनिगु आजु ब्रम्हु हे नालावयाच्वंगु दु । वसपोलपिनि देगु द्यः आतकं नारायणद्यःयात नाला वःगु खनेदु ।

कोहितिया नांजाम्ह स्वर्गीय धर्मानन्दपिनि खलपिन्सं यलया विष्टछापया विशंखु नारायणद्यःयात देगु द्यः मानेयाना वयाच्वंगु धकाः न्यने दु । ओमवहाया गुरुजुपिनि देगुद्यःया रूपय् चिकंमुगलय् अटकोनारायण धकाःअलग निस्वनातःगु दु । स्वयम्भूया लिउने होलच्वय् (हलचोक) च्वंगु इचंगु नाराद्यःयात नं ओमबहाया गुरुजुपिनि देगुद्यःया रूपय् कयातःगु जुयाच्वन ।

Blue Annals स च्वयात:गु यमबहा: धैगु व ओंमबहा: धैगु गनं छगू हे ला मखुला धैगु धायेत च्वयुखंतया लिधंसाय् थन छिना: व:गु खनेदु। ओंमबहा:यात हे यमवहा: धका: Blue Annals च्व:गु जुइगु यको संभावना दु। नेवा:तयुगु खंग्व: विदेशीतयुगु म्हुतुं नवायेवलय् ओंबहा:यात यमबहा: धायेगु या:गु खंय् छुं अजुगति चायेमा:गु खं मखु।

शून्यता समाधिवज्रपाद अर्थात् दिवाकरचन्द्रजु वज्रयानीया दीक्षाका:गु ख:सां वसपोलया पूर्वसंस्कार वैष्णवी (हिन्दूधर्म) धर्मया अनुयायी ख: धैगु वसपोलया न्हापांगु नांया स्वभावं हे सिइदुगु खं च्वय् उल्लेख यानागु दु। वसपोलं च्वयात:गु सफू तत्वज्ञासंसिद्धि यद्यपि वज्रयानीया आधिकारिक ग्रन्थ ख:। व सफुलिइ वज्रयानलिसे स्वापू हे मदुगु 'हरिहरहिरण्यगर्भ' थेंजा:गु खंग्व:त तया सफूयात छायेपिकात:गु दु। थ्व 'हरिहरहिरण्यगर्भ' खंग्व:लं नं वसपोलया पितापुर्खा ब्रम्हुत ख:। वसपोलपिं येंया आधिकारिक भिंच्यागू विहारया धलख:य् जानाच्वंगु ओंबहा: निर्माणकर्तात धका:सिइदु। शून्यसमाधिपाद, वसपोल ओं वहा:या वज्राचार्य ख: धैगु थन सिइकेत अपुल।

**अध्ययन अध्यापन :**

भारतया विक्रमशील महाविहारनाप लीलावज्रया इंलं निसें स्वापू दुगु ख:। वहे विक्रमशील महाविहार आदि थासय् शून्यता समाधिवज्र पादजु अध्ययन अध्यापन यायेधूंकुम्ह ख:।

**गुरु :**

अन (भारतय) नेपाली हे रत्नश्री धैम्ह गुरुयाके सम्पुटतन्त्र व हेवज्रतन्त्र सयेका काल। व्याकरण व तर्कशास्त्र नं अध्ययन यागु जुयाच्वन। २० दंया अवस्थाय् नेपा: वल। अवधुतिपाद, मैत्रीपाद, पैंण्डपातिक, अद्वयवज्र[2] आदि नाम्हं नांदंम्ह विद्वान नेपालय् वयाच्वंगु धका: सिइका वसपोल च्वनाच्वंगु थासय् नापलाना अभिषेक काल। अनं वसपोलयागु नां शून्यता समाधिवज्र पाद जुल। वसपोलं वामदहिन धैगु वसपोलं चिनात:गु चचाय् थ:गु नां वाकवज्र शून्य समाधि धका: न्ह्यथनात:गु दु।

**ई.व्य. :**

थ्व कथं शून्यसमाधिपाद अद्वयवज्रया समकालीन खनेदत। अद्वयवज्रया ई.व्य. ई ९७८-1030 तक क्यनात:गु दु।[3] वसपोल भारतया नेयपालया पर्याय क्यनात:गु

दु। देवाकरचन्द्र प्रसिद्ध अमोघवज्रया समकालीन धका: नं क्यनात:गु दु.[१]

**कृति :**

क.तत्वज्ञानसंसिद्धि नेपालय् आ:तकं व्यवहारयतकं न्हिया न्हिथं वमपोलया नांजा:गु तत्वज्ञानसंसिद्धि ख:। सिन्ह छायबलय् व्वनिगु क्वय्‌या वाक्य थ्व हे सफुतिइं कयात:गु ख: ।

उद्याता तलचक्रतोऽनिलधुता विद्युच्छटाभास्वरा
दग्धारित्रितया त्रिलोकमहिता पीयुषधारप्लुता ।
वुद्धज्ञानरसाविला विकलुषा सानन्दसन्दोहदा
भावाभावविचारणाविरहिता वाराहिका पातु व: ॥

मन्त्रोद्धार यायेगु श्लोक, तरिका व यन्त्र तकं व्याख्या यानात:गु जुयाच्वन। थ्व सफू न्हापा नं थुलि प्रख्यात जुयावंगु खने दुकि थ्व सफूया नां हे च्वम्हसियागु नामं अर्थात् शून्यसमाधि(शून्यतासमाधि) तकं जुल। (धी:४ पृ.२३) थ्व सफू तन्ज्युरय् ( तो.१५५१) स लगतय् तयात:गु दु।

**तत्वज्ञानसंसिद्धिया टीका निगू खनेदु । इपिं थथे ख:–**

१. चतुर्थ विश्ववौद्ध सम्मेलनया उपलक्षय् धर्मोदय सभां पिका:गु तत्वज्ञानसंसिद्धिया टीका भिक्षु श्रीज्ञान(ध्यान)चन्द्र विरचिता महासुख प्रकाशिका।

२. वाराणसी दुर्लभ वौद्ध ग्रन्थ शोध योजनां पिका:गु वीर्यश्रीमित्र प्रणीतया मर्मकलिका धैगु तत्वज्ञानसंसिद्धिया टीका।

**तत्वज्ञानसंसिद्धि वाहेक मेमेगु सफूत थथे खनेदु –**

ख. त्रैलोक्यवशंकयार्यभुग्मसाधन (तो ३४३६)
ग. नीलम्वरवज्रपाणिमण्डलविधिनाम (तो २८९९)
घ. सर्वदुर्गतिपरिशोधनतन्त्राद्‌धृतलोचनादुर्गतिशोधनविधि
ङ. नीलाम्वरवज्रपाणिसाधन (तो. २८८६)
च. श्रीहेरुकोपदेशना स्वाधिष्ठानकम -तो. १२६२)
छ. हेरुकोद्‌भवमण्डलविधि -तो.१२७०)

ज. ज्ञानावेशनाम -तो.१५५३।

झ. प्रज्ञाज्ञानप्रकाश -तो. २२२६। देवचन्द्र

ञ. कृष्णयमारिमुखपटचक्रसाधननाम(तो. २०१५) दिवाकरचन्द्र

**चर्यागीत :**

वसपोलं चिनात:गु 'वामदहिन' चर्यागीत नं उतिकं हे च्व:न्हया: । राग मार श्रीलय् हालेगु थ्व चचा विधिवत् सहभोजन याइबलय् छ्यलेगु यानात:गु दु । थ्व चचाय् काय् वाक् व चित्त थ्व स्वतां उतिग्यंक शुद्ध यायेगु हे सहज स्वभाव ख: । आनन्दया थी थी त:गिलय् दकसिबे च्वय् च्वंगु सहजानन्दया अनुभव हे कायवाक व चित्तया शुद्धता ख: धैगु भाव थ्व चचाय् क्यनात:गु दु । व चयाया छगू चरण–

गयने मयने चित्त विलाशयिया २
काय वाक चित्त एक करिया ॥

बौद्ध दर्शन मुक्कं छगू हे ख: सां बुद्धया निर्वाण लिपा महायान व श्रावकयान धका: निकु दयावल । थ्व निकुलि वाकु द: दं वना निसं दया दुने बौद्ध दर्शन भिंच्याक् मसिनगु कुच्चा दल । थ्व भिंच्यागू कुच्चात मुना मुक्कं श्रावक, प्रत्येक व सम्यकसंम्बोधि धका: स्वंगू ध्व:लय् मुक्कात:गु जुल । थ्व ध्व:लय् नं छगू ध्व:लय् मेगु ध्व:या खं ल्वाकज्या मवइगु धैगु खं मदु । अयनं थ:थ:गु ध्वलय् थ:थ:गु खँयात प्राथमिकता वियातइगु सम्म जक ख: । नेपालय् गुगु पती ध्वलय् ला: धैगु खँ विषयय् कया सम्यकसम्वोधि धैगु लेख वियात:गु दु । गुरुमण्डलार्चन यायेगु नेपालय् सर्वव्यापक विधि ख: । उराय् वरे गुभाजु जक मखु ज्यापू, सायमी, स्यस्य:, पूं लगायत सम्पूर्ण बौद्ध धर्मालम्वीतय् धलं दनेगु थें जा:गु कर्मनिसें कया पितृकार्य, देवकार्य, व संस्कारकार्य तकं गुरुमण्डलार्चन याका पापदेशना, पुण्यानुमोदना याका 'सर्वप्रकारं जगतोहिताय' धका: प्रणीधान यायेगु याकेगु संस्कृति परम्परादु । थजा:गु दसि न्ह्यव्वया नेपालय् सम्यकसम्वोधियानया प्रभुता दुगु खं क्यनात:गु दु ।

'रोग लागेपछि ओखती मुलो गर्नु भन्दा रोग नै लाग्न नदिनु राम्रो हो' धैगु खं दु । अथे हे दु:ख भोगये यायेगु सोया दु:ख वइगुया कारणयात हे विचा यायेमा:गु खं बौद्ध दर्शनया निर्देश ख: । सुखी जीवन हने मास्तिवम्ह सित शरीर व चित्तया सन्तुलन अवश्यमा: । थ्व निगूया अवस्था गथे जुयाच्वन धका: वारम्वार थ: थम्हं निरीक्षण यानाच्वनेमा: । स्यनाच्वन धा:सा भिंकेमा: । स्मृतिसंप्रजन्य धैगु लेखय् च्वयात:गु थजा:गु खं न्ह्यागु संप्रदायया मनूतयत ज्या लगये जूगु खं ख: ।

प्रत्येकबुद्ध, बोधिसत्व, प्रज्ञोपाय, गौतमबुद्ध, वज्रयान आदि विषयय् व्वयला: च्वयात:गु प्रकाशित मजूनिगु लेखमालात नं थ्व सफुली दुगु न्वयेत्वलय् बमपोल पं.दिव्यवज्र वज्राचार्यजुया वज्रयानया विषयय् छगू पाठ्यक्रम हे तयार यायेगु मनमुवा दुगु ख:ला धैथें महसूस जुया वल । त्रिपिटक धैगु स्थवीरवादतय् जक दु धैगु न्यना । महायानीपिनि नं त्रिपिटक ग्रन्थ दु धैगु 'गौत्तम बुद्ध' लेखय् व्वने दत ।

वैरोचनादि पञ्चध्यानी बुद्ध, पृथ्वीधात्वादि पञ्चमहाभूत, गोकुदहनादि पञ्चामृत, सुविशुद्धधर्मधातु ज्ञानादि पञ्चज्ञान आदि इत्यादिया भावना वज्रयानय् सर्वत्र व्याप्त विषय ख: । अथे हे पुष्प धूप गन्ध रस: दिपादि नं पूजाया सामाग्री पञ्चोपचार पूजा धका: परम्परा जक मखु नेपा:या संस्कृति नं ख: । स्वयम्भूइ न्याद्व: व सच्छिक्व: पटक निरन्तर पञ्चोपचार पूजा यागु दु धैगु व्वनेदु । थन नं 'पञ्चोपचार पूजा' धैगु लेख दुथ्या:गु दु । लेखय् च्वयात:गु विधियात व्यवहारय् 'छसिकथं पूजा यायेगु विधि' अथवा 'मर्जातसे पूजा' धका: नेपालय् चलये जुयाच्वंगु पूला पूलांगु थीथी पूजाविधि सफुलिइ व्वनेदु । थ्व कथहनं पूजाविधि वज्राचार्यपिन्सं मृत्यु संस्कार श्राद्धादि कर्मयाके थासं निसें कया धलं दनेगु, दशकर्म, होमादि कर्म, द्य: या वस्तु पूजा आजाय् तकं मछ्यसे मगा:गु कथंया ख: । सकल गुरुवज्राचार्यपिके कण्ठस्थ जुयाच्वनीगु थ्व पूजाविधि वाक्यत ख: । थजा:गु महत्व दुगु प्रचलित जुयाच्वंगु पूजावाक्यया भावार्थ तकं वियात:गु लेख जजमानी ज्या याना जुइपिं वज्राचार्यपिन्त वाक्यया अर्थ थुइकेगुलिइ यक्कों ज्या वइ । फणीन्द्ररत्न वज्राचार्यलिसें जाना थ्व भूमिकाया च्वमिं 'बौद्ध दर्शनका पूजाका सिद्धान्त तथा व्यवहार' धैगु सफू वि.सं.२०५२ स पिकाये लंगु दु । व सफुलिइ जिमिसं थ्व हे कथहनं पूजाविधि वाक्य व अर्थ विइगु कुत: यानागु दु । पं.दिव्यवज्र वज्राचार्यजुयागु थ्व लेखय् पूजा वाक्यया अर्थ अझ प्रष्ट जूगु दु ।

पूजाविधिया अन्तिम च्व:लय् सछिग: आख: दुगु 'शत्ताक्षर' धका: वाक्य वियात:गु दु । न्हापा न्हापा छु द्य:यात पूजायात व हे द्य:या नामं शत्ताक्षर व्वनेगु वाक्य दुगु जुयाच्वन । हेरुकयात पूजा या:गु ख:सा हेरुकयागु हे शत्ताक्षर, वज्रवार ाहीयात पूजा या:गु ख:सा वज्रवाराहीया हे शत्ताक्षर वाक्य व्वनेगु दुगु जुयाच्वन ।

**आचार्य सरहपाद (ई.सं.६३३) विरचित हेवज्रमण्डल साधन विधिइ च्वयात:गु शत्ताक्षर थथे ख:-**

ओं वज्रहेरुक समयमनुपालय हेरुकत्वेनोपतिष्ठ
दृढो मे भव, सुतोष्यो मे भव, सुपोष्यो मे भव,
अनुरक्तो मे भव, सर्वसिद्धि मे प्रयच्छ, सर्वकर्मसु
च मे चित्तं श्रेय: कुरु हूं ह ह ह ह हो भगवन्
सर्वतथागत वज्र मा मे मुञ्च वज्री भव, महासमय हूं फट्।
(आचार्य सरोहपाद विरचित हेवज्रमण्डलविधि:धी:२१.९०)

बौद्ध दर्शन विपय घटनावली सन १३२२ रिखे तिव्वतं च्वयात:गु The Blue Annals धैगु सफू नां जा:। थ्व सफुलिइ उल्लेख जुयाच्वंम्ह जगद्दर्प्पणजुया 'क्रियासम्मुचय' पृ.४२३-४२४ स नं थ्व हेरुकया शत्ताक्षर व्वनेद्। थ्व हे शत्ताक्षर अभयकरगुप्तजुं (ई.सं.१०८४-११३०) च्वयात:गु 'वज्रावली' नांगु सफू पृ.१२३ स नं व्वनेद्।

**वज्रवाराहीया विषयया शत्ताक्षर नं थथे व्वनेदु :-**

ओं वज्रवाराही समय मनुपालय वज्रवाराहीत्वेनोपतिष्ठ
दृढो मे भव, सुतोष्यो मे भव, सुपोष्यो मे भव,
अनुरक्तो मे भव, सर्वसिद्धि मे प्रयच्छ, सर्वकर्मसु
च मे चित्तं श्रेय: कुरु हूं ह ह ह ह हो भगवन्
सर्वतथागत वज्र मा मे मुञ्च वज्री भव, महासमय हूं फट्।
(जिगु निजी संग्रहलय् दुथ्यानाच्वंगु वज्रवाराही साधन नांगु ग्रन्थ ल्या: १५)

आख: छुग: निग: सायद लिपिकर्ताया कारणं अखे थुखे ला:गु कथं थ्व शत्ताक्षर वज्रवाराहीमुखाख्यानम् धैगु ग्रन्थय् नं दु धैगु धी : २२ पृ.१३ स व्वनेदु।

आ: थौंकन्हय् थथे थीथी द्य:या थीथी कथंया शत्ताक्षर व्वनेगु प्रचलन लोप जुयावंगु जुल । थौंकन्हय् सकल द्य:पिन्त सकल पूजाय् चलये याना वयाच्वंगु 'शत्ताक्षर' वज्रसत्वया ख: । थन लेखय् नं आर्यावलोकितेश्वरया पूजाया विधिइ नं वज्रसत्वया हे शत्ताक्षर दुथ्याकात:गु खनेदु ।

वसपोल पं.दिव्यवज्रजु निम्तो दुथाय् वना: बौद्ध दर्शनया विपय् व्याख्या तथा

विश्लेषण या विज्याइगु धका: खँ स्यू । वसपोल दिवंगत जुइ धुंका वसपोलया स्मरणय् यलय् जूगु छगू सभाय वक्ता डा: वज्रराज शाक्यजु पाखें थथे नं खँ न्यने दतकि – यलय् छथाय् वसपोलया प्रवचनया कम जुयाच्वंगु अवधि दुने हे वसपोलया जहान दिवंगत जूगु खनी । दिवंगत जूगु दिनया कंस कुन्हु नं प्रवचनया कार्यक्रम न्हापा हे निर्धारण जुयाच्वंगु जुल । श्रोता वर्ग व आयोजक खल: तय् वसपोल पं.दिव्यवज्रजु थ: कला: सिका नं थन प्रवचन व्यू वइला धैगु सकसियां मनय् विचा: । तर अथे मखुसे वसपोल समयलय् तुप्लुक्क खने दयेक विज्यात । फुक्कं छक्क: हे जुल ।

वसपोलया बौद्ध दर्शन प्रती भुकाव व लगनशीलताया विषयय् थुलि दुग्यनाच्वंगु खं खनेदु । बौद्ध दर्शनया विषयय् वसपोल थ: जहान लिसे नं खँल्हा बल्हा जू धैगु 'विज्ञानवादया छुं खँ' धैगु लेखं प्रष्ट जू । वसपोलया जहान श्रीमती केशरीजु नं कमम्ह मखु खनी । आनापानाया अभ्यासय् यक्कों च्वन्त्या: । चित्त विज्ञान अर्थात् आलय् विज्ञान हे थ्व संसार सकतां ख: । थजा:गु कथं नं विपश्यना याना स्व: धका: थ:जहानयात सल्हा व्यूगु जुयाच्वन । तर थकिया लिच्व गथे च्वं धका: न्यने मलाकं हे वसपोलया जहान दिवंगत जूगुलि वसपोलया नुग: मछिनिगु स्वाभाविक हे जुल ।

बौद्ध दर्शनया क्षेत्रय् भगवान बुद्धया महापरिनिर्वाण जुइ धुंका भगवन शास्ताया उपदेश निर्देशत मुंकेगु लुमंकेगु अभिलेखया रूपय् तयेगु आदि ज्याया निम्तिं अवलय्या महास्थवीरतय्सं कुत: यागु ख: । थ्व हे इवलय् निकोगु सभाय् खँ मिलये मजूया वाया वंपिं स्थवीरतय्त महासांघिक धायेगु यागु ख: । थ्व महासांघिक (त:धंगु संघया पुच:या दुज:त) तय्त हे महायानी धया थुइकाच्वंगु ख: । पं.दिव्यवज्र वज्राचार्यजुया खँ–इपिंला स्थवीरवाद हे जक ख: । वाया वंगु कारणं नां सम्म महासांघिक जुल । महासांघिक धैपिं महायानी मखु । महासांघिक तय्सं 'सर्व प्रकारं जगतो हिताय' अथवा 'बुद्ध भवेयं जगतो हिताय' धैगु अनुशरण या:गु मदु । इपिं केवल स्थवीरवादया दुने मेगु पुच: जक ख: । इमिगु धेय केवल अर्हत जुइगु तक हे जक ख: । थजा:गु भूसिइदुगु खंयात मनूतय्सं महासांघिक धैगु हे महायान ख: धका: भ्रम कथं थुइका च्वंगु विषयय् पं.दिव्यवज्र वज्राचार्यजुया नुग: स्यागु खँ 'महासांघि महायानी होइनन्' धैगु लेखय् व्यक्त यानात:गु दु । थथे जूगु विदेशीतय्सं धालकि न्ह्यागु खँ नं पत्या यायेगु नेपालीतय्के दुगु मनस्थितियात दोष वियेत वसपोल लिफ स्वया विमज्या ।

संक्षेपं धायेगु ख:सा थ्व लेख मुना: बौद्ध दर्शनया तत:धंगु खं निसें कया चिचिधंगु तर मसिकूसे मगा:गु खँतकं सर्व व्यापक कथं दुथ्याकात:गु दु । विशेष याना तच्वतं गभीर वज्रयानया खँत थुइकेत गेसुला:गु आधारस्तम्भया रूपय् सदां न्ह्यचिला च्वनिगु थ्व सफूयात खनाच्वना ।

दिवंगत माँ बौयात श्रद्धा यायेगु यक्कों लंत दु । अकिइ मध्यय् वसपोलपिन्सं याना थकुगु देशयात ज्यालगये जूगु कलाकृति संग्रह यायेगु संरक्षण यायेगु आदि नं त:धंगु श्रद्धाया भाव ख: । पं.दिव्यवज्र वज्राचार्यजुया म्ह्यायपिं कायेपिन्सं वसपोलया अखे थुखे लानाच्वंगु प्रकाशित अप्रकाशित अनमोल लेखत मातु माला: हया: अकियात प्रकाशन हयाव्यूगु दु । थ्व त:धंगु श्रद्धा अवश्य ख: । थ्व भूमिका च्वमि नं वसपोल पं.दिव्यवज्र वज्राचार्यजुयात सदा सर्वदा कालं स्मरण यानागु जुल ।

थ्व सफू बौद्ध दर्शन अध्ययन, अध्यापन, अनुसन्धानयाइपिं लगायत गैर-बौद्ध धर्मया क्षेत्रया विद्वत समाजयात नं यक्कों ज्या वइ धैगु मनं तुना । अस्तु ।

**यज्ञमान पति वज्राचार्य, लायकूवही**
**२०६३ जेष्ठ**

---

1. George N. Roerich, The Blue Annals, p 392.

2. दुर्लभ बोद्ध ग्रन्थ शोध अनुभाग, शून्यसमाधिपाद विरचिता तत्वज्ञानसंसिद्धि वीर्यश्रीमित्र प्रणीतया मर्मकलिकापञ्जिकया सहिता, पृ. XIII . अद्वयवज्रजु नं नेपालया कपिलवस्तुइ जन्मजूम्ह ख: ।

3. Benoytosh Bhattacharya, M.A. Ph.D., Rajyaratna, SADHANAMALA Vol. II. Oriental Institute Baroda 1968 preface p. xci.

4. Ed. Deviprasad Chattopadhya Tmalt Lama Chimpa and Alaka Chattopadhyaya, Taranatha's History of Buddhism in India, K.P. Bagchi & co. Calcutta Reprint Jan 1980, p. 305.



# हाम्रा श्रद्धेय
# वैद्य स्वर्गीय पण्डित दिव्यवज्र वज्राचार्यका
# गुणानुस्मरण

वि.सं. १९७६ साल जेष्ठ २४ गते शुक्ल अष्टमीका दिन महाबौद्ध मासंगल्ली चोकभित्र कनक चैत्य महाविहार, केलटोलका सुप्रसिद्ध मत्स्येन्द्र नाथका पुजारी तथा राज वैद्य बाजे नील वज्र वज्राचार्य र कुशल गृहिणी बज्यै बालकुमारी वज्राचार्यको कुलमा पिता वैद्य दुर्गा वज्र र कर्मठ नारी माता तीर्थ कुमारीको प्रथम सुपुत्रका रुपमा बौद्ध विद्वान तथा आयुर्वेद विज्ञ श्री पं. दिव्यवज्र वज्राचार्यको जन्म भयो । नौ वर्षका उमेरमा मीर सुब्बा हीरामान वज्राचार्यकी बाऱ्हौं सुपुत्री सात वर्षीय स्व. केशरी मायासंग उहाँको शुभ-विवाह सम्पन्न भयो । एकाइस वर्षको उमेरमा प्रथम पुत्र डा. गौतम वज्र लाभ गरे । उहाँका दशजना सन्तानमध्ये हाल चार छोराहरु क्रमश: डा. गौतम वज्र, डा. स्वस्ति वज्र, आयुर्विज पीयुष वज्र र कम्प्युटरविज्ञ अमर वज्र हुनुहुन्छ भने एक छोरा सानैमा स्वर्गे भएका थिए । उहाँका पाँच छोरीहरु क्रमश: श्रीमती वज्राचार्य, सुमति वज्राचार्य, विपुल धाख्वा, मञ्जु वज्राचार्य र मालती वज्राचार्य हुनुहुन्छ ।

'छजना दाजुभाइ र एक बहिनीमा जेठा दाजु दिव्यवज्रको बाल्यकाल बाजे बज्यैको असीम वात्सल्य, लाड प्यार र मोज मस्तीमा बितेका थिए । नौ वर्षको उमेरको भइसक्दा पनि उहाँले लेखपढ गर्न जानेको थिएन । बाजे नीजवज्र र बुबा दुर्गा वज्रले उहाँलाई एउटा सक्षम वैद्य बनाउने निर्णय गरी घरमा आई पढाइदिने ब्राम्हण गुरु देवीदत्त पराजुलीको जिम्मा लगाई दिए । बाबु बाजेको प्रेरणा र सद्गुरु देवीदत्त पराजुलीको सुशिक्षा तथा मार्गदर्शनबाट उहाँले चाँडै नै संस्कृतको ज्ञान हासिल गरी बनारस हिन्दु विश्वविद्यालयबाट उत्तरमध्यमा पास गरे । तदनन्तर आफ्नो कुलको वैद्य पेशाको समस्तिगत विकासको लागि आयुर्वेद अध्ययनार्थ वैद्य गुरु मुक्तिनाथ आचार्यकहाँ बाजे नीलवज्रले उहाँलाई पठाएका थिए । तर संस्कृत साहित्य र व्याकरणको दरिलो र गहिरो ज्ञान भएका हुनाले मुक्तिनाथ गुरुकहाँ धेरै समय पढ्नुपर्ने आवश्यक्ता उहाँलाई भएन । त्यसपछि उहाँले पद्म प्रसाद गुरुबाट वैशेषिक दर्शन पनि अध्ययन गरेका थिए र घरमै स्वाध्यायनमा चुर्लुम्म डुब्न थाले । उहाँको प्रेरणा स्रोत बुबा दुर्गा वज्र छोराको मिहेनत, पढाइप्रतिको लगन तथा त्यसको उपलब्धि हेर्न नपाउँदै अठार वर्षको कलिलो उमेरको दिव्यवज्रको काँधमा बृद्ध बाजे, बज्यै, आमा तीर्थ कुमारी तथा भाइहरु सिद्धिवज्र, ऋद्धिवज्र, मनवज्र र धनवज्र तथा बहिनी मन्जरीसमेतको रेखदेख गर्ने अभिभारा सुम्पी सारा परिवारलाई विह्वल पारी सैंतीस वर्षको उमेरमा परलोक भए । त्यसको लगत्तै एक वर्षपछि उहाँकी सानी

वहिनी मञ्जरी र पुत्रशोकले विह्वल भएकी प्यारी वज्यै वालकुमारी पनि परलोक भइन् ।

अठार वर्षको उमेरमा उहाँमाथि आइलागेका यी वज्रप्रहार र विपत्तिहरुका साथसाथै कलिलै उमेरमा उहाँको एउटा आँखा माइनस नौ र अर्को आँखा माइनस तेन्ह हुन पुगी उहाँको अध्ययनमा ठूलो वाधा उत्पन्न भएका थिए । तर दृढ निष्ठ दिव्यवज्रले आफ्नो अध्ययनप्रतिको झुकावलाई विचलित हुन दिएन । तत्कालीन आँखा विशेषज्ञ डा. यज्ञमानले तपाईंको आँखाको केही भरोसा छैन, यस्तै भइरह्यो भने चाँडै आँखाले नदेख्ने हुन्छ भनी उहाँलाई सतर्क गरेका थिए । तर आफ्नो अदम्य साहस र जाँगरका धनी उहाँले विभिन्न आयुर्वेद ग्रन्थहरु अध्ययन गरी आँखा स्वस्थ राख्ने औषधी, त्रिफला, शतावरी, अमला आदि निरन्तर सेवन गरी आफ्नो आँखालाई जोगाई मरणपर्यन्त ठूल्ठूला ग्रन्थहरु अनुवाद गर्न र सम्पादन गर्न सफल भए । तर २०१३ सालतिर आँखा ठीक पार्ने उद्देश्यले शतावरी र अमलामा चिनी र सखर हाली नित्य सेवन गर्दा मधुमेह (डायबिटिज) रोग लागि २०१३ सालदेखि मधुमेहबाट पीडित शरीरलाई सन्तुलित आहार विहारद्वारा धान्दै आउनुभएका थिए ।

जस्तोसुकै परिस्थितिमा पनि हतोत्साह नहुनु, देश र समय परिस्थिति अनुकूल काम गरी आजीविका मात्र होइन, आफ्नो जीवनको साथसाथै सम्पूर्ण परिवारलाई सन्मार्गमा लगाउने कुरामा दत्तचित्त रहनु उहाँको मौलिक विशेषता हो । कुनै पनि परिवारलाई सत्मार्ग दोऱ्याउन सर्वप्रथम आफू संयमित हुनुपर्छ भन्ने कुरामा उहाँको दृढ विश्वास थियो । म एक पत्नीव्रत, सदाचारी, सत्यवादी हुँ भन्ने कुरामा उहाँ सदा गर्व अनुभूति गर्नुहन्थ्यो । उहाँको सदाचार, सद्विचारले गर्दा नै उहाँका पाँच भाइमा अपार मेल थियो, जसको ज्वलन्त प्रमाणस्वरुप असी नब्बेजनाको परिवार एउटै भान्छामा खाना खाने गर्दथे । हुनत पतिपरायण उहाँकी सहधर्मिणी केशरी वज्राचार्यको पनि यसमा ठूलो भूमिका रहेको छ । उनीलाई पनि देवर एवं देवरानीहरुले सासुलाई जतिकै मान सम्मान गर्दथे, कारण उनले आफ्ना सन्तान र अरुमा कहिल्यै भेदभाव गरिनन्, धन सम्पत्तिको लालसा कहिल्यै गरिनन् ।

उहाँले २००१ सालमा पीयुषवर्षी औषधालयको दातव्य केन्द्रको शुभारम्भ मच्छिन्द्र वहालमा शुरु गरेका थिए । तर केही अनिष्टहरुका कारणले गर्दा त्यहाँको दातव्य औषधालय हटाई आफ्नै घरमा र नघल टोलमा वेग्लावेग्लै औषधालय सञ्चालन गर्नुभयो । विस्तारै न्यूरोड र पाटनमा पनि विस्तार गर्दै लगे । पीयुषवर्षी औषधालयको सर्वाङ्गीन विकासका लागि आफू मात्र होइन, आफ्ना भाइहरुलाई पनि सक्रिय वनाउने उद्देश्यले उहाँले पीयुषवर्षी औषधालयको दर्ता आफ्ना बाजे नीलवज्र र माहिला भाइ सिद्धिवज्रको नाममा दर्ता गरी प्रचार गरे । उहाँको यो निस्वार्थ र उदार

कदमलाई धेरै वैद्यहरुले मुक्त कण्ठले तारिफ गरेका थिए । आफ्नो चोकभित्रको औषधालयलाई अझ विस्तृतरुपले प्रचार प्रसार गर्ने उद्देश्यले ठूला-ठूला राष्ट्रिय चाड पर्व र उत्सवहरुमा प्राय:जसो औषधीहरु आधा मोलमा बिक्री गर्न पम्प्लेट र गोरखापत्रको माध्यमबाट विज्ञापन गर्ने प्रथा बसाले । त्यतिबेला कुनै अरु वैद्यले यसरी प्रचार प्रसार गर्दैनथे । यसरी यो पीयुषवर्षी औषधालय शहर, गाउं, पहाड सबै ठाउंमा प्रचार हुन थाले ।

२०१० सालमा आयुर्वेदको उत्थान गर्ने उद्देश्यले उहाँले आयुर्वेद पढाउने पाठशाला "स्वास्थ्य शिक्षा श्रम" खोली आफ्नै निजी खर्चमा विभिन्न गाउंका विद्यार्थीहरु बटुली उनीहरुलाई खाने बस्ने समेत प्रबन्ध मिलाई निस्वार्थरुपले अध्यापन कार्यमा लागे । २०१० मै उहाँले निजी खर्चमा नेपालको सर्वप्रथम प्रदर्शनी आयुर्वेद संग्रहालय नामक प्रदर्शनी आफ्नै निवास स्थानमा तत्कालीन प्रधानमन्त्री मातृका प्रसाद कोइरालाको बाहुलीबाट उद्घाटन गराई शुभारम्भ गरे । निजी क्षेत्रमा सञ्चालित उक्त प्रदर्शनी नजर भई तत्कालीन युवराजाधिराज श्री ५ महेन्द्र वीर विक्रम शाहदेव र श्री ५ युवराज्ञी रत्नराज्यलक्ष्मीदेवी शाह अत्यन्त प्रभावित भएका थिए । यसको लगत्तै पछि २०१३ सालमा श्री ५ महेन्द्र वीर विक्रम शाहदेवको राज्याभिषेकको उत्सवमा फेरि पनि स्वास्थ्य प्रदर्शनी नामक प्रदर्शनी महिनौं प्रदर्शन गरेथे । यी प्रदर्शनीको उपलब्धीको मूल्याङ्कन गरी सोही सालमा दयावीर कंसाकारले पनि त्रिपुरेश्वरको घरेलुमा श्री ५ को सरकारको खर्चमा सर्वप्रथम राष्ट्रिय प्रदर्शनीको शुभारम्भ गरे ।

देशको ग्रामीण जनतामा स्वास्थ्यको महत्व र यसको रक्षा गर्ने पर्याप्त ज्ञान नभएको देखेर उहाँले २०११ सालमा बाँडा गाउँ, हरिसिद्धि, थैब आदि गाउँमा गई नि:शुल्क दातव्य औषधालयका साथसाथै आयुर्वेदको प्रचार प्रसार गर्न "स्वास्थ्य शिक्षा श्रम" सञ्चालन समेत गरेर सफल वैद्यहरु तयार गरे । नि:स्वार्थ र निजी खर्चमा कार्य गर्दा पनि केही टाठाबाठाहरुले तपाई कुन पार्टीको मान्छे हो ? कुन पार्टीको सहयोगमा आएको हो ? भनी प्रश्न गरेर हैरान पार्दथे ।

यसरी अथक परिश्रम गरी २०१० साल, २०१३ साल र २०१७ सालमा अन्तिम प्रदर्शनी कान्तिपथको फोहरा दरबारमा "नेपाली जनजीवन तथा व्यवसायिक प्रदर्शनी"को आयोजना गरी प्रदर्शन गर्दा पीयुषवर्षी औषधालयको प्रचार प्रसार काफी मात्रमा हुन गयो । हुनत उहाँले यसरी पटक, पटक निजि खर्चमा प्रदर्शनी गर्नुमा विशेषत उहाँका काइला भाइ वैद्य स्व. मनवज्रको महत्वपूर्ण भूमिका रहेको छ । दाइको सल्लाह बमोजिम विभिन्न जडीबूटीको चित्रहरु र माटाका शारीरिक मोडल

बनाउन सिपालु कलाकार मनवज्रले आफ्नो दाइको प्रदर्शनी देखाउने आकांक्षालाई कम खर्चमै मूर्तरुप दिन सफल भएका थिए । वास्तवमा यसो भन्नुको अर्थ अरु भाइहरुले मद्दत दिएन भन्ने होइन, अरु भाइहरु पनि त्यत्तिकै आज्ञाकारी र सहयोगी भए अनुरुप नै उहाँहरुले वैद्य पेशाका साथसाथै सम्पूर्ण परिवारलाई एक सूत्रमा बाँधी अद्यापि संयुक्त परिवारमा रही परिवारका हरेक सदस्यको भविष्य उज्ज्वल पार्न सफल भएका हुन् ।

२०२१ सालसम्म पनि उहाँ वैद्य पेशामा नै थिए । तर घरको औषधालय र असनको औषधालय भाइहरुको जिम्मा लगाई आफूले पाटनमा बेग्लै पीयुषवर्षी औषधालयको शाखा सञ्चालन गरी जनसेवा गरिराखेको बेलामा दुर्भाग्यवश उक्त पाटन औषधालयमा बिरामी देखाउन आइरहेकी एक महिलाको कडा टी.बी. रोग उहाँलाई सर्न गयो । त्यसै पनि मधुमेह पीडित उहाँलाई त्यस कडा टी.बी. (क्षय) रोगले गर्दा करीव ५, ६ महिना यताउता केही गर्ने क्षमता भएन र आखिर विवश भई इन्स्युलिन इन्जेक्सन नलिई नहुने भयो । यसरी महिनौं रोगवाट पीडित हुनु मधुमेहको लागि ठीक समयमा खानु, इन्जेक्सन समेत समय समयमा लिनुपर्ने झंझटले गर्दा उहाँ वैद्य पेशामा लागि रहन सकेन । भाइहरुको माया र परिवारको रेखदेख गर्न घरमै आफ्ना छोरा छोरी, भतीजा भतीजी तथा टोल छिमेक इष्टमित्रका छोराछोरीलाई समेत संस्कृत, नेपाली, हिसाव, अंग्रेजी आदि विषय पढाई प्राइवेट एस.एल.सी.का लागि नि:शुल्क तयारी कक्षा सञ्चालन गरी आफ्नो ज्ञानको सदुपयोग गर्न थालेथे । केही समयको लागि वज्राचार्य अध्ययन मण्डलमा विद्यार्थीहरुलाई संस्कृत भाषा पनि पढाउनुभयो । त्यसपछि पनि केही युवा वज्राचार्यहरुलाई आफ्नो घरैमा संस्कृत पढाउनुभएको थियो । यही समयमा केही बौद्ध अनागारिकाहरु र भन्तेहरु पनि उहाँसंग पाली भाषा पढ्न आउन थाले । पठनपाठन भनेपछि रमाउने उहाँकहाँ विस्तारै बौद्ध दर्शन एवं स्थविरवाद सम्वन्धी कुरा सुन्नेहरुको ओइरो लाग्न थाले । हुनत उहाँलाई उहाँका मामा पर्ने स्व. वनमामा भन्नेले उहाँलाई कलिलै उमेरमै इन्द्रचोकको मू:वहालमा धर्मप्रवचन गर्ने प्रथम हौसला दिएका थिए । त्यस्तै उहाँका दीक्षा गुरु पं. सानुकाजी वज्राचार्यले पनि उहाँलाई "गुरु परम्पराअनुसार वज्राचार्य दर्शन अर्थात् वज्रयानको अध्ययन गर, तिमी संस्कृतमा दखल भएको विद्वान हुनाले तिमीले चाँडै नै वज्रयान बुझ्नेछौ" भनी सुझाव दिएका थिए । तर कलिलो उमेर र आयुर्वेद उत्थानको धुन सवार भइरहेको हुनाले उहाँले त्यसतर्फ त्यति उत्साह देखाउनुभएन ।

अनि २०२९ सालमा उहाँका माहिली छोरी ज्वाईं स्व. सानुमानन्द वज्राचार्यले अखिल नेपाल महायान बौद्ध समाज नामक संस्था खोली यसमा सल्लाहकारमा बसी महायान दर्शनको पुनरुत्थानमा सहयोग गर्नुपर्‍यो भनी अनुरोध गर्दा साह्रै खुशी भई भन्नुभयो - "बौद्ध धर्मको सबभन्दा उदार पक्ष नै महायान दर्शन हो, यसको लागि म आफैंले पनि धेरै अध्ययन गर्न बाँकी नै छ । हुनत हीनयान सम्बन्धी दर्शन त मैले धेरै अध्ययन गरिसकेको छु ।"

त्यसपछि २०३६ सालमा उहाँले आफ्नो ममतामयी आमा तीर्थकुमारी र दीदी भिनाजु नाता पर्ने पं. अमोघवज्र वज्राचार्यको स्मृतिमा उहाँहरुको सुखावती कामना गरी मच्छेन्द्र वहालमा एक महिनासम्म वेग्लावेग्लै समयमा अष्टसाहस्रिका प्रज्ञापारमिता र अभिधर्मको व्याख्याका साथै गुरुमण्डलको व्याख्या पनि गर्नुभएको थियो । त्यस धर्मदेशना सुनी धेरै श्रोताहरु प्रभावित भएका थिए । २०४३ सालमा आफ्ना साहिला भाइ साहित्याचार्य ऋद्धिवज्रको स्मृतिमा प्रकाशित चतु:स्तव नामक ग्रन्थमा उहाँले भाइ ऋद्धिवज्रले २०३१ सालतिर प्रज्ञापारमिताको व्याख्यान लामा भिक्षुहरु र अरु उपासिकाहरुलाई आफ्नै घरमा गर्नु हुँदा सम्म वुद्ध धर्मको नाममा नमो रत्न त्रयाय मात्र भन्न जान्दथे भनी उहाँले उल्लेख गर्नुबाट वि.सं. २०३१ सालपछि मात्र उहाँले बौद्ध धर्मका अरु दार्शनिक पक्षहरु योगाचार, माध्यमिक एवं वज्रयान अध्ययन गर्न लाग्नुभयो भन्ने कुरा स्पष्ट हुन आउँछ ।

वास्तवमा २०३६ सालमा आफ्नी आमा तीर्थ कुमारीको स्मृतिमा धर्मदेशना गरे देखि नै उहाँको बौद्ध दर्शनप्रति झुकाव र श्रोताहरुको अनुरोधमा ठाउँ ठाउँमा धर्मदेशना गर्ने कार्यक्रम द्रुत गतिले वढ्न थालेको थियो । २०४३ सालमा दुर्लभ ग्रन्थ चतु:स्तव सम्पादन गर्दा उहाँले वोधिचर्यावतार नामक महायानी ग्रन्थको व्याख्यान ललितपुरमा गर्दै आइरहनुभएको थियो । अनि यही ग्रन्थ नेवारी भाषामा अनुवाद गरी पन्ध्रौं विश्व बौद्ध सम्मेलनको उपलक्ष्यमा वोधिप्रकाशन केन्द्रद्वार प्रकाशित गरेका थिए । यो वोधिचर्यावतारको व्याख्यानपछि धेरै उपासक उपासिकाहरु वहाँको व्याख्यान शैलीवाट प्रभावित भए, जसको फलस्वरुप भक्तिदास श्रेष्ठले आफ्नी धर्मपत्नीको स्मृतिमा नवग्रन्थ सूत्र नामक ग्रन्थ नेपालीमा अनुवाद गर्न उहाँलाई अनुरोध गरे । हाल त्यस ग्रन्थको द्वितीय संस्करण ताइवानवाट प्रकाशित भइसकेको छ । यस ग्रन्थको अनुवाद र प्रकाशन पछि बौद्ध धर्मावलम्वी जापानीहरुले ललितविस्तरबाहेक अरु पनि नवग्रन्थका ग्रन्थहरु रहेछन् भन्ने थाहा पाई लोटस रिसर्च सेन्टरमार्फत लङ्कावतार सूत्रको व्याख्यान र अनुवाद प्रकाशनको अभिभारा पनि स्व. दिव्यवज्रलाई लिइदिन अनुरोध गरे । सोही लङ्कावतार सूत्र व्याख्यान र अनुवाद भइरहेकै बेला २०४७ सालमा उहाँलाई पत्नीवियोगको वज्रपात पर्‍यो । लोटस रिसर्च सेन्टरबाट हालसम्म उहाँले अनुवाद गरेका ग्रन्थ लङ्कावतार सूत्र, समाधिराज सूत्र, गन्धव्यूह सूत्र, दशभूमिक सूत्र, गुह्यसमाज सूत्र, अष्टसहस्रिका प्रज्ञापारमिता सूत्र छन् भने अनुदित तर प्रकाशनमा गइरहेको ग्रन्थहरुमा शिक्षा समुच्चय सूत्र, निष्पन्न योगावली र साधनमाला आदि छन् ।

२०४७ साल कार्तिक महिनामा आफ्नी सहचारी धर्मपत्नीको वियोग पश्चात् विहान वेलुका आफ्नो खाना आफैं पकाई खाई नियमित स्वाध्यायनमा लीन भई सुखपूर्वक नै कनक चैत्य महाविहार (जनबहाल) को थकाली पदमा क्रमश: चौथो, तृतीय र द्वितीय (नोको)को पदभार एवं परम्परा सम्हाल्दै आउनुभएको थियो । संयमित जीवन बिताउन सफल अदम्य साहस र आत्मवलका धनी स्व. दिव्यवज्रले यसरी आफ्नो जीवनको पूर्वार्ध आयुर्वेदको उत्थानमा र उत्तरार्ध पूर्णरुपले वौद्ध दर्शनको उत्थानमा समर्पण गरेको पाइन्छ । यसरी उहाँलाई घरायसी झंझटवाट टाढा राखी अध्ययन अध्यापनका लागि पर्याप्त समय जुराउनुमा उहाँका आज्ञाकारी भाइ सिद्धिवज्रको अगाढ स्नेह र कुशल गार्हस्थ्यको कारणवाट नै उपयुक्त भएको उहाँ ठान्नुहुन्थ्यो । वौद्ध दर्शनको उत्थानको सिलसिलामा बौद्ध तथा हिन्दु सम्मेलनमा भाग लिन वीरगञ्ज, लुम्विनी, आदि स्वदेश र बनारस, कलकत्ता, वौद्धगया, ताइवान, थाइल्याण्ड आदि देशहरु पनि उहाँले भ्रमण गर्नुभयो । विभिन्न धार्मिक एवं सामाजिक संघ संस्थावाट वहाँको अभिनन्दन पनि गरिएका थिए ।

वि.सं. २०५३ सालमा दर्जनौं भतीजा भतीजी, नाति नातिनी, भतिजी ज्वाईंहरु, नाति पनातिनाहरु, छोरा बुहारी छोरी ज्वाई, भाइ बुहारीको उपस्थितिमा उहाँको भव्य भीमरथारोहण अभूतपूर्व उल्लासकासाथ सम्पन्न भएको थियो ।

भीमरथारोहणपश्चात् पनि पूर्ण स्वस्थ र सक्रिय जीवन विताउँदै आउनु भएका उहाँको २०५६ साल जेष्ठ २ गते आफ्नो ८१ औं जन्मदिवसको १२ घण्टा अगाडि अकस्मात् मस्तिष्क श्राव भई देहान्त भयो । उहाँले आफ्नू जीवनको अन्त यसरी हुन्छ भनी भविष्यवाणी नगर्नुभएपनि आफ्नू जीवनको अन्त यो जन्मदिवसभन्दा अगाडि नै हुनेछ भन्ने संकेत एक महिना अगाडि नै गर्नुभएको थियो ।

आज हाम्रो वीचमा उहाँ हुनुहुन्न तर उहाँका दिव्य उपदेश र उहाँका अमूल्य अनुदित ग्रन्थरत्नले हामीलाई सदैव मार्गदर्शन गरि रहने छन् । *अस्तु !*

*पीयूषवर्षी औषधालय परिवार*

*सुखो विवेकतुष्टस्य श्रुतधर्मस्य पश्यत: ।*
*अव्यावन्ध्यं सुखं लोके प्राणिभूतेषु संयत: ॥*
*सुखा विरागता लोके पापानां समतिक्रम: ।*
*अस्मिन् मनुष्य विषये एतद्वै परमं सुखम् ॥*

- भगवान बुद्ध

# वज्रयान

वज्रयान के हो भन्ने विषयमा देशी तथा विदेशी विद्वानहरूले आ-आफ्नो विचार प्रकट गरेको देखिन्छ । परन्तु वज्रयानको परम्परागत वातावरणभन्दा भिन्नै वातावरणमा हुर्केका विद्वानहरुलाई यसको सच्चा कुरा बुझ्न कठीन हुनु स्वाभाविक छ । नामसङ्गीति तथा कालचक्रको टीकाहरुमा वज्रयानको परिभाषा संक्षेपमा दिइएको पाइन्छ । प्रकाशित कालचक्रको १६३ पृष्ठमा विमलप्रभा टीकामा यस्तो उल्लेख गरिएको छ - "श्री वज्रयाने प्रवृत्तिः वज्रमभेद्यमच्छेद्यं महदिति तदेव यानं मन्त्रनयं पारमितानयं फलहेत्वात्मकं एकलोलीभूतं तस्मिन् प्रवृत्ति वज्रयाने प्रवृत्तिः" अर्थात् वज्र शव्दको अर्थ अरु कुनै सम्प्रदाय तथा मतले भेदन गर्न र च्छेदन गर्न नसकिने हुनाले महान भनेको हो । त्यही यान अर्थात् फलस्वभावको मन्त्रनय र हेतु स्वभावको पारमितानय एकलोलीभूत वज्रयानमा प्रवृत्त हुनु, लाग्नु भनेको हो । यहाँ मन्त्रनय भनेको मन्त्रयान र पारमितानय भनेको वोधिसत्वयान भनेको हो । यी दुवै पानीमा पानी मिलाए जस्तै एकै हुनुलाई नै वज्रयान भनेको हो । यसकारण मन्त्रयान र वोधिसत्वयानको सिद्धान्त र उद्देश्य तथा दुवैलाई एकाकार वनाउने परम्परा वुझ्नु परम आवश्यक छ । यसको निमित्त मन्त्रयान र पारमितायान यी दुवै यानका कुनै कुरा व्याख्यान गर्दा संवृत्ति सत्य र परमार्थ सत्यको आधारमा वर्णन गरेको हुन्छ । त्यसैलाई क्रमशः नेयार्थ र नीतार्थ पनि भनिन्छ । साथै यसैलाई कहीं उत्पत्तिक्रम र उत्पन्नक्रम पनि भनिन्छ । यी कुरा नबुझिकन वज्रयान सम्वन्धी तन्त्रको कुरा वुझ्न कठीन पर्दछ ।

परमार्थ सत्य र संवृत्ति सत्यको लक्षण वोधिचर्यावतार ९ परिच्छेद २ श्लोकमा यसरी उल्लेख गरिएको छ - "बुद्धेरगोचरस्तत्वं वुद्धिः संवृत्तिरुच्यते ।" अर्थात् वुद्धिले जानिने कुरालाई संवृत्ति सत्य भनिन्छ तथा वुद्धि नै संवृत्ति सत्य हो । अविद्या, विपर्यास तथा बुद्धि यी तीन शव्द संवृत्ति सत्यकै पर्यायवाची शव्दहरु हुन् । हेतु प्रत्ययद्वारा बनेको प्रतीत्य समुत्पन्न वस्तुहरुको वर्णन संवृत्ति सत्यमा नै हुन्छ । यही कुरा विमलप्रभा ४२ पृष्ठमा पनि उल्लेख गरिएको छ - "एवं सर्वतन्त्रान्तरेषु अभिधेयो द्विधा एको लोकसंवृत्या, द्वितीयः परमार्थतः । यो लोक संवृत्या स वर्ण भुज चिन्ह संस्थान लक्षण, य परमार्थ सत्यतः स वर्ण भुज चिन्ह संस्थान रहितः" अर्थात् सबै वज्रयान सम्बन्धी तन्त्रहरुमा लोक संवृत्तिद्वारा र परमार्थ सत्यद्वारा वर्णन गरिएका हुन्छन् । रातो आदि वर्ण, दुई, चार आदि हात तथा शिर, हातले लिएका चिन्ह

र आकार, आसन, बाहन आदि सबैलाई संवृत्ति सत्य भनिन्छ । यति मात्र होइन, पूजा कर्मकाण्ड सबै संवृत्ति सत्यकै अन्तर्गत पर्दछ । वर्ण, भुज, चिन्ह संस्थानरहित अनिर्वचनीय कुरा नै परमार्थ सत्यको कुरा हो भनी सम्झनुपर्छ । बाह्य तथा आफ्नो शरीरभित्र आफ्नो चित्तले दृढ विश्वास गरिने सिद्धि तथा साधना पनि संवृत्ति सत्य नै हो । संवृत्ति सत्यले नै इहलोकको सिद्धि फल दिने हुन्छ । लोकोत्तर महामुद्रासिद्धिको निमित्त गरिने मन, वुद्धिसंग सम्बन्ध नभएको अक्षर सुखमय ज्ञानलाई परमार्थ सत्यको फल भनिन्छ ।

यही दुई सत्य संवृत्ति र परमार्थ सत्यलाई एउटै बनाउने प्रज्ञोपायात्मक योगलाई वज्रयोग भनिन्छ । महार्थ, परमाक्षर, आदिवुद्ध, निरन्वय, कालचक्र, भगवान् वज्रसत्व आदि शब्दहरु पनि वज्रयोग शब्दको पर्यायवाची शब्दको रुपमा प्राय: सबै तन्त्रहरुमा उल्लेख गरिएको पाइन्छ । यति मात्र होइन, विमलप्रभाको पृष्ठ ४३ मा उपर्युक्त कुरा व्यक्त गर्न यस्तो लेखिएको छ - "स एव भगवान् पारमिता नये हेतु लक्षणे प्रज्ञाफललक्षणे सहजानन्द सहज काय" अर्थात् हेतु स्वभावको पारमितानयमा प्रज्ञापारमिताको स्वाभाविक काय भनिन्छ भने त्यसैलाई फलस्वभावको मन्त्रनयमा सहजानन्द तथा सहज काय भनिन्छ । जव सहज कायको साक्षात्कार हुन्छ, तव म मेरो भन्ने ग्राह्य ग्राहक भावरहित हुन्छ । ज्ञान र मनले नजानिने हुनाले यसलाई विज्ञान धर्मतातीत भनिन्छ । यसैलाई अप्रतिष्ठित निर्वाण पनि भनिन्छ । छ छैन, भाव अभाव, एक अनेक, शाश्वत उच्छेद जस्ता द्वन्दरहित हुनाले वज्रयोगलाई निरन्वय तथा अद्वय भनिन्छ । यही वज्रयोग वाह्य पदार्थ र आफ्नो तथा पराइका शरीरमा पनि हुन्छ भन्ने कुरा वुझ्नुपर्छ । साथै वज्रयोगलाई नि:स्वभाव पनि भनिन्छ भन्ने कुरा पनि स्मरणीय छ ।

"एकानेक क्षणरहितं ज्ञानं तत्वमित्युच्यते जिनै:" एक क्षण अनेक क्षण भन्ने भेदभाव नभएको ज्ञानलाई नै तत्व एवं परमार्थ सत्य हो भनी वुद्धहरु भन्नुहुन्छ । यसरी साधकको विचारअनुसार यो वज्रयोग चार प्रकारका हुन्छन् । ती पनि फेरि सोन्ह प्रकारको हुनपुग्छ । आनन्द, परमानन्द, वीरमानन्द र सहजानन्द यी चार प्रकारका आनन्दहरु पनि काय, वाक, चित्त र ज्ञानका भेदले सोन्ह हुनपुग्छ । जस्तै कायानन्द, वागानन्द, चित्तानन्द, ज्ञानानन्द फेरि कायपरमानन्द, वाकपरमानन्द, चित्तपरमानन्द, ज्ञानपरमानन्द, कायविरमानन्द, वाकवीरमानन्द, चित्तवीरमानन्द, ज्ञानवीरमानन्द, कायसहजानन्द, वाकसहजानन्द, चित्तसहजानन्द, ज्ञानसहजानन्द यी सोन्ह प्रकारका परमार्थ सत्य वा तत्व बुझेको हुनाले भगवान् वुद्धलाई षोडशाकारतत्ववित् भनी नामसङ्गीतिमा उल्लेख गरिएको हो ।

यही तत्व वा परमार्थ सत्यलाई साधकहरु सहजकाय, धर्मकाय, संभोगकाय, निर्माणकाय, सहजवाक, सहजचित्त, सहजज्ञान, धर्मवाक, धर्मचित्त, धर्मज्ञान, संभोगवाक, संभोगचित्त, संभोगज्ञान, निर्माणवाक, निर्माणचित्त, निर्माणज्ञानका भेदले सोन्ह प्रकारको तत्व साक्षात्कार गर्ने हुन्छ । यी तत्वहरुमध्ये शून्यताको भावनाद्वारा लाभ हुनुलाई सहजकाय भनिन्छ तथा यसैलाई विशुद्धयोग नामको वज्रयोग पनि भनिन्छ । अनिमित्तको भावनाद्वारा लाभ हुनुलाई धर्मकाय भनिन्छ । यसैलाई धर्मयोग नामको वज्रयोग पनि भनिन्छ । अप्रणिहितको भावना गरी लाभ हुनुलाई संभोगकाय भनिन्छ । यसैलाई मन्त्रयोग नामको वज्रयोग भनिन्छ । अनभिसंस्कारको भावनाद्वारा लाभ हुनुलाई निर्माणकाय भनिन्छ । यसैलाई संस्थानयोग नामको वज्रयोग भनिन्छ ।

यसरी विशुद्धयोग, धर्मयोग, मन्त्रयोग, संस्थानयोगका भेदले वज्रयोग चार प्रकारका हुन्छन् । यी भए संवृत्ति सत्य र परमार्थ सत्यका कुरा ।

नामसङ्गीतिमा कृत्यानुस्थानको १४ श्लोकमा "धर्मदानपति: श्रेष्ठश्चतुर्मुद्रार्थदेशक" भनी भगवान् वुद्धलाई चतुर्मुद्राको उद्देश्य आज्ञा हुने भनी उल्लेख गरिएको पाइन्छ । अत: चतुर्मुद्राको वर्णन वज्रयानमा किन आवश्यक भयो, सो वर्णन गर्नु उपयुक्त छ । चतुर्मुद्रोपदेशतन्त्रको उद्धरण गर्दै नामसङ्गीतिको टीकामा यसरी उल्लेख गरिएको छ -

*"कर्मज्ञान महामुद्रा समयाख्या: प्रभाश्वरा: ।*
*हेतुर्भाव्या तथा प्राप्या चतुर्थीह्यविनश्वरा ॥"*

अर्थात् प्रभाश्वर स्वभावका, कर्ममुद्रा, ज्ञानमुद्रा, महामुद्रा, समयमुद्रा यी चार मुद्राहरु हुन्छन् । ती चारमध्ये कर्ममुद्रालाई हेतु भनिन्छ । ज्ञानमुद्रालाई भाव्या भनिन्छ । महामुद्रालाई प्राप्या भनिन्छ । समयमुद्रालाई अविनश्वरा भनिन्छ ।

यहाँ कर्ममुद्रा भन्नाले कुनै सहधर्मिणी भन्ने वुझिन्छ । यो संसारमा स्त्री जाति पुरुषको निमित्त तथा पुरुष स्त्री जातिको निमित्त सुखको कारण भएकोले कर्ममुद्रालाई हेतु भनिएको हो । यहाँ कर्म शब्दले आलिङ्गन, चुम्बन आदि कर्मको बोध हुन्छ । "मुदं क्षर सुखविशेषं राति ददातीति मुद्रा" च्युति सुख (क्षर सुख) दिने हुनाले मुद्रा भनेको हो ।

यति मात्र होइन, चण्डमहारोषण तन्त्रको निष्पन्नयोग पटलमा कामशास्त्रका धेरै वन्धहरु उल्लेख गरिएका छन् । कालचक्र तन्त्रमा साधन पटलको १२६ श्लोकमा चिन्ता, प्रबल इच्छा, शरीर रन्न तात्नु आदि दशकामावस्था र कर्ममुद्रामा कस्तो

सम्वन्ध छ, सो स्पष्ट पारेको पाइन्छ । त्यसैले भन्नुहुन्छ - "लोके ता मन्मथस्य प्रभवति नियता: को जिन कश्चकाम:" धूमादि दश निमित्त भैं दशकामावस्था हुने हुँदा कामदेव र वुद्धमा के भेद छ ? यसरी कर्ममुद्रालाई प्रशस्त वर्णन गरेको हुँदा वज्रयानमा शाक्त, कौल, कापालिक आदिहरुको प्रभाव परेको छ कि भन्ने धारणा उत्पन्न हुनु स्वाभाविक छ । परन्तु गहिरिएर हेरेमा वज्रयानको प्रचार प्रसारको समयमा जति पनि मत मतान्तरहरु छन्, ती सबै वज्रयानमै अन्तरभाव गरी ती सवैलाई वज्रयानीकरण गर्न सफल भएको पाइन्छ । जसको ज्वलन्त प्रमाण कालचक्रको टीका विमलप्रभा प्रकाशित पृष्ठ ५० मा यसरी उल्लेख गरिएको पाइन्छ -

इदानींतीर्थिकावतारणाय प्रकृति पुरुष उच्यते तथाह भगवान् तन्त्रान्तरे -
*"महामाया महारौद्रा भूतसंहारकारिणी ।*
*स्वयं हर्ता स्वयं कर्ता स्वयं राजा स्वयं प्रभु: ॥"*

अर्थात् अरु मतावलम्वीहरुलाई संग्रह गर्न, आफ्नो वुद्ध धर्ममा ल्याउन प्रकृति पुरुषसम्वन्धी कुरा भगवान् वुद्धले तन्त्रहरुमा यस्तो पनि आज्ञा भएको छ - म महामाया हुँ, महारौद्र हुँ, म चराचर विश्वलाई नै संहार गर्ने हुँ, म आफैंले यो संसार वनाउँछु र संहार पनि गर्छु । अत: म यो संसारको राजा हुँ, स्वामी हुँ । यी वाक्यहरु वास्तवमा भुठा हुन्, तर पनि यसो भन्दा विनीत हुने व्यक्तिहरुलाई वास्तविक धर्म वोध गराउन प्रयोग गरेको देखिन्छ ।

यही नियमले कामशास्त्रका कुरामा लहसिने व्यक्तिहरुलाई आकर्षण गर्न कर्ममुद्राको वर्णन गरिएको पाइन्छ । यो कुरा विमलप्रभाको ५१ पृष्ठमा यसरी उल्लेख गर्नुबाट स्पष्ट हुन आउँछ - "भविष्यमा वज्राचार्यहरुले द्रव्य संग्रह गर्ने हुन्छन् । धनीका घर घरमा गएर धर्म बिक्री गर्ने छन् । धर्ममा श्रद्धा नहुनेलाई पनि लोकोत्तराभिषेक दिने हुन्छन् । श्रद्धा हुनेलाई भने अभिषेक नदिने हुन्छन् । धनको लोभले वज्रपद (सर्वज्ञ ज्ञान) दुष्टहरुलाई प्रकाश गर्ने हुन्छन्, तर वज्रपदको वास्तविक अर्थ नवुझी परस्परमा विवाद गर्ने हुन्छन् । तन्त्रको भाव नवुझ्नेले तन्त्रको टीका बनाई वुद्धज्ञान द्वीन्द्रियज सुख हो भनी बालजनहरुसमक्ष प्रकाश गर्ने हुन्छन् ।"
"बुद्धज्ञानं द्वीन्द्रियजं सुखं बालमतीनां प्रकाशयिष्यन्ति ।"

यसकारण आनन्द, परमानन्द, वीरमानन्द, सहजानन्दहरु कर्ममुद्राको प्रसङ्गमा वताइएता पनि कामासक्त हुने होइन भन्ने कुरा कालचक्र साधन पटल १९९ श्लोकमा उल्लेख गरिएको छ । जस्तै -

*"त्यक्त्वेमां कर्ममुद्रां सकलुषहृदयां कल्पितां ज्ञानमुद्रां ।*
*सम्यक संवोधि हेतो र्जिनवर जननीं भावयेद्दिव्य मुद्राम् ॥*
*निर्लेपा निर्विकारां खसमहततमां व्यापिनीं योगिगम्याम् ।*
*कूटस्था ज्ञानतेजां भवकलुषहरां कालचक्रानुविद्धाम् ॥"*

अर्थात् कलुषित हृदय भएकी कर्ममुद्रा र कल्पित स्वभावकी ज्ञान मुद्रालाई पनि छोडेर सम्यक संवोधि लाभ गर्न तथागतहरुको पनि जननी भएकी दिव्यमुद्रा (महामुद्रा) लाई भावना गर । महामुद्रा आकाशसमान निर्लेप र निर्विकारका हुन्छन् । अज्ञानलाई नाश गर्ने व्यापक स्वभावको योगीहरुले मात्र देख्नसक्ने, कूटस्थ तथा ज्ञानको तेजले भव संसारको क्लेशलाई हरण गर्ने हुन्छ । यस्तो कालचक्रसहितको दिव्यमुद्रालाई भावना गर ।

यसवाट कर्ममुद्रा र ज्ञानमुद्रा मुख्य होइन, गौण रहेछ भन्ने कुरा स्पष्ट हुन्छ । अत: त्यस बेलाका जनताको मानसिक स्थिति हेरी वुद्धधर्ममा कर्ममुद्राको प्रयोग गरेको रहेछ भन्ने कुरा स्पष्ट हुन्छ । कर्ममुद्रामा वढी जोड दिने चण्डमहारोषण तन्त्रको निष्पन्नयोग पटलमा "अत्यन्त कामिनामर्थेमया बुद्धेन भाषितम्" भनी कामुकहरुलाई आकर्षण गर्न कर्ममुद्रा व्याख्या गरिएको हो भन्ने कुरा निश्चित हुन्छ ।

नामसङ्गीतिको टीका अमृतकणिकाको पृष्ठ २ मा पनि कर्ममुद्रा सत्वावतारणको निमित्त मात्र हो भन्ने कुरा व्यक्त गरिएको छ -

*"सहजानन्द स्वभावोऽहं परमान्त वीरमादिकम् ।*
*भावोऽहं नैव भावोहं बुद्धोऽहं वस्तुवोधनात् ॥*
*मां नजानन्ति ये मूढा: कौसीद्योपहताश्च ये ।*
*विहरेयं सुखावत्यां वज्रयोपिद्भगेषु च ॥*
*इति आदिकर्मिक सत्वावतारणाय इत्यादि "*

अर्थात् सहजानन्द, परमानन्दको पछिल्लो घटना हो तथा वीरमानन्द भन्दा पहिलो अवस्था हो । म यस्तो सहजानन्द स्वभावको हुं । म नत भाव हुं, नत अभाव नै हुं । पदार्थ के हो भन्ने कुरा मैले बुझेको हुनाले म बुद्ध हुं । मोहमा परेका तथा आलस्यले जकडिएका व्यक्तिले मलाई चिन्दैन । म सुखावती भूमिमा र वज्रयोगिनीहरुको भगमा पनि विहार गर्छु ।

यी उपर्युक्त उद्धरणहरुबाट वज्रयानको अभिप्राय के हो तथा आदिकर्मिक (बुद्ध धर्ममा वामे सर्न तम्सेका प्राणी) हरुलाई आकर्षण गर्न कस्तो उपाय प्रस्तुत गरेको रहेछ भन्ने कुरा स्पष्ट हुन आउँछ ।

वज्रयानमा विभिन्न प्रकारका मुद्राहरुको वर्णन गरिएका छन् । त्यसमध्ये सहधर्मिणी साथमा नलिई केवल पूर्वानुभूत सुखलाई मात्र सम्झी गरिने मुद्रालाई ज्ञानमुद्रा भनिन्छ । यो दोस्रो तहका व्यक्तिलाई आकर्षण गर्न गरिने मुद्रा हो ।

महामुद्रा वज्रयानको उपेय प्राप्य वस्तु हो । यसकै निमित्त सबै क्रियाकलापहरु गरिने हुन्छ । यो कुरा थोरै वज्रयानका लेखकहरुले मात्र बुझेको देखिन्छ । कर्ममुद्रा, ज्ञानमुद्रा, महामुद्रा यी तीनै मुद्राद्वारा समानरुपले साधना गर्ने प्रक्रिया देख्दा नीतार्थ र नेयार्थमा ध्यान दिंदा अर्थमा अनर्थ हुने हुन्छ । महामुद्रासिद्धि भनेको नै बुद्धत्व साधन हो । महामुद्रा साधन गर्न षडङ्गयोग गरिन्छ । हाल षडङ्गयोग गर्ने प्रवृत्ति जनसमाजमा देखिंदैन । परन्तु वज्रयानको मन्त्र, देवता, मण्डल, चक्र, पीठ, नाडी, होम आदि वाह्य पूजा र साधनाका कुरा हालसम्म पनि नेपालमा प्रचलित छन् । पूजा आदिद्वारा लौकिक सिद्धि लाभ हुने हुँदा यसैमा मात्र जनसमाज फँसेको देखिन्छ । नेपालमा कर्ममुद्रा र ज्ञानमुद्राको परम्परा पनि देखिंदैन । तसर्थ यहाँका वज्रयानीहरुसंग यी मुद्राहरुको ज्ञान छैन भन्ने अड्कल गर्न सकिन्छ । उहाँहरु वज्रयानको रहस्य वताउनु हुँदैन भन्ने उत्तरमै सीमित रहेको पाइन्छ ।

वज्रयानमा वाह्य लौकिक साधनको निमित्त देवदेवीहरुको ध्यान, मण्डल तथा मन्त्रहरुको आविष्कार कसरी भए यो विवेचना गर्नु पनि यस सन्दर्भमा उपयुक्त देखिन्छ । देव देवीहरुको मूर्ति एवं मन्त्र आदिको विषयमा सबैको मनमा कौतुहल उत्पन्न हुनु स्वाभाविक छ, तर ती कौतुहलपूर्ण कुराहरु निष्पन्न योगावली तथा कालचक्रको टीका विमलप्रभा र साधनमाला आदि ग्रन्थहरु नियालेर हेर्दा सहजै बुझ्न सकिन्छ । निष्पन्न योगावली पृष्ठ १ मा यसरी लेखिएको छ - "स हि त्वां सर्व सत्वांश्च वज्रधरत्वं प्रापयितुमत्युत्साहेन स्कन्धधात्वायतनादिकं प्रतिविम्वमयं शून्यैकरसं निश्चित्य तत्प्रभास्वरं प्रविश्य झटिति सपरिकरं कूटागारोदरमण्डले माण्डलेय परिकरित कुलेशभूषितहृद्बीज युक्तः शून्यताकरुणैकरसो महासुखमयः श्री वज्रसत्वा मन्जुवज्रादिरुपापरिमित तथागत देवी वोधिसत्व क्रोधादीन् स्फारयेत् । धर्मदेशनादिभि र्यथाभव्यं परहितं विकुर्वाणः परपुण्यावधिं स्थापयेत् । संहरञ्चाचिन्त्यमूर्ति रुदेति ।" अर्थात् सोही वज्रसत्व भगवान्‌ले तिमीलाई र सबै प्राणीहरुलाई वज्रधर बनाउन ठूलो उत्साहसाथ पञ्चस्कन्ध, अष्टादश धातु, द्वादश आयतनहरु प्रतिविम्व समान शून्यतास्वरुप

हुन् भन्ने दृढनिश्चय गरेर छिटो शून्यतारुपी प्रभास्वरमा लीन भएर सबै साधन सम्पन्न कूटागारभित्र मण्डलमा वस्नु हुने सबै देवताहरु वरिपरी राखेर क्लेश मुकुटमा धारण गरेका बीजाक्षरले युक्त शून्यता र करुणालाई समता भावना गर्ने महासुख स्वरुपको वज्रसत्वले मञ्जुवज्रादि अनन्त तथागत, देवी, वोधिसत्व, क्रोधराजादिलाई उत्पन्न गर्नुभयो । अनि धर्मदेशना आदिद्वारा योग्यताअनुसार परहित गर्दै पुण्यकर्ममा लगाउनुभयो । अनि सोही मण्डल आफूमा लीन गर्दा अचिन्त्य देवता मूर्ति प्रादुर्भाव हुने हुन्छ ।

उपर्युक्त वाक्यबाट पहिले आफूलाई शून्य भावना गरी जुन देवतालाई उत्पन्न गर्ने इच्छा छ, त्यही देवताको बीजाक्षरसहितको वज्रसत्वले त्यही देवता उत्पन्न गर्ने हुन्छ भन्ने कुरा सिद्ध हुन्छ ।

अर्को कुरा श्री वज्रवाराहीको मूर्ति, थांका र चित्रहरु यत्रतत्र देख्न पाइन्छ । ती मूर्तिका प्रधान मुख परमार्थ सत्यको रुप मानिन्छ भने वराहको मुखलाई मोहको प्रतीक संवृत्ति सत्यको रुप भनी स्वीकारेको देखिन्छ । उहाँले लगाउनुभएको गहनाहरु अर्थात् चक्री, कुण्डल, कण्ठिका, रुचक, मेखला, सूत्र यी छवटा मुद्राले षटपारमिताको प्रतिनिधित्व गर्दछन् । षोदश वर्पकी हुनुभएकोले पोडश शून्यताले पूर्ण भन्ने भावना व्यक्त गर्दछ । यी उपर्युक्त कुरा श्री वज्रवाराहीको विशुद्धि, तत्वज्ञानसंसिद्धि तथा महासुख प्रकाशिका टीकामा वर्णन गरिएको पाइन्छ । यस किसिमका यी वर्णनहरु देख्दा धर्मकायलाई नै मूर्तिकल्पना गरिंदो रहेछ भन्ने कुरा प्रत्यक्ष हुन आउँछ । यस्तै गरी पञ्चरक्षा सूत्र, प्रज्ञापारमिता सूत्रहरुको पनि मूर्तिकल्पना गरिएको पाइन्छ ।

यति मात्र होइन, प्रकाशित विमलप्रभाको २५६ पृष्ठको भनाइअनुसार संवृत्तिसत्य (लोकव्यवहार) को दृष्टिमा सबै दर्शन सिद्धान्तहरु समान छन् तथा लौकिक सिद्धिलाभ गर्ने प्रक्रिया पनि समान छन् भन्ने कुरा व्यक्त हुन्छ । परन्तु शून्यता तत्वमा भने वौद्ध र अरु मतमा भेद छ भनी उल्लेख गरिएको छ । जस्तै - "वौद्धतीर्थिकयो विशेषो नास्ति शून्यतातत्वं प्रति विशेष" यस वाक्यकै आधारमा अन्य मतका देवताहरुको मूर्तिहरु पनि वज्रयानमा समावेश गरेको कुरा स्पष्ट हुन आउँछ ।

फेरि मन्त्रयानअनुसार मन्त्र केलाई भनिन्छ ? यो कसरी आविष्कार भयो ? भन्ने कुरा पनि यस सन्दर्भमा व्यक्त गर्नु नितान्त उचित छ, जुन कुरा यसरी प्रस्तुत गरिएको पाइन्छ - "इह त्रैधातुके स्थिर चल धर्माणां यद यस्य नाम तस्य नामस्याद्यक्षरं नामाद्यं तदेव चित्तवज्रं भवति । नरपते, देवता देवतीना वाग्वज्र सर्वनामेति" पृथिवी आदि स्थिर वस्तु, मनुष्य आदि चल वस्तुहरु जसको जुन नाम हो, त्यस नामको

पहिलो अक्षरलाई चित्तवज्र वा बीजाक्षर भनिन्छ । पूरा नामलाई वागवज्र भनिन्छ । अर्थात् लोचनी, मामकी, पाण्डुरा, तारा आदि देवताको क्रमशः लां, मां, पां, तां यी बीजाक्षर वा चित्तवज्र हुन् । उपर्युक्त लोचनी आदि पूरा नामलाई वागवज्र भनिन्छ । यही नियमले सबै देवता तथा वस्तुहरुको बीजाक्षर कल्पना गरिन्छ । अनि त्यही वागवज्रमा अरु शब्दहरुसमेत थपेपछि कायवज्र भनिन्छ । जस्तै - "ओं तारे तुत्तारे तुरे स्वाहा" यो पंक्तिलाई ताराको कायवज्र भनिन्छ । चित्तवज्र ध्यान गर्न, वागवज्र ध्यान तथा यज्ञ गर्न, कायवज्र मन्त्र जप गर्न प्रयोग गरिन्छ । मन्त्रयानको सिद्धान्त अनुसार आलय विज्ञान नामको मनमा जुन वस्तुको बीज रोपिन्छ, त्यही उम्रेर आउँछ भन्ने धारणा रहिआएको छ । जुन कुरा प्रकाशित कालचक्रको टीका २५६ पृष्ठमा यसरी लेखिएको छ -

*"येन येन हि भावेन मनः संयुज्यते नृणाम् ।*
*तेन तन्मयतां याति विश्वरुपो मणि यथा ॥"*

अर्थात् जुन जुन भावले मानिसको मन (आलय विज्ञान) मा लगाइन्छ, त्यसद्वारा त्यो मन तन्मय हुन्छ । जसरी मणि (ऐना) को सामुन्ने जे जे पर्छ, त्यो ऐनामा त्यही त्यही रुप देखिने हुन्छ र विश्वरुपको निर्माण हुन्छ । यही सिद्धान्तअनुसार यो मन (आलय विज्ञान) मा बुद्ध, राम, कृष्ण आदि नाना प्रकारका देव देवताहरु प्रकट हुने हुन्छ । यसरी मन्त्रयानमा यही उपर्युक्त सिद्धान्तको आधारमा विभिन्न देवदेवीहरुको मूर्ति तथा मन्त्रहरुको उत्पत्ति भए । यतिमात्र होइन, देवताहरुको कार्यअनुसार रातो आदि वर्ण र कुल पनि निर्धारण गरिन्छ ।

वज्रयानमा छवटा कुलका देवताहरुको उल्लेख गरिएको पाइन्छ । ती हुन् - वैरोचन, अक्षोभ्य, रत्नसंभव, अमिताभ, अमोघसिद्धि र वज्रसत्व । यहाँ कुल शब्दको अर्थ समूह तथा वर्ग भनेर बुझ्नुपर्छ । वज्रयानमा मात्र होइन, हामी प्राणीहरुलाई पनि यही छ कुलमा वर्गीकरण गरिएको हुन्छ । कालचक्रको भनाइ अनुसार प्राणीहरु पहिले त्रिकुलात्मक हुन्छन् अर्थात् काय, वाग, चित्त कुलका हुन्छन् । उमेर पुगेपछि सुखमय ज्ञान उत्पन्न हुन्छ । अनि चतुष्कुलात्मक हुन्छन् । अनि प्राणीहरु पञ्चभूतात्मक तथा पञ्चस्कन्धात्मक हुन्छन् र पञ्चकुलका हुन्छन् । माथि भने झैं सहज स्वभावको सुखमय ज्ञानोदय भएपछि षडकुलात्मक हुन्छन् । यही षटकुलको नियम प्रधानताको रुपमा देखिन्छ । यी देवताहरुलाई षट्चक्रका देवताका रुपमा वर्णन गरिन्छन् । द्वेष चरितका देवता तथा प्राणीहरुलाई विज्ञानस्कन्धस्वरुप अक्ष्योभ्य कुलमा गणना

गरिन्छ । यसको वर्ण नीलो हुन्छ । रुपस्कन्ध स्वभावको वैरोचन कुलमा मोह चरितका देवता तथा प्राणीहरु पर्दछन् । यसको वर्ण सेतो हुन्छ । संज्ञास्कन्ध स्वभावको अभिताभ कुलमा राग चरितका देवता तथा प्राणीहरु पर्दछन् । यसको वर्ण रातो हुन्छ । वेदनास्कन्ध स्वभावको रत्नसम्भव कुलमा मात्सर्य (कन्जुसी) चरितका देवता तथा प्राणीहरु पर्दछन् । यसको रङ्ग पहेंलो हुन्छ । संस्कारस्कन्ध स्वभावको अमोघसिद्धि कुलमा कौसीद्य (आलस्य) चरितका देवता वा प्राणीहरु पर्दछन् । यसको रङ्ग श्याम वा हरित वर्णको हुन्छ । सहजानन्द ज्ञान स्वभावको वज्रसत्व कुलमा ज्ञान चरितका देवता तथा प्राणीहरु पर्ने हुन्छन् । यसको वर्ण सेतो हुन्छ ।

उपर्युक्त सिद्धान्तको आधारमा देवताहरुको रङ्ग हेरी तथा प्राणीहरुको झुकाव हेरी यो देवता तथा प्राणी यो कुलका हुन् भनी वर्गीकरण गर्न सकिन्छ अथवा कुनै मूर्तिको मुकुट वा शिरमाथि रहेको कुलदेवता हेरेर पनि कुल छुट्याउन सकिन्छ । प्राय: यही सिद्धान्तअनुरुप नै निष्पन्न योगावली, वज्रावली र साधनमाला गुह्यसमयसाधन आदि ग्रन्थमा उल्लिखित हजारौं देवदेवताहरुको ध्यानहरु वर्णन गरिएको पाइन्छ ।

निष्पन्न योगावली र वज्रावलीमा मण्डल वनाउने विधि पनि दिइएको छ । ती ग्रन्थमा उल्लिखित सूत्रपाटन नामको विधि हाम्रो आधुनिक ग्राफ सिद्धान्त जस्तै अनुपात मिलाई मूर्ति तथा मण्डलहरु लेख्ने विधि हो । यसकै आधारमा पौभा (थाङ्का) आदि लेखिन्छ ।

रङ्ग र कुल फरक भए जस्तै प्रत्येक देवताहरुको हस्तमुद्रा पनि भिन्नाभिन्नै हुन्छन् । यी मुद्राहरु इतर धर्मावलम्वीहरुको अनुकरण गरेको भन्ने कुरामाथि नै उल्लेख भइसकेको छ । अर्थात् जुनसुकै धर्मका कुरालाई पनि वज्रयानमा विलीन गरी वज्रयानको सिद्धान्त र विचारमा आकर्षण गरी वास्तविकतामा पुऱ्याउने लक्ष्य वज्रयानले राखेको देखिन्छ ।

अरु मतावलम्वीहरुले जस्तै वज्रयानीहरुले पीठ पूजा गर्दछन् । यहाँका वज्रयानीहरुमा दीक्षा लिइसकेपछि पीठ पूजा गर्ने प्रचलन छ । पीठमध्ये प्रधान पीठको रुपमा चन्द्रलखु नामको पीठमा सबभन्दा पहिले रात्रि पूजा गरिन्छ । हाल सो पीठ श्री ५ महाराजाधिराजको राजदरवारकोभित्र पूर्वतिर रहेको छ । अद्यापि त्यो पीठमा अनुमति प्राप्त गरी पूजा पाठ गरिन्छ ।

उपर्युक्त देवताहरुको चक्र, पीठ, मण्डल, पूजा, होम, जप, वज्रगीत (चचा), वज्रनृत्य, पञ्चताल आदि विविध क्रियाकलापहरु वज्रयानमा प्रयोग गरिएका छन् । ती संपूर्ण पूजाविधि आदि बाह्य सिद्धिसाधनकै निमित्त मात्र प्रयोग गरिएका हुन् । परन्तु ती पूजा आदिद्वारा पनि क्रमशः निर्वाण लाभ गराउन वज्रयानले उत्प्रेरणा गरिरहेको हुन्छ । जुन कुरा वसन्ततिलकको टीकामा कृष्णाचार्य सिद्धले यसरी व्यक्त गरेको छ -"मण्डलाधिमुक्ताः प्रवर्तन्तां तावत्तत्करण भावनायाम् । पश्चात्तद्वारेणैव तेषां निःस्वभाव सिद्धानीति बाह्याभिनिवेशं त्याजयित्वा ऽऽध्यात्मेष्ववतार्यन्ते इति" अर्थात् मण्डल आदिमा दृढ विश्वास गर्नेहरुले मण्डल मूर्ति आदिको पूजा गरुन्, त्यसमा केही छैन । त्यही पूजाद्वारा तिनीहरुलाई पछि विस्तारै सबै वस्तु निःस्वभाव हुन् भन्ने कुरा बुझाई बाह्य पूजा, होम, जप आदिको आसक्ति छुटाई आध्यात्ममा लगाइने हुन्छ ।

यी उपर्युक्त कृष्णाचार्य सिद्धको विचारबाट जुनसुकै पूजा कर्मकाण्ड गरे पनि तथा अरु धर्मका नाना विधि विधानहरु वज्रयानमा प्रयोग गरिएतापनि ती सबै केवल बुद्ध धर्ममा अवतरण गराउनुको निमित्त मात्र हुन् भन्ने कुरा स्पष्ट हुन्छ । वास्तवमा शून्यता (निःस्वभाव) भावना गराउनु नै वज्रयानको एकमात्र प्रमुख उद्देश्य हो भन्नुमा अतिशयोक्ति छैन, जुन कुरा कालचक्र अध्यात्मपटलमा यसरी उल्लेख गरिएको छ - "तस्मात्सत्वार्थमेकं कुरु नृपमनसा भावनां निःस्वभावम्" हे सुचन्द्र महाराज प्राणीहरुलाई उपकार गर्दा धर्म हुने, दुःख दिंदा पाप लाग्ने हुनाले प्राणीहरुको निमित्त निःस्वभाव (शून्यता) को भावना गर्नुहोस् ।

यतिमात्र होइन, प्रत्येक वज्रयानीहरुले हालसम्म पनि एउटा सानो थालीमा फूल, अक्षता, धूप बाली जुनसुकै देवताको पूजा गर्दा पनि सर्वप्रथम संकल्प गर्छ र त्यसपछि तलका वाक्य पढी शून्यताको भावना गर्दै पूजा शुरु गर्दछन् - "स्वभाव शुद्धाः सर्वधर्मा, स्वभाव शुद्धोहं, शून्यता ज्ञानवज्र स्वभावात्मकोहं" अर्थात् सबै पदार्थहरु स्वभावैले शुद्ध छन्, अतः म पनि स्वभावैले शुद्ध छुं साथै म शून्यताज्ञानरुपी अच्छेद्य, अभेद्य वज्र स्वभावको पनि छुं इत्यादि भनी सम्पूर्ण संसारलाई नै शून्यता भावना गर्ने हुन्छन् ।

मन्त्रयान तथा पारमितानयको समष्टि रुप नै वज्रयान हो भन्ने कुरा माथि पनि उल्लेख भइसकेको छ । मन्त्रयानले विज्ञानवादलाई स्वीकारेको तथ्य वज्रयानको प्रधान ग्रन्थ हेवज्रतन्त्रबाट व्यक्त हुन्छ । जस्तै-

*"स एवासौ महाप्राणः स एवासौ जगन्मयः ।*
*भावाभावौ तदुद्भुतो अन्यानि यानि तानि च ॥*
*सर्वं विज्ञानरुपं च पुरुषः पुराण ईश्वरः ।*
*आत्मा बीजं च सत्वं च कालः पुद्गल एव च ॥*

अर्थात् महाप्राण भने पनि जगन्मय भने पनि यी सबै आलय विज्ञानै मात्र हो । भाव पदार्थ तथा अभाव र अरु सवै वस्तुहरु पनि आलय विज्ञानवाटै उत्पन्न भएका हुन् । पुराण, पुरुप भन, ईश्वर भन, आत्मा, बीज, सत्व, काल, पुद्‌गल जे भन यी सवै आलय विज्ञानकै रुप मात्र हुन् ।

यसरी विज्ञानवादलाई स्वीकार गरिएतापनि वज्रयानको आलय विज्ञान मन्त्र तथा मूर्तिहरुको उत्पत्ति गर्नुको निमित्त मात्र रहेछ भन्ने कुरा नामसङ्गीतिको प्रत्यवेक्षणा ज्ञानको २३ श्लोकवाट व्यक्त हुन्छ -

*"विज्ञान धर्मतातीतो ज्ञानमद्वयरुपधृक ।"*

अर्थात् भगवान् बुद्ध आलय विज्ञानभन्दा पनि परको हुनुहुन्छ । उहाँ ज्ञानस्वरुपको हुनुहुन्छ, अद्वय रुप धारण गर्नुहुन्छ । भाव तथा अभाव यी द्वयरहितको रुप धारणा गर्नुहुन्छ । यो वाक्यवाट वज्रयानले विज्ञानवादीको आलय विज्ञान र नि:स्वभावको अद्वय ज्ञानलाई कसरी अंगालेको छ भन्ने कुरा स्पष्ट हुन आउँछ ।

यति मात्र होइन, वसन्ततिलकको टीकामा उल्लिखित निम्न पंक्तिले पारमितानय र मन्त्रनयलाई वज्रयानले कसरी एकलोलीभूत गर्ने प्रयास गरेको छ भन्ने कुरा पनि व्यक्त हुन्छ । जस्तै -

*नि:स्वभावपदाभ्यासाद् देवता रुपभावना ।*
*सामता महती पूजा सर्ववुद्ध प्रसाधनी ॥*

अर्थात् देवताको रुप भावना गर्दा नि:स्वभाव (शून्यता, भूतकोटि, अद्वय) लाई पनि एकसाथ भावना गर्ने अभ्यास गर्नु उचित छ । सबै बुद्धहरुलाई प्रसन्न पार्ने यही महान् पूजा हो ।

यसरी विभिन्न सम्प्रदाय तथा मत मतान्तरका कुराहरुलाई पनि आत्मसात् गर्दै आफ्नो सिद्धान्तलाई प्रचार गर्दै आएको हुनाले नै वज्रयानका ग्रन्थहरु तथा संस्कृतिहरु हालसम्म पनि प्रचुरमात्रामा प्राप्त हुन सकेका हुन् । वास्तवमा वज्रयानको उपलव्धि यही हो । धर्मसमन्वय नै वज्रयानको महानतम प्रतीक हो ।



# वज्रयान थुइकेगु नियम

वज्रयानयागु अध्ययन गथे याना यायेमा धैगु खँ आपासिनं मथुया वना च्वंगु खनेदु । क्रमवद्ध रुपं थुइके सयके माःगु थ्व दर्शन गथे याना अध्ययन यायेमा धैगु सन्दर्भय् हेवज्रतन्त्रयागु विनय पटलय् थथे च्वया तल -

*पोषधं दीयते प्रथमं तदनु शिक्षापदं दशं ।*
*वैभाष्यं तत्र देशेत सूत्रान्तं वै पुनस्तथा ॥*
*योगाचारं ततः पश्चात् तदनुमध्यकं दिशेत्*
*सर्व मन्त्रनयं ज्ञात्वा ततो हेवज्रमारभेत ।*
*गृह्णीयात् सादरं शिष्यं सिद्धयते नात्र संशय ॥*

अर्थात् हेवज्रतन्त्रया विनय पटलयागु क्रमअनुसार अष्टाङ्ग उपोषधयागु ज्ञान निं न्हापा बिइमा । अले वयात दशशीलयागु उपदेश थुइका स्थविरवादया वैभाषिक सिद्धान्तयागु खँ थुइका बिइमा । अले वं कथहं सौत्रान्तिक यागु खँ थुइके फई । थ्व थुलकि योगाचारयागु खँ अपुक हे थुई । अनंलि माध्यमिकयागु खँ नं थुइ । थुगुकथं खँ थुलकि मन्त्रयानयागु खँ थुई । च्वय् कनावयागु खँ थुम्हसिनं जक वज्रयान क्वातुक थुइका काये फई धैगु वज्रयानया प्रधानगु ग्रन्थ हेवज्रतन्त्रयागु धापु खः ।

थुलिमध्ये स्थविरवादयागु खँ आपासिनं स्यूसां दर्शनयागु सच्चा खँ थुपि भचा जक दइगुला सकसिनं स्यू । अले थौं तक्क छगू निगू उद्धरण बियातःगु बाहेक सौत्रान्तिकतय्गु ग्रन्थ जिं मखनानि । कालचक्रया धापुकथं सौत्रान्तिकतय्गु ग्रन्थ सिन्धभाषां च्वया तल धकाः विमलप्रभा टीकाय् च्वया तल । असंग वसुबन्धुपिनिगु प्रयत्नं योगाचारयागु ग्रन्थ आपालं दु । उलि जक मखु, लङ्कावतार धयागु ग्रन्थला योगाचार सिद्धान्तयागु हा हे धासां ज्यू । थ्वहे दर्शन थुसा मन्त्रयान पक्का नं थुइ । अथे जूगुलिं योगाचार थुइकेत लङ्कावतारयागु छपू श्लोक क्वय् उल्लेख याना च्वना –

*पञ्चधर्माः स्वभावश्च विज्ञानान्यष्ट एव च ।*
*द्वे नैरात्म्ये भवेत्कृत्स्नो महायान परिग्रहः ॥५॥*

- लं.व.पृ. ९३

न्यागू धर्म, स्वंगू स्वभाव, च्यागू विज्ञान, निगू नैरात्म्य थुलकि सम्पूर्ण महायान थुल धैगु योगाचारतय्गु विचार दु । अथे जूगुलिं च्वय् कना वयागु फिंच्यागु छि छुं खँ उल्लेख यायेगु उचित ताया ।

महामति बोधिसत्वयात श्री भगवानं थथे आज्ञा जुया बिज्यात- न्यागू धर्मयागु दुने स्वंगू स्वभाव, च्यागू विज्ञान, निगू नैरात्म्य नं दुथ्याका त:गु दु धका: सिइकेमा । नाम व निमित्तयात परिकल्पित स्वभाव धका धाई । हानं हे महामति बोधिसत्व ! व हे नाम व निमित्तयात आश्रय कया चित्त व चैतसिकयागु रुपय् विकास जुई, उत्पन्न जुई । निभाद्य: त्वइवले नापं प्वालाक्क रश्मि नं छ्चाखेरं फिंजय् जुई थें विकल्प व विकल्पया आधार जुया च्वंगु स्वभाव पिहां वई, वयात परतन्त्र स्वभाव धाई । सम्यक ज्ञान वा तथतायात परिनिष्पन्न स्वभाव धाई । थ्व स्वंगू स्वभावयागु खँ शुन्यता ज्ञान धैगु लेखय् विस्तृत रुपं च्वया तयागु दु । व नं स्वया बिज्यासा असल जुई ।

हे महामति ! निमित्त, नाम, विकल्प, तथता, सम्यक ज्ञान थुलि न्यागूयात थन पञ्च धर्म धागु ख: । आकार-प्रकार, तुयु-हाकु आदि रङ्ग तथा ताहा-चिकिहा, आपा-भचा आदियात निमित्त धाई । थ्वहे निमित्तयात कयेपुना थ्व काप: ख:, थ्व लं वस: ख: धका नां छुइगुयात नाम धाई । थ्व नाम अर्थात घ: धका: नां काये मात्रं भीगु मनय् ल: तयेगु घ: आदि लुमना वइगु हे चित्त चैतसिक विकल्प ख: । जव नाम व निमित्त धैगु निश्चयनं दुगु मखु धैगु दृढ विश्वास जुई, अले भीगु बुद्धि लीन जुया वनि, ग्राह्य ग्राहक भाव मदया वनि । उगु अवस्थायात हे तथता धा:गु ख: । व तथतायात अनुभव यायेगु ज्ञान हे जिं थें न्हापायापिं तथागतपिसं नं वर्णन याना वंगु ख । थ्व हे ज्ञानयात सम्यक ज्ञान धाई । थुलि च्वय् कना वयागु न्यागू ज्ञानया दुने स्वंगू स्वभाव, च्यागू विज्ञान, निगू नैरात्म्य नं दुथ्या धैगु खँ सकसिनं सिइके बह: जू । च्वय् न्यागू धर्मयागु खँ वन । संक्षिप्तं स्वंगू स्वभावयागु खँ नं उल्लेख याये धुन । आ: च्वये थे लङ्कावतारयागु आधारकया च्यागू विज्ञानयागु खँ नं उल्लेख याना च्वना ।

योगाचार सिद्धान्त अनुसार सम्पूर्ण विश्वया पुसा थें जागु आलय विज्ञान दु । व आलय विज्ञानय् अनादिकालनिसें नाना प्रकारयागु भावनाया पुसा प्यपुना च्वंगु दु । व हे प्यपुना च्वंगु मनयात क्लिष्ट मनोविज्ञान धाई । थ्वहे मनं याना जि, जिं धया च्वंगु ख: । थ:त माया यायेगु व जि धका अभिमान यायेगु क्लेश थाहां वया च्वंगु ख । चक्षुर्विज्ञान, श्रोत्रविज्ञान, घ्राणविज्ञान, जिह्वाविज्ञान, कायविज्ञान, मनोविज्ञान थ्व खुगू विज्ञानयात प्रवृत्तिविज्ञान धाई । थुगु कथं च्यागू विज्ञान दतसां योगीजनपिसं

न्हयेगू विज्ञान व हे आलय विज्ञानं दया व:गु ख: धका: भावना यायेमा धैगु खँ व्यक्त यायेत लङ्कावतार सूत्रया २१ पृष्ठय् थथे च्वया तल –

*न चान्येन च नानन्येन तरङ्गा ह्युदधेर्मता ।*
*विज्ञानानि तथा सप्त चित्तेन सह संयुता: ॥१०२॥*
*उदधे परिणामो ऽ सौ तरङ्गानां विचित्रता ।*
*आलयं हि तथा चित्र विज्ञानाख्यं प्रवर्तते ॥१०३॥*
*चित्तं मनश्च विज्ञानं लक्षणार्थं प्रकल्प्येत ।*
*अभिन्नलक्षणा ह्यष्टौ न लक्ष्या न च लक्षणम् ॥१०४॥*

अर्थात् समुद्रयागु तरङ्ग गथे समुद्र हे बाहेक मेगु मखु, समुद्र हे नं मखु । अथे हे चित्त (आलय विज्ञान) मेगु क्लिष्ट मनोविज्ञान व खुगू प्रवृत्तिविज्ञानया नं न्हयेगू विज्ञान त भिन्नै मखु । गथे समद्रयागु तरङ्गत समुद्रयागु हे छगू परिणाम (अवस्थान्तर) ख:, अथे हे न्हयेगू विज्ञानत नं आलय विज्ञानयागु हे परिणाम (अवस्थान्तर) ख: । आलय विज्ञान क्लिष्ट मनोविज्ञान, खुगू प्रवृत्तिविज्ञानयागु भेद क्यनातगुला लक्षण (चिं) म्हसिकेत जक ख: । च्यागू विज्ञानया नं भिन्नै लक्षण मदु । चित्त (आलय विज्ञान) बाहेक न लक्षण दुगु वस्तु दु, न त लक्षण हे दु ।

जि, जिगु धका धयाच्वंम्ह थन आत्मा धागु ख: । व आत्मा मदु धका: अहंकार, ममकार मदयक्येगु भावनायात पुद्गल नैरात्म्य भावना धाई । विश्व व्यापकगु आलय विज्ञान छगू सिवय् मदु । छुं नं मदु धका भावना यायेगुयात धर्म नैरात्म्य भावना धाई । थ्व हे पुद्गल नैरात्म्य व धर्म नैरात्म्ययात च्वय् कनाथें "द्वै नैरात्म्य" निगू नैरात्म्य भावना धागु ख: । थुलि थुलकि फुक्क महायानयागु सारांश थुइ धका: लङ्कावतारय् च्वया त:गु ख: ।

च्वय् कना वयागु माध्यमिकवाद तथा विज्ञानवाद धुंका आ: क्वय् संक्षेपं मन्त्रयानयागु खँ च्वया च्वना । कालचक्र तन्त्रयागु टीकाय् मन्त्रयान व वज्रयानयागु विषये थथे च्वया तल "तस्मात श्री वज्रयाने प्रवृत्ति वज्रमभेद्यमच्छेद्य महदिति तदेवयानं मन्त्रयानं पारमितानय फलहेत्वात्मकमेकलोलीभूत तस्मिन्प्रवृत्ति वज्रयाने प्रवृत्ति ।"

अर्थात् वज्र शब्दया अर्थ अभेद्य (तमज्याइगु), अच्छेद्य (त्वाल्हाये मज्यूगु) अथे जूगुलिं महानगु धागु ख: । अले यान (उपाय वा मार्ग) यात हे वज्रयान धागु ख: । अले हानं मन्त्रयान फलात्मक (फलस्वभावगु) ख: । पारमितायान हेत्वात्मक (कारण स्वभावगु) ख: । थ्व मन्त्रयान व पारमितायान निगूलिं छगू जुया च्वंगु यान हे

वज्रयान ख: । उजोगु वज्रयानय् प्रवृत्ति जुइगु अर्थात् लगय् जुइगु दुर्लभ धका: धया तल ।

उपर्युक्त वचनानुसार मन्त्रयान धैगु फलस्वभावगु अर्थात् निर्वाणयागु आचरण यायेगु स्वभावगु धैगु स्पष्ट जू । मन्त्रयानयागु ग्रन्थ अलग जिं मखनानि । तर नामसङ्गीति मन्त्रयानया ग्रन्थ अवश्य जुईफु । नामसङ्गीति अनुशंसा प्रकरणय् व वया टीका नाममन्त्रावलोकिनी धैगु ग्रन्थय् मन्त्र मुखचर्याचारि शव्द प्रचुर मात्राय् च्वया त:गु दु । अथे जूगुलिं नामसङ्गीति मन्त्रयानयागु ग्रन्थ ख: धका जिं भापा । नामसङ्गीतिस वज्रधातु मण्डल, पञ्चबुद्ध, वज्रसत्वयागु उल्लेख याना त:गु दु तथा पटकुलयागु वर्णन नं दु । थुगुकथं थुकिइ उल्लेख यानात:पिं च्व:पिं फुक्कं मन्त्रयानया च्व:पिं ख: । मन्त्रयानय् नं पारमितानय् थें संवृत्ति सत्य व परमार्थ सत्ययागु आधारय् धर्मदेशना याइगु ख: । वयात हे क्रमश: नेयार्थ व नीतार्थ धका: नं धाई । "यो लोक संवृत्या सवर्ण भुज चिन्ह संस्थान लक्षण । य परमार्थ सत्य स: सर्वभुज चिन्ह संस्थानरहित" अर्थात् लौकिक सत्यकथं रङ्ग ल्हा: चिन्ह (ज्वंसा) आकारयागु लक्षणं अनेक देवदेवतापिनिगु पूजा भाव जुई । थ्व यानागुलिं लौकिक सिद्धिसाधनयागु फलं लाभ जुई । रुप, रङ्ग, आकार मदुगु भावनां निर्वाण लाभ जुई वा महामुद्रा सिद्धि लाभ जुई धा, छगू हे खँ ख: । थ्व सत्यगु विचारधारायात छगू हे भापा भावना यायेगुयात प्रज्ञोपायात्मक वज्रयोग नं धाई तथा महार्थ, परमाक्षर, आदिबुद्ध, निरन्वय, कालचक्र, वज्रसत्व आदि पर्यायवाचक शब्दं विभिन्न तन्त्रय् उल्लेख याना त:गु दु । थ्वहे वज्रसत्व भगवान्‌यात हेतु स्वभावगु पारमितानय "प्रज्ञापारमिताया स्वाभाविककाय" धका: उल्लेख याना तल । व हे भगवान् वज्रसत्वयात फलस्वभावगु मन्त्रयानय् सहजानन्द, सहजकाय धका: नं धया तल । झीगु शरीरय् दुगु क्लेशयुक्तगु पञ्च उपदान स्कन्धत क्लेशरहित जुलकि पञ्चस्कन्ध हे पञ्चबुद्ध जुई धैगु मन्त्रयानया धापु ख: । थन मन्त्रयानया हिसाब मन्त्र धैगु छु ख: धयागु विषय थन छु खँ उल्लेख याये वहजु ।

"इह त्रैधातुके स्थिर चल धर्माणां यद यस्य नाम तस्य नामस्याद्यक्षरं नामस्य तदेव चित्तवज्रं भवति नरपते देवता देव बागवज्र सर्वनाम" - *कालचक्र पृ. ३००*

पृथिवी आदि स्थिर वस्तु व मनुष्य आदि चल वस्तु थ्व त्रिधातुई दयाच्वन । व नाया न्ह्यने च्वंगु आख:यात चित्तवज्र धाई । वयात हे बीजाक्षर नं धाई । पूरा नांयात बागवज्र धाई अर्थात् ला, मां, पा, ता थ्व बीजाक्षर चित्तवज्र जुल । अथे हे क्रमश: लोचनी, मामकी, पद्मिनी वा पाण्डुरा, तारा बागवज्र जुल । नामाक्षरनाप मेगु नं शब्द दुगुयात कायवज्रमन्त्र धाई अर्थात् ॐ तारे तुत्तारे तुरे स्वाहा, ॐ पाण्डरवासिनी

वरदे स्वाहा, ॐ मामकी किरिकिरि स्वाहा, ॐ लोचने वरदे स्वाहा धैगु थ्वया चित्तवज्र, कायवज्रसहितगु मेगु शब्द नं दुगु मन्त्रयात कायवज्र धाई । कायवज्र मन्त्र स्वया नं ताहाकःगु देवतापिनिगु वर्णनसमेत दुगु मन्त्रयात मालामन्त्र तथा प्रत्यङ्ग मन्त्र नं धाई । थुलि स्वंगू प्रकारया मन्त्रमध्ये चित्तवज्र मन्त्र ध्यान भावना यायेत प्रयोग जुई । वागवज्र मन्त्र ध्यान व यज्ञ यायेत प्रयोग जुई । कायवज्र मन्त्र जप यायेत प्रयोग जुई धैगु धापु खः।

योगाचारया सिद्धान्तअनुसार आलय विज्ञानय् छु छु पुसा पिल, व हे बुया वई धैगु आधारय् थ्व मन्त्रत व देवतात नं उत्पत्ति जुया वई धैगु खं कालचक्र १५२ पृष्ठय् थथे धया तल -

*येन येन हि भावेन मनं संयुज्यते नृणां ।*
*तेन तन्मयतां याति विश्वरुपो मणिर्यथा ॥*

अर्थात् मनुतय्सं गुगु खं दृढ विश्वासपूर्वक मनय् तल व खं मनय् प्यपुना मनोमय जुया उत्पत्ति जुया वई । गथे यच्चुसे च्वंगु मणि वा न्हायकनय् विश्वय् च्वंगु फुक्कं वस्तुया प्रतिविम्व खनेदई, अथे हे व आलय विज्ञानय् बुद्ध, तारा, महाद्य, राम आदि फुक्क देवतापिं प्रकट जुया थ्व हे आधारय् अनेक देवतापिनिगु मूर्ति, मन्त्र मन्त्रयानय् उत्पन्न जूगु खः ।

आः थन वज्रयानयागु छुं भचा खं नं न्ह्यथने त्यना । खला वज्रयान धयागु मन्त्रयान व पारमितायानयागु सम्मिश्रण खः धका च्वय् हे उल्लेख याये धुन । अथे जूसां वज्रयानया मूल ग्रन्थ हेवज्रतन्त्रय् मन्त्रयान व पारमितायानयागु सम्मिश्रण जुया च्वंगु खः धैगु छुं भचा उदाहरण विया च्वना -

*स एवासौ महाप्राण स एवासौ जगन्मय ।*
*भावाभावो तदुद्भुतो अन्यानि यानि तानि च ॥*
*सर्व विज्ञानरुपं च पुरुप पुराण ईश्वर ।*
*आत्मा वीजं च सत्वं च काल पुद्गल एव च ॥*

— हेवज्रअभिषेकपटल

महाप्राण धा, जगन्मय धा, व आलय विज्ञान हे जक खः । थ्व संसारय् गुलि भाव तथा अभाव पदार्थ दु, अथे हे मेमेगु फुक्कं आलय विज्ञानं हे उत्पन्न जूगु खः । पुराण, पुरुष, ईश्वर, आत्मा, विश्वबीज, सत्त्व, काल, पुद्गल नं आलय विज्ञानयागु हे रुप जक खः । च्वय् उल्लेख यानागु वाक्य योगाचार तथा मन्त्रयानयात वज्रयानं सिद्धिसाधन यायेत उपयुक्त जूगुलिं कयातःगु स्पष्ट जू ।

आः पारमितानय वा माध्यमिकयात निर्वाण(तत्व)या निमित्त ग्रहण याना त:गु छगू उदाहरण क्वय् प्रस्तुत याना च्वना -

*"तत्व व्याख्यास्याम स्वरुपेण*
*नास्ति रुपं न द्रष्टा च न शव्दो नापि श्रोता च ।*
*गन्धो नापि घ्राता च न रसो नापि रासक ॥*
*न स्पर्शो नापिस्प्रष्टा च न चित्त नापि चैतिकम् ॥"*

– हेवज्रतन्त्र तत्वपटल पञ्चम

अर्थात् न रुप दु, न त स्वइम्ह हे दु । न शव्द दु, न त न्यनिम्ह हे दु । न गन्ध दु, न त नतुनिम्ह हे दु । न रस दु, न त सवा काइम्ह हे दु । न स्पर्श दु, न त थ्यूगु चाइम्ह हे दु । न चित्त दु, न त चित्तं सिकेगु वस्तु हे दु । थुजोगु वस्तु हे तत्व खः, परमार्थ सत्य खः, निर्वाण खः ।

थुगुकथं वज्रयानं मन्त्रयान व पारमितायानयात दुथ्याका त:गु आपालं उदाहरण दु । अथे जूगुलिं हेवज्रतन्त्रया विनय पटलयागु सूत्रकथं वज्रयान अध्ययन याये मा:गु खँ स्पष्ट जू ।



# वज्र महायान वज्रयान

श्रावकयान, प्रत्येक बुद्धयान र महायान यी तीनै यानको व्याख्यान गर्ने हुनाले श्री भगवान् बुद्धलाई परापूर्व कालदेखि नै "त्रियानोत्मदेशक" भनिन्छ । यो कुरा नामसङ्गीति र मायाजालतन्त्रबाट पनि स्पष्ट हुन्छ । भगवान्ले जसरी यी तीन यानको वर्णन गर्नुभयो, अरु कसैले पनि वर्णन गरेको पाइदैन । यहां श्रावक शब्दको अर्थ हो, सुन्ने अर्थात् गुरुबाट ज्ञान सुन्ने व्यक्ति । प्रत्येक बुद्ध भनेको प्रत्येक अलग, अलग वोधिज्ञान आफैंले हासिल गर्ने व्यक्ति हो । उहाँहरु कसैलाई पनि धर्म उपदेश दिने गर्दैन, आफैंमा सीमित रहन्छ । यी श्रावक र प्रत्येक बुद्धभन्दा विशेष गुण भएको व्यक्तिलाई सम्यक सम्वुद्ध भनिन्छ र सम्यक सम्वुद्धलाई नै सबभन्दा महान मानिन्छ । अनि उहाँको मार्ग(यान)लाई नै महायान भनिन्छ ।

श्रावक स्थविरहरुको एउटै उद्देश्य हो, अर्हत्व लाभ गर्नु र बहुजन हिताय, वहुजन सुखायको लागि धर्मदेशना गर्नु ।

प्रत्येक वुद्धहरुको उद्देश्य प्रत्येक वुद्धत्व लाभ गर्नु हो । उहाँहरु आफैंमा सीमित रहनुहुन्छ, आफूले हासिल गरेको ज्ञान कसैलाई पनि उपदेश दिनु हुन्न ।

सम्यक सम्वुद्धको उद्देश्य हो, "बुद्धोभवेयम् जगतो हिताय" अर्थात् वुद्धत्व लाभ गर्नु मात्र मेरो उद्देश्य होइन, जगत हित गर्नको लागि नै म वुद्ध हुन सकूं भन्ने उहाँको महान उद्देश्य हो ।

यसरी श्रावक, प्रत्येक वुद्ध, सम्यक सम्वुद्धको अर्थ र उद्देश्य वर्णन गरिसकेपछि "यान" शव्दको अर्थ के हो, केही विचार गर्नु उपयुक्त होला । सद्धर्मपुण्डरीक सूत्रमा "यान" शव्दको दिग्दर्शन गराउने एउटा कथाको उपमा दिइएको छ । एउटा चतुशाला (चोक सहितको) घर भएको एउटा महाजन थिए । उनका आठ, दश वर्ष उमेर भएका तीनवटा छोराहरू थिए । एक दिन महाजन वाहिर गएर फर्कंदा आफ्नो घरको चारै दिशामा आगो लागेर दनदनी वलिरहेको देखे । भित्र गएर आफ्ना छोराहरुलाई वाहिर ल्याउने आँट उनमा भएन । वाहिरैवाट "हे वाबु हो ! वाहिर आऽऽऽ, वाहिर आऽऽऽ भनेर चिच्याउन थाले । जति चिच्याएर बोलाउँदा पनि ती वच्चाहरु सुनेको नसुन्यै गरी भित्र चोकमै बसेर पुतली खेल खेलिरहेको महाजनले देखे । अनि साहुलाई झ्वाट्ट मनमा आयो, हे बाबुहरु हो ! तिमीहरुलाई मैले अश्वयान (घोडाले तान्ने रथ), गोयान (साँढेले तान्ने

रथ) र अजयान (बाखाले तान्ने रथ) ल्याईदिएको छु, आऊ लिन आऊ, चाँडै आऊ भनी बोलाउँदा दनदनी बलिरहेको आगोको परवाह नगरी ती बच्चाहरु त्यो चोकबाट बाहिर आए । अनि महाजनले भने, "हे बाब नानीहरु हो । मैले तिमीहरुलाई अश्वयान, गोयान र अजयान कुनै पनि ल्याएको छैन । तिमीहरुले हाम्रो घर दनदनी बलिरहेको देख्यौ । यदि तिमीहरु बाहिर नआएको भए तिमीहरुलाई कति दुःख कष्ट हुन्थ्यो होला । मैले त तिमीहरुलाई त्यो दुःख कष्टबाट बचाउने उपाय गर्नलाई मात्रै तिमीहरुलाई मनपर्ने यो रथ दिउँला, त्यो रथ दिउँला भनेर लोभ्याएको हो" ।

उपर्युक्त कथामा जस्तै मनुष्यको स्वभाव हेरी श्रावकयान, प्रत्येक बुद्धयान, महायानको प्रलोभन देखाई रागादि क्लेशरुपी आगो बलिरहेको यो संसारबाट बाहिर ल्याउनलाई मात्र बुद्धले उपाय कौशल्य प्रयोग गरेको हो । अतः तीनैवटा यान बुद्धयान नै हुन् अर्थात् "यान" शब्दबाट सांसारिक दुःखबाट मुक्त हुने रथ, मार्ग वा उपाय भन्ने अर्थ स्पष्ट हुन्छ ।

मनुष्यमात्रको चाहना नयाँ कुरा हेरुं, नयाँ कुरा लगाउं, नयाँ नयाँ सुनूं भन्ने रही आएको देखिन्छ । यही मानवीय चाहना अनुरुप धर्मलाई पनि बेला बेलामा नवीकरण गरी लैजाने अभिभारा सिद्ध, साधक, आचार्यहरुले सम्हालेको देखिन्छ । यहाँ एक थरी (अनुदारवादी)ले नयाँ चालचलन र प्रगतिलाई स्वीकार्न सकिरहेका छैनन् त एक थरी (प्रगतिशील) वर्ग नयाँ नयाँ प्रचलनलाई आत्मसात गर्न खोजिरहेका छन् । अनि यी दुई वर्गको खिचातानीमा बहुसंख्यक समाज जतातिर ढल्किन्छ, त्यही सिद्धान्त, त्यही चालचलन अघि बढ्दै जानु नैसर्गिक तथ्य हो । यही कुरा बौद्ध इतिहासमा पनि लागु भइरहेको पाइन्छ । बुद्धको पुरानो मत र नयाँ मतको बीचमा खिचातानी भइरहेकै छ । एक थरीले भन्छन्, "निर्वाण (मोक्ष) मात्र भएर के फाइदा, बरु "बुद्धो भवेयम् जगतो हिताय" भन्ने महायान नै सर्वोत्तम छ । यस महायानको प्रवाहमा गृहस्थी बोधिसत्वहरुले धेरै उत्साह र जाँगर देखाए । लोकको उपकार एवं उद्धारको लागि विविध प्रकारका जीवनवृत्ति रोजगार हासिल हुने शिल्पकलाहरु बोधिसत्व (महायानी) हरुले सम्पादन गर्न थाले, जसको परिणामस्वरुप अद्यापि सुन, चाँदी आदि धातुसम्बन्धी काम, मूर्तिकला, चित्रकला, गृहनिर्माण र चैत्यसम्बन्धी वास्तुकला, काष्ठकला आदि शिल्पको काममा बौद्धहरुलाई अब्बल दर्जाका कलाकार मानिन्छन् । यति मात्र होइन, महायानी बौद्धहरुले प्रतिपादन गरेका कामकला सम्बन्धी सिद्धिसाधन

धारणा गरेकी भन्ने देखाउँछ । तथा ठूलो खट्वाङ्ग धारणाले पनि बोधिचित्त धारणा गरेको कुरा व्यक्त हुन्छ । शिरमा पाँच कपाल धारणा गर्नुको उद्देश्य महासुख चक्रमा बोधिचित्त र पञ्चशून्यता धारणा गरेकी भन्ने कुरा व्यक्त हुन्छ । आलि अर्थात् अ आ आदि १६ स्वर र कालि अर्थात् क ख आदि व्यञ्जन ३३ रुपी मुण्डमाला पहिरेकी भन्ने देखाउँछ । मुखबाट रक्त चुहेको र ठूलो स्वरले कराएको वराह भन्नाले चतुर्मारको शून्यतारुपी रक्तपान गर्ने हुँदा सोही रक्त मुखबाट चुहेको भनेको हो । दुवै मुखमा तीन तीन आँखा भएको भन्नाले त्रिकालज्ञ भन्ने व्यक्त हुन्छ । मूल मुखमा केही क्रोधको भाव भएकी तथा विविध रसयुक्त भएकी भन्नाले नव नाट्य रस सबै देवीमा भएको कुरा व्यक्त हुन्छ । षडमुद्रा धारणा गरेकी भन्नाले दान, शील, क्षान्ति, वीर्य, ध्यान, प्रज्ञा यी छ पारमिताले पूर्ण भएको भन्ने कुरा सूचित गर्छ । वस्त्र नलगाएकी भन्नाले राग द्वेषादि, क्लेशावरण र ज्ञेयावरण नभएकी भन्ने बुझाउँछ । वज्रयोगिनी सधैं सोन्ह वर्षकी जस्ती देखिन्छिन् भन्नाले अध्यात्मशून्यता आदि सोन्ह प्रकारको शून्यता स्वरुपकी भन्ने कुरा व्यक्त हुन्छ । अति लक्षण र सौंदर्यले युक्त शरीर भएकी भन्नाले शत सहस्र कल्पदेखि पुण्य संचय गरेकी हुनाले उहाँको शरीरमा यस्तो गुण गौरव भएको हो भनी वज्रयोगिनीको शिरको दायाँतिरबाट वराहको शिर निस्केको छ । त्यसकारण उहाँलाई वज्रवाराही पनि भनिएको हो । प्राय: उहाँको पूजा दश भूमीश्वरत्व लाभ होस् भन्ने प्रणिधानले दशमीको दिन गरिन्छ । तत्व ज्ञान संसिद्धिमा वज्रयोगिनीको विधिवत ध्यान गरेमा यस्तो फल लाभ हुन्छ भनिएको छ -

*ध्यायति य:किरवक्त्रां प्रतिदिवसं यत्नतश्चतु : सन्ध्या।*
*हरि हर हिरण्य गर्भै र्जेतुमशक्यां मृत्युंजयति । ।*

अर्थात् वज्रवाराहीको प्रतिदिन चतु:सन्ध्या विधिवत् ध्यान गरेमा ब्रम्हा, विष्णु, महेश्वरले पनि जित्न नसकिने मृत्युलाई जित्ने हुन्छ । अर्थात् मोक्ष लाभ हुने हुन्छ ।

## वज्रयोगिनी सम्बन्धी दन्त्यकथा

एकदिन श्री हेरुक र वज्रयोगिनी एकान्तमा विनोदका कुरा गरिरहनु भएको थियो । वज्रयोगिनीलाई लौकिक र परमार्थ सत्य दुवैमा आफ्नू एकाधिपत्य भएको गर्व भएछ र श्री हेरुकसंग श्री वज्रयोगिनीले भन्नु भएछ- "प्रभु तीनै लोकका तथा परमार्थ सत्यका कुरा म यथार्थ जान्दछु तथा देख्दछु । हजुरलाई विश्वास नभए परीक्षा गर्नुहोस्" । यस्तो श्री वज्रयोगिनीको वचन सुनी श्री हेरुकले यस्तो आज्ञा भयो । त्यसो हो भने म अर्न्तध्यान हुन्छु अर्थात् लुक्छु । तिमीले मलाई भेट भनी आज्ञा भई

लुक्नु भएछ. । श्री वज्रयोगिनीले यत्र तत्र सर्बत्र खोज्दा पनि भेटाउनु भएन र वियोगले व्याकुल भई म हारें, दर्शन पाउं भनी धेरै अनुरोध गर्दा म यही त छु नि, तिमीले काखी च्यापेको खट्वाङ्ग मै छुं नि भनी श्री हेरुक खट्वाङ्गबाट प्रकट भई श्री वज्रदेवीलाई दर्शन दिनुभो भनी बुढापाकाहरु प्रज्ञोपाय स्वरुप श्री हेरुक तथा श्री वज्रयोगिनीको महिमा गाउँछन् ।

श्री वज्रयोगिनी देवीको धातु र ढुङ्गाका मूर्तिहरु पाइन्छन्, तर यी मूर्तिहरु प्राय: गुप्त आगममा मात्र स्थापना गरेको हुन्छ । श्री वज्रदेवीका तीन प्रकारका काठका मूर्तिहरु विजयेश्वरीमा पनि राखेका छन् । हाल श्री वज्रदेवीलाई आकाशयोगिनी, बिजयेश्वरी भनी भन्ने चलन जनसमाजले चलाएका छन्, तर सांखुको उग्रतारालाई भने वज्रयोगिनी भनी जनताहरु भन्दछन् । फर्पिङ्गमा भने धात्तुको उर्ध्वपाद श्री वज्रयोगिनीको धात्तुको मूर्ति स्थापना गरेको देखिन्छ । सो मूर्तिलाई जात्रा गरिन्छ ।

## षड्योगिनी

वज्रवाराही, यामिनी, मोहिनी, संचारिणी, संत्रासिनी, चण्डिका यी छ वटी देवीहरुलाई वज्रयानमा षड्योगिनी भनिन्छ । तत्वज्ञान संसिद्धिमा षड्योगिनीलाई षड्वीरेश्वरी पनि भनिएको छ । यस तन्त्रमा "कुर्वीताङ्ग न्यासं षडभिर्वीरेश्वरी मन्त्रै :" भनी नाभिमा वज्रवाराही, हृदयमा यामिनी, मुखमा मोहिनी, निधारमा संचारिणी, शिखामा संत्रासिनी, ललाटदेखि सर्वाङ्गमा चण्डिका देवी विराजमान हुनुहुन्छ भनी अङ्ग न्यासमा षड्योगिनीको प्रयोग गरेको छ भने सम्पूर्ण त्रिचक्र समाधिमा कर शोधन भावना निमित्त पनि षड्योगिनी प्रयोग गरेको छ । जस्तै श्री वज्रवाराही बुढी औंलामा, श्री यामिनी चोर औंलामा, श्री मोहिनी माझी औंलामा, श्री संचारिणी सांहिली औंलामा, श्री संत्रासिणी देवी कान्छी औंलामा तथा सम्पूर्ण हातमा श्री चण्डिका देवी विराजमान भएकी छिन् भनी भावना गरिन्छ ।

## श्री वज्रबाराहीदेवी

श्री वज्रबाराही देवी रक्त वर्ण, त्रिमुखी, षड्भुजाकी हुनुहुन्छ । मूल मुख रक्त वर्ण, वाममुख नील, दक्षिण मुख हरितवर्णकी हुनुहुन्छ । उहाँको प्रत्येक मुखमा तीन आंखा हुन्छन् । बायाँ तीन हातले क्रमश: कपाल, खट्वाङ्ग, पाश धारणा गरेकी तथा दायाँ तीन हातले क्रमश: अङ्कुश, ब्रम्हमुण्ड, कर्त्रिधारणा गरेकी हुनु हुन्छ । आलीढ पदमा रहनु भएकी मुक्तकेशी हुनुहुन्छ ।

## श्री यामिनीदेवी

नील वर्णकी एकमुखी त्रिनेत्री, मुक्तकेशी चतुर्भुजकी हुनुहुन्छ । बायाँ दुई हातले क्रमश: कपाल, खट्वाङ्ग धारणा गरेकी तथा दायाँ दुई हातले क्रमश: डमरु, कर्त्रि धारणा गरेकी, आलीढ पद गरेकी हुनुहुन्छ ।

## श्री मोहिनीदेवी

श्वेत वर्णकी एकमुखी, त्रिनेत्र भएकी तथा चतुर्भुज भएकी हुनुहुन्छ । बायाँ दुई हातले क्रमश: कपाल, खट्वाङ्ग धारणा गरेकी तथा दायाँ दुई हातले क्रमश: डमरु, कर्त्री धारणा गरेकी मुक्तकेशी र आलीढ पद गरेकी हुनुहुन्छ ।

## श्री संचारिणीदेवी

पीत वर्णकी, एकमुखी, मुक्तकेशी, त्रिनेत्री, चतुर्भुज भएकी हुनुहुन्छ । बायाँ दुई हातले क्रमश: कपाल, खट्वाङ्ग धारणा गरेकी तथा दायाँ दुई हातले क्रमश: डमरु, कर्त्री धारणा गरेकी आलीढ पद गरेकी हुनुहुन्छ ।

## श्री संत्रासिनीदेवी

हरित वर्णकी, एकमुखी, मुक्तकेशी, त्रिनेत्री, चतुर्भुज भएकी हुनुहुन्छ । बायाँ दुई हातले क्रमश: कपाल, खट्वाङ्ग धारणा गरेकी तथा दायाँ दुई हातले क्रमश: डमरु, कर्त्री धारणा गरेकी, आलीढ पद गरेकी हुनु हुन्छ ।

## श्री चण्डिकादेवी

धुम्र वर्णकी, एकमुखी, त्रिनेत्री, मुक्तकेशी, चतुर्भुज भएकी हुनु हुन्छ । बायाँ दुई हातले क्रमश: कपाल, खट्वाङ्ग धारणा गरेकी तथा दायाँ दुई हातले क्रमश: डमरु, कर्त्री धारणा गरेकी, आलीढ पद गरेकी हुनुहुन्छ ।

उपर्युक्त श्री षड्योगिनी देवीहरु श्री वज्रयोगिनीकै अभिन्न अङ्गहरु हुन् भन्ने जनधारणा छ । श्री वज्रयोगिनी मण्डलको षट्कोणमा यही छ योगिनीहरु रहेका हुन्छन् । वज्रयोगिनीका पौभा(थांका) मण्डलको रुपमा यत्रतत्र पाइन्छ । त्यसमा यी षड्योगिनीको स्पष्ट ध्यान देख्न सकिन्छ । यस बाहेक षड्योगिनीको धात्तु तथा काठ आदिको मूर्ति कहीं पाइदैन । माथि षड्योगिनीहरु आलीढ पदमा भन्नाले दायाँ गोडा खुम्चाई बायाँ गोडा सोझो राखेको भन्ने बुझाउँछ ।



# गौतम बुद्ध

गौतम शब्द त्रिपिटकहरुमा यत्रतत्र पाइन्छ । आचार्य बुद्धघोषले आफ्नो प्रतिभाको परिचय दिन लेखेको विशुद्धि मग्गोमा एउटा देवपुत्रको प्रश्न यसरी उपयोग गरेको छ -

*"अन्तोजटा वहिजटा जटाय जटिता पजा*
*तं तं गोतम पुच्छामि, को इमं विजटये जटम्"*

पालीको यो श्लोकमा गोतम शब्द प्रयोग गरेको छ । यस श्लोकको व्याख्याको कममा बुद्धघोषले गोतम शब्दको यसरी व्याख्या गरेको छ -

*"तं तं गोतम पुच्छामि ति तस्मा त पुच्छा*
*गोतमा ति भगवन्तं गोत्तेन आलपति"*

यसवाट देवपुत्रले बुद्धलाई गोतम भनी सम्वोधन गरेकोमा बुद्धघोषले "गोतम शब्द गोत्रवाचक हो" भनेको हो भन्ने स्पष्ट हुन्छ । हिन्दू परम्पराअनुसार काश्यप, गौतम आदि धेरै पुराना आचार्यहरुको कुल परम्परा देखाउन संकल्प आदि पढ्दा गोत्रको नाउँ लिने चलन हालसम्म पनि पाइन्छ । त्यसबेला पनि अर्थात् बुद्धको समयमा पनि गोत्रको नाउँ लिने चलन रहेछ भन्ने कुरा यस श्लोकको गोतम शब्दवाट व्यक्त हुन्छ । यति मात्र होइन, गोतम भनी सम्वोधन गर्दा बुद्ध हुनुभएका उहाँले गोत्रवाचक गोतम भन्ने नाम स्वीकार गर्नुभएको पनि देखिन्छ । बुद्ध शब्द भने धेरै पछि सिद्धार्थ गौतमले प्राप्त गरेको उपनाम हो । मायादेवीलाई दोहद उत्पन्न हुँदा आफ्नो माइती देवदहमा जाने इच्छा प्रकट गरेपछि शुद्धोदन महाराजले सुरक्षाको प्रवन्ध गरी पठाउनुभएको थियो । लुम्बिनीमा पुग्दा उहाँ सुत्केरी हुनुभयो । त्यसपछि, दरवारमा मायादेवी महारानीलाई ल्याइयो । यहाँनिर कसैले सालको रुखमुनि वालक जन्मे भनेका छन् भने कसैले अशोकको तथा पाखरीको रुखमुनि जन्मे भनेका छन् । जापानीजहरुको भगवान बुद्धका उपदेश भन्ने पुस्तकमा देवेन्द्र राज उपाध्यायले अनुवाद गर्दा अशोकको हाँगा भन्ने शब्द अनुवाद गरेको छ । यसरी पुरानो कुरा इद मिथं रुपले भन्न खोज्दा मत मतान्तरले ठाउँ पाएको देखिन्छ । गौतम राजकुमारले बुद्धत्व लाभ गरिसकेपछि म यसदिन जन्में, यो रुखको मुनि जन्में भनी कहीं पनि वोल्नुभएको पाईंदैन । केवल त्रिपिटकको अट्ठकथा भाष्यकार बुद्धघोष आदिले मात्र बुद्धको जन्ममरण तथा बुद्धत्वको तिथि मिति उल्लेख गरेको पाइन्छ । अशोक महाराजको ब्राह्मी लिपिमा लेखिएको शिलास्तम्भयाट लुम्बिनीको यस ठाउँमा

बुद्ध जन्मेको हो भनी हामी विश्वास गर्न सक्छौं । परन्तु बुद्ध जन्मेको तिथि मिति भने भारतमा लेखिएको कालचक तन्त्र तथा त्यसको टीका विमलप्रभाले केही साल मितिको अन्दाज गर्न सकिने वाक्यहरु उद्धरण गरेका छन् । अर्थात् ताजिक नामको मुसलमान धर्मको प्रवर्तन हुनुभन्दा आठसय वर्ष पहिले मञ्जुश्रीको समय हो तथा मञ्जुश्रीको समयदेखि छसय वर्ष पहिले बुद्धको समय हो भनी उल्लेख गरिएको पाइन्छ । केन्द्रिय उच्च तिब्बती शिक्षा संस्थान सारनाथबाट प्रकाशित कालचकमा यसरी लेखिएको छ -

*"आद्याब्दात् षट्शताब्दै: प्रकट यशनृप: सम्भलाख्ये भविष्यत्*
*तस्मान्नागै: शताब्दै: खलु मखविषये म्लेच्छ धर्म प्रवृत्ति: ।*
*तस्मिन काले धरण्यां स्फुटलघुकरणं मानवै वेंदितव्यं*
*सिद्धान्तानां विनाश: सकल भुवितले काल योगे ऽभविष्यत् ॥"*

यसैगरी तिब्बतका लामाहरु बुद्धको अर्कै समय तथा जन्म मिति मान्दछन् भने चीन, बर्मा, थाइ, श्रीलङ्काका विद्वानहरु भिन्नाभिन्नै समयहरु मान्दछन् । यसकारण यसको निर्णयले विद्वानहरुको अनुसन्धानलाई पर्खिरहेको छ । यही सिद्धान्तलाई जापानीहरुले पनि स्वीकार गरेको देखिन्छ ।

यस्तो मतभेद किन कसरी आयो भन्ने कुरा पनि अनुसन्धानको विषय हो । हुनत यस्तो मत नमान्ने महायानीहरु पनि छन् । यही कुरा महायान सूत्रालङ्कारमा असङ्गले यस्तो लेख्नुभएको छ -

*"गोत्र भेदादवैयर्थ्यात्साकल्यादप्यनादित: ।*
*अभेदान्नैक बुद्धत्वं बहुत्वं चामलाश्रये ॥"*

अर्थात् गोत्रको भेदले बुद्धहरु भिन्नाभिन्नै हुन् तथा पुण्य सम्भार र ज्ञान सम्भार व्यर्थ हुने हुनाले पनि सबै बुद्धहरु एउटै हुन सक्दैन । अनादिकालदेखि आदिबुद्ध हुनुहुन्छ भनी भन्न मिल्दैन । बुद्ध भइसकेपछि सबै बुद्धहरु धर्मकायमा परिवर्तन हुने हुँदा बुद्धहरु एकै हुन पुग्दछन् भनी नामसङ्गीति जस्तो पुस्तकमा उल्लेख भएको आदिबुद्ध नमान्ने सम्प्रदाय पनि नभएको होइन ।

बुद्धको विशेष गुण दशबल हुन् । यही दशबल भएको हुँदा बुद्धलाई दशबल भनिन्छ । स्थाना स्थान ज्ञान बल (ठीक बेठीक निर्णय गर्ने ज्ञान), कर्म विपाक ज्ञान बल (कर्मफलको ज्ञान बल), नाना धातुबल (काम, रुप, अरुप आदि लोकधातुको ज्ञान बल), नानाअधिमुक्ति ज्ञान बल (प्राणीहरुको चित्तको स्वभाव जान्ने बल), सत्वेन्द्रिय

परापर ज्ञान बल (प्राणीहरुको श्रद्धा आदि पाँच इन्द्रियको ज्ञान बल), सर्वत्रगामिनी प्रतिपत् ज्ञानवल (ब्रह्मलोकदेखि प्रेतसम्म जाने मार्ग ज्ञान बल), संक्लेश व्यवदान व्यवस्थान ज्ञान बल (ध्यान, विमोक्ष, आरुप्य, निरोध, समापत्तिहरुको दोष तथा शुद्धि र नियमहरुको ज्ञान बल), पूर्व निवासानुस्मृति ज्ञानवल (धेरै कल्पअघिका जन्मका कुरा सम्झन सक्ने बल), च्युत्युत्पत्ति ज्ञानबल (अमुक व्यक्ति यहाँ च्युति भई यहाँ जन्मे भन्ने ज्ञानवल), आस्रवक्षय ज्ञानबल (रागादि आस्रव ममा छैन भन्ने ज्ञानवल) बुद्धले तीन असंख्य कल्पसम्म पुण्य सम्भार र ज्ञान सम्भार पूर्ण गरी बुद्ध हुनुभएको कुरा स्थविरवादी तथा महायानी दुवैले मान्दछन् । बुद्ध हुनुभन्दा पहिले म जगतसत्व प्राणीहरुलाई हित सुख दिलाई बुद्ध हुन सकूं भनी दीपंकर बुद्धको सामु मनमनै प्रणिधान (प्रतिज्ञा) गर्नुभएको थियो । सोही प्रणिधान चित्तलाई बोधिचित्त भनिन्छ । बोधिचित्त उत्पन्न गरेर धारणा गरी राख्ने व्यक्तिलाई बोधिसत्व भनिन्छ । त्यही बोधिसत्व अवस्थामा गरेको दानादि पुण्यको वर्णन भएको प्राग् ऐतिहासिक कथालाई नै जातक भनी मानिन्छ । त्यस्ता जातकहरु स्थविरवादीहरुको जातकअनुसार पाँचसय सतचालीस छन् भने यसदेखि भिन्नै जातकहरु महायानीहरुले वर्णन गरेको पाइन्छ । बुद्धले बुद्धत्व लाभ गरिसकेपछि आज्ञा भएको उपदेशहरु त्रिपिटकमा संग्रह गरेको देखिन्छ । यी त्रिपिटकहरु स्थविरवादी तथा महायानीहरु दुवैका थिए । हाल महायानीहरुको थोरै मात्रामा मात्र त्रिपिटक पाइन्छ । यसरी बिलाएर गएका महायानका त्रिपिटकहरु अझ पनि खोजी गरेमा प्रकाशमा ल्याउन सकिन्छ ।

हुनत बुद्धका उपदेशहरुको आधारमा धेरै निकाय (सम्प्रदाय) निस्के । तिनीहरुमध्ये श्रीलङ्का, वर्मा, थाइका विद्वानहरुले स्थविरवाद (श्रावकयान) अर्थात् शिष्ययानका ग्रन्थहरुलाई सुरक्षित राखे भने तिब्वत, चीन, जापान, नेपालका धर्मप्रेमीहरुले महायान, मन्त्रयान र वज्रयानका ग्रन्थहरुलाई सुरक्षा गरेको पाइन्छ ।

हुनत महायान स्थविरवादभन्दा पछिल्लो हो । महायानभन्दा मन्त्रयान तथा वज्रयान पछिल्लो हो । तैपनि यी सम्प्रदायका व्यक्तिहरु बुद्धभाषित नै मान्दछन् । हुन पनि हो, बुद्धो भवेयं जगतो हिताय भन्ने बोधिचित्त धारणा गौतम बुद्धले पनि बोधिसत्व छँदा गरेको थियो । जब सिद्धार्थको यशोधरासंग विवाह भयो र यशोधराले राहुल जन्माइन्, तब सिद्धार्थ गौतमले गृहत्याग गरी प्रव्रजित भए भनी बुद्धघोषले लेखेका छन् । तर महायानका पञ्चरक्षा जस्तो पाठ गर्ने पुस्तकमा गर्भावस्थामा गृहत्याग गरेको वर्णन पाइन्छ । यसरी सानोतिनो मतभेद त छँदैछ ।

प्रव्रजित भइसकेपछि गौतमले आलार कालाम तथा उद्दक रामपुत्र आदिबाट विभिन्न ध्यानका कुरा सिकेका थिए भन्ने कुरा स्वयं श्री गौतमले बुद्ध भइसकेपछि बोधि राजकुमारहरुलाई उपदेश दिंदा बताउनुभएको थियो । सोही बोधि राजकुमार सुत्तमा चतुर्थ ध्यान लाभ गरेका व्यक्तिले पूर्वनिवासानुस्मृति ज्ञान हुने कुरा पनि बताउनुभएको छ । साथै प्राणीहरु मरणपछि कहाँ जन्म लिन गए भन्ने च्युति उत्पाद ज्ञानका कुरा पनि उपदेश दिनुभएको छ । साथै पहिले कसैले नभनेको दुःख सत्य, दुःख समुदय सत्य, दुःख निरोध सत्य, दुःख निरोधगामिनी प्रतिपद सत्य यी चतुरार्य सत्य तथा अनुत्पाद ज्ञान र क्षयज्ञान प्राप्त भएपछि आफूलाई बुद्ध भनी घोषणा गरेको कुरा पनि उल्लेख भएको छ ।

बुद्धत्व लाभ भएपछि गौतम बुद्धले प्रसेनजीतको समयमा गंडम्ब रुक्ख (गण्ड जातको आँपको रुख) मुनि यमक प्रातीहार्य देखाउनु भएको थियो । त्यस प्रातिहार्यमा आफू जस्तै निर्मित बुद्ध योगबलले उत्पन्न गरी दुई बुद्धको रुपमा देखाउनुभएको कुरा धम्मपद अठ्कथामा उल्लेख गरेको पाइन्छ । यस्तै गरी मन्त्रयानसंग सम्बन्ध राख्ने ग्रन्थमा गौतम बुद्ध सच्चा बुद्धको निर्माणकाय मात्र हुन् भनी मान्दछन् । श्री गुह्यन्द्र तिलकको उद्धरण गर्ने नामसङ्गीतिको टीकामा यस्तो लेखिएको छ -

*"अकनिष्ठ भुवनेरम्ये शुद्धावास विवर्जिते*
*तत्रबुद्ध्यन्ति सम्बुद्धाः निर्मितस्त्विहबुद्धयते"*

यो कुरा स्थविरवादीहरुले पनि मान्दछन् । त्यसकारण बुद्ध हुन महायान नै चाहिने कुरा स्पष्ट छ । तर महायान पछिल्लो भन्ने केही व्यक्तिहरु यहाँनिर असजिलो मान्दछन् ।

गौतम बुद्धको समयमा ग्रन्थहरु लेखाउने चलन कम थियो । त्यसकारण बुद्धले आफ्नो उपदेश कण्ठ गराउँथे । त्यति मात्र होइन, कसैलाई विनयका कुरा कण्ठ गराउँथे भने कसैलाई सूत्रपिटक कण्ठ गराउँथे भन्ने कुरा एतदग्गवग्गबाट स्पष्ट हुन्छ । धर्मकथिकमध्ये पूर्ण मैत्रायणी पुत्र, बहुश्रुतमध्ये आनन्द, विनयधरमध्ये उपालि यसरी आफ्नो उपदेश धेरै व्यक्तिलाई कण्ठ गराउनुभएकोले नै बुद्ध धर्म अहिलेसम्म टिक्न सकेको हो । यति मात्र होइन, गौतम बुद्धले धर्मद्वारा न्यायपूर्वक संघलाई मिलाई राख्न सफल हुनुभयो । यस्तो हुन सक्नुबाट उहाँ पूर्ण राजनीतिज्ञ पनि

हुनुहुन्छ होला भन्ने अनुमान हुन्छ । यो कुरा साम गाम सुत्तको सात अधिकरणशमथ अर्थात् झगडा मिलाउने उपायबाट पनि व्यक्त हुन्छ । फेरि गौतम बुद्धले आफ्नो धर्म चीरस्थायी बनाउन राजा तथा धनीहरुसंग विरोध नगर्ने नीति अपनाएको देखिन्छ । साथै कुष्ठ, क्षय जस्ता रोगहरु भिक्षु संघमा नफैलियोस् भन्ने नियम पनि बनाउनु उहाँको बुद्धिमत्तापूर्ण काममध्ये एक हो । गौतम बुद्ध स्वास्थ्यको पनि पूर्ण ख्याल राख्नु हुन्छ भन्ने कुरा धम्मपदको "भोजनम्हि च मत्तञ्ञु" अर्थात् खानाको मात्रा जान्ने सन्तुलित भोजन गर्ने भन्ने वाक्यबाट व्यक्त हुन्छ । यसरी गौतम बुद्धले आफ्नो शिष्यहरुलाई मन, वचन र कर्मलाई उचित रुपमा प्रयोग गर्ने विधि अष्टाङ्गिक मार्गले पनि बुद्धको ज्योति हालसम्म पनि प्रज्वलित हुन समर्थ भएको देख्छु ।

*भवतु सर्वमङ्गलम् ।*



# प्रत्येक बुद्ध

यो सहालोक धातुमा श्री गौतम बुद्ध उत्पन्न हुनु भएपछि उहाँले नै श्रावकयान, महायान, प्रत्येक बुद्धयानहरुको वर्णन गर्नु भएको हो । त्यसैले उहाँलाई "यानत्रयनिर्यात एकयानफलेस्थित:" अर्थात् तीन यानको अभ्यास गरे पनि एकयान अर्थात बुद्धयानको सफलतामा लाग्नु भएको भनिन्छ । यति मात्र होइन, "रत्नत्रयधर: श्रेष्ठस्त्रियानोत्तम देशक" अर्थात् बुद्धरत्न, धर्मरत्न, संघरत्नहरुको दृढतापूर्वक प्रचार गर्नुमा श्रेष्ठ तथा तीनैयानको उपदेश दिनुमा उत्तम भनेर आर्यनामसङ्गीतिमा पनि वर्णन गरिएको पाइन्छ ।

स्थविरवादीहरुको त्रिपिटक तथा अट्ठकथाहरुका अनुसार श्री गौतमबुद्धको समयमा श्रावक शिष्यहरुमा कलह, वादविवादको शुरुवात भयो । त्यसबेला शिष्यहरुको कलह शान्त गर्न श्री भगवान्ले धेरै उपदेश दिनु भयो, तर उनीहरुको विवाद शान्त गर्न सक्नुभएन । अनि भगवान्ले त्यसबेला प्रत्येकबुद्धयानको चर्यालाई यसरी वर्णन गर्नु भयो ।

यदि प्रज्ञावान असल चरित्र भएको साथी पाए भने स्मृतिसंप्रजन्यले युक्त भई संगै चर्या गर्नु असल छ, तर त्यस्तो साथी पाइएन भने –

*राजा व रट्ठं विजितं वहाय*
*एको चरे मातङ्गरञ्जेव नागो*
*एकस्स चरितं सेय्यो*
*नत्थि वाले सहायता*
*एको चरे न च पापानि कयिरा*
*अनप्पोस्सुक्को मातङ्गरञ्जेव नागो*

अर्थात् शत्रुले जितेको राज्यलाई राजाले झैं छोडेर मातङ्गराज हात्ती झैं एक्लै विचरण गर्नु नै श्रेय छ । वालजनवाट सहायता मिल्दैन । पाप कर्म नगरी अल्पोत्सुक भई मातङ्गराज जस्तै एक्लै विचरण गर्नु नै जाति छ । उपर्युक्त श्लोक धम्मपद नागवर्गमा वर्णन गरिएको पाइन्छ । यहि श्लोक खग्गविषाण सुत्तमा वर्णन गरिंदा "एको चरे खग्गविषाण कप्पो" भनी उल्लेख भएको देखिन्छ ।

यसरी प्रत्येक बुद्धको चर्या वर्णन गरी श्री भगवान बुद्धले पारिलेय वनमा एक्लै वर्षावास गर्नु भएको थियो । प्रत्येक बुद्धको चर्या दुई भागमा विभाजित गरिएको

पाइन्छ । एक्लै विचरण गर्ने एकचारी, जसलाई खड्ग पनि भनिन्छ, त्यसैलाइं औंल्याउँदै बौद्ध साहित्यमा "एको चरे खड्ग विपाण कप्पो" अर्थात् गैंडाको सिङ्ग झैं एक्लै हिड्ने भनी वर्णन गरिएको पाईन्छ । अनि अर्को थरी प्रत्येकवुद्ध, जो धेरै जना एक साथ हिंड्ने हुन्छ, वर्गचारी प्रत्येकवुद्ध भनिन्छ ।

"अहं सहस्समत्ते पच्चेकवुद्धे दिस्वा निमन्तयिं" अर्थात् मैले एकहजार जति प्रत्येकवुद्धहरुलाई देखेर निमन्त्रणा गरें भनी धम्मपद अट्ठकथा महाकप्पिनत्थेरवत्थुमा उल्लेख भएका प्रत्येकवुद्धहरु वर्गचारी प्रत्येकहरु नै हुन् ।

एकचारी तथा वर्गचारी दुवैप्रकारका प्रत्येकवुद्धहरु धर्म प्रचार गर्दैनन्, तर उनीहरुले पालना गरेको शील आचारद्वारा जनतालाई पनि धर्माचरण गर्न लगाउँछन् भन्ने कुरा अभिसमयालङ्कार मार्गज्ञताधिकारको छ श्लोकवाट व्यक्त हुन्छ । जस्तै:

*"परोपदेश वैयर्थ्यं स्वयंबोधात्स्वयम्भुवाम् ।*
*गम्भीरता च ज्ञानस्य खड्गानामभिधीयते ॥"*

श्रावकहरुले अर्हत्वलाभ गर्न वुद्धवाट वा अरु स्थविरवाट उपदेश पाउनु पर्छ । परन्तु प्रत्येकवुद्धलाई गुरुको उपदेश आवश्यक छैन । पहिलेको वासनाको वलले उहाँहरु स्वयं प्रत्येकवोधि लाभ गर्ने हुन्छ तथा श्रावककोभन्दा उहाँहरुको ज्ञानगाम्भीर्य पनि हुने हुन्छ तथा शव्दोच्चारण विना धर्मदेशनाद्वारा जनताहरुलाई दशकुशलकर्ममा प्रवृत्त गराउने हुन्छ । किनभने प्रत्येकवुद्धहरुले वोधिसत्वावस्थामा म वुद्ध भएपछि मुखले नवोलिकन धर्मदेशना गर्न सकूं भनी प्रणिधान गरेका हुन्छन् । सोही प्रणिधानको वलले जुन विषयमा जसरी धर्मश्रवण गर्न इच्छा गरेको हुन्छ, सोहि अनुरुप ती व्यक्तिका चित्तमा धर्मानुवोध हुने हुन्छ।

प्रत्येकवुद्धहरुले पनि वुद्धहरुले झैं चतुरार्यसत्यको भावना तथा प्रतीत्यसमुत्पादको भावना गर्ने हुन्छ । परन्तु ग्राह्य विकल्प र ग्राहक विकल्प दुवै प्रहाण गरेको हुँदैन, केवल ग्राह्य विकल्प मात्र प्रहाण गरेको हुन्छ । जुन कुरा अभिसमयालङ्कारमा मार्गज्ञताधिकारको आठौं श्लोकमा यसरी उल्लेख गरिएको छ -

*ग्राह्यार्थ कल्पनाहानाद ग्राहकस्याप्रहाणत : ।*
*आधारतश्च विज्ञेय: खड्गमार्गस्य संग्रह : ॥*

अर्थात् ग्राह्य विकल्प (मेरो भन्ने आसक्ति) प्रत्येकवुद्धमा हुँदैन, परन्तु ग्राहक विकल्प (म भन्ने आसक्ति) भने केही वाँकी नै हुन्छ । यसरी प्रत्येकवुद्धयानको आधारवाट पनि खड्ग (प्रत्येकबुद्धको चर्या) वोधिसत्वले जान्नुपर्छ ।

तर दशभुमिक सूत्रको विमला भूमिमा सम्यक संयुद्ध महाकरुणाले युक्त हुन्छ, प्रत्येकवुद्ध महाकरुणाले युक्त हुँदैन तथा उपाय कौशलले पनि युक्त हुँदैन, जगतसत्वलाई उद्धार गर्छु भन्ने प्रणिधान पनि हुँदैन भनी उल्लेख गरिएको पाइन्छ ।

यस्तै विचार गुह्य समाज तन्त्रको १०४ पृष्ठमा यसरी उल्लेख गरिएको छ - "अथ: वज्रपाणि: सर्वतथागताधिपति: प्रत्येकवुद्ध समयवज्रं स्वकाय वाक चित्त वज्रेभ्यो निश्चारयामास ।

*देशना कायिकी तेषां कायवज्रप्रतिष्ठिता ।*
*सत्वावतारणं शीलसमय: परमशाश्वत: ॥*

अर्थात सर्वतथागतहरुको अधिपति हुनु भएका वज्रपाणिले प्रत्येकवुद्धको निश्चित सिद्धान्त यसरी आज्ञा भयो – प्रत्येकवुद्धहरुले वचनद्वारा धर्मदेशना गर्नु हुन्न । उहाँहरुले आफ्नो शरीरद्वारा नै जनताहरुले दश कुशल धर्म बोध गर्न सकून भनी अधिष्ठान गरेको हुंदा उहाँहरुको धर्मदेशना कायिक हुन्छ । कायद्वारा नै जनतालाई धर्ममा आकर्षण गर्ने हुन्छ । प्रत्येकवुद्धहरुको श्रेष्ठ एवं शाश्वत शील सम्वन्धी सिद्धान्त यही हो । यसरी विभिन्न ग्रन्थमा प्रत्येकवुद्धहरुको परिचय दिइएको पाइन्छ ।

हाल नेपालमा विद्यमान पूजा पद्धतिहरु विशेष गरेर क्रियासंग्रह तथा क्रिया समुच्चयमा आधारित छन् । त्यसमध्ये क्रिया समुच्चयको चैत्यलक्षण विधिमा प्रत्येकवुद्धको अस्थिधात्तु राखी वनाउने विधि पनि उल्लेख गरेको पाइनाले प्रत्येकवुद्धको चैत्यहरु नेपालमा पनि शायद हुँदो हो भन्ने कल्पना गर्न सकिन्छ । हुनत हालका चैत्यहरु ग्रन्थानुसार निर्मित छैन् भन्दा अत्युक्ति हुने छैन । उपर्युक्त क्रिया समुच्चयको चैत्य लक्षण प्रकरणमा यस्तो लेखिएको छ "चैत्यं तु कुम्भ, कलश, धान्यराशि, लताख्य भेदाद, यथा संख्यं ठकाराकृति, चूडिकाभ, खगाण्ड तिलसन्निभम्" अर्थात् कुम्भ चैत्य ठकार जस्तो गोल, कलश चैत्य चूडिका जस्तो, धान्यराशि चैत्य चराको अण्डाकार तथा लताख्य चैत्य तिलाकार हुन्छन् । यी चार प्रकारका चैत्यहरु चारकुने क्षेत्रलाई बान्ह भाग लगाई कुनामा १ १/२ अनि २ १/२ भाग छोडी गोल बनाई विम्व वनाउनुपर्छ । विम्वको आधा नैमिका र विम्वको आधा पीठ त्यसदेखि माथि वर्मिको टुप्पो र विम्वको लम्वाइअनुसार छत्र वनाउनुपर्छ । सम्यक संवुद्ध वज्रधर प्रत्येकवुद्ध र श्रावकहरुको चैत्यमा छत्र राख्ने नियम उल्लेख गर्दै क्रिया समुच्चयमा यस्तो वर्णन गरिएको छ । "विम्वायतं छत्रं तच्चैक त्रय पञ्च त्रयोदश संवुद्ध वज्रधराणाम्, नव सप्त प्रत्येकवुद्ध श्रावकयो:" अर्थात् सम्यक संवुद्धको एक वा तीन छत्रको परिमाण हुन्छ । वज्रधरको भने पांच वा तेन्ह हुन्छ । प्रत्येकवुद्धको नौ हुन्छ भने श्रावकको छत्रको परिमाण सात हुन्छ ।

यसबाट प्रत्येकबुद्धको पनि चैत्य हुँदो रहेछ तथा यसलाई चिन्ने उपाय पनि क्रियासमुच्चयको समयसम्म विद्यमान रहेछ भन्ने कुरा व्यक्त हुन्छ । हुनत महावस्तुको २४८ पृष्ठमा पनि प्रत्येकबुद्धको अस्थिधातु राखी चैत्य बनाएका थिए, जसको पुण्यले ग्रामिककी छोरी पछि कृकिराजाकी छोरी भई जन्मेको कुरा गर्णन गरिएको पाइन्छ ।

अवदान कल्पलतामा पनि प्रत्येकबुद्ध हुन के के गर्नु पर्छ ? कस्तो कर्म गर्दा भविष्यमा यी व्यक्तिहरु प्रत्येकबुद्ध होलान् भनी श्री बुद्ध भगवानले व्याकरण (भविष्यवाणी) गर्नु भएको रहेछ भन्ने देखाएको छ । यसरी अवदान कल्पलतामा चन्दन, पद्मोत्तर दशशिरा, चकान्तर, सूक्ष्मत्वम्, शीतप्रभ, संसारोत्तरण, गन्धमादन विमल, वल्युश्वर यी दशवटा प्रत्येकबुद्धहरुको अवदान प्रस्तुत गरेको हुँदा धर्म श्रवण गर्नेहरुको मनमा प्रत्येकबुद्धउपर धेरै श्रद्धा उत्पन्न भएको देखिन्छ ।

खग्गविसाणसुत्तवण्णना नामक अट्ठकथामा सव्बेसु भूतेसु आदि श्लोकको वर्णन गर्दा एकदिन आयुष्मान आनन्द ध्यानबाट ब्युँझी यस्तो विचार गर्नुभयो– भगवान् बुद्ध हुन कस्तो प्रार्थना अथवा अभिनीहार गर्नुपर्छ, सो कुराको वर्णन गरेको पाइन्छ । परन्तु श्रावक (अर्हत) हुन र प्रत्येकबुद्ध हुन के कस्तो अभिनीहार गर्नु पर्ने हो ? सो कुरा मैले सुनेको छैन । यसकारण म बुद्धकहाँ गई यो कुरा सोध्नेछु । यति विचार गरी बुद्धकहाँ गई यही प्रश्न गर्नुभयो । यसैबेला खग्गविसाणसुत्तवण्णना गर्नुभएको हो भनी उल्लेख गरिएको छ । साथै भगवान् बुद्धले आनन्दलाई सम्बोधन गर्दै यस्तो आज्ञा भयो – प्रत्येकबुद्ध हुन दुई असंख्येय कल्प र एक लाख कल्प पुण्य गरी म प्रत्येकबुद्ध हुन सकूं भनी प्रार्थना गरेमा प्रत्येकबुद्धत्व लाभ हुने हुन्छ । त्यसमा पनि प्रत्येकबुद्ध हुन मनुष्य नै हुनुपर्छ, पुरुष नै हुनुपर्छ, आस्रव क्षीण भएका बुद्ध वा अर्हतको दर्शन पाएको हुनुपर्छ । बुद्धहरुबाट तिमी भविष्यमा प्रत्येकबुद्ध होस् भन्ने अधिकार लाभ गरेको हुनुपर्छ तथा तीब्र इच्छा अर्थात् छन्द पनि हुनुपर्छ । यी पाँच लक्षणले युक्त भएमा मात्र प्रत्येकबुद्ध हुने अभिनीहार सफल हुने हुन्छ । यति आज्ञा भइसकेपछि पहिलेका प्रत्येकबुद्धहरुले बोलेका उदान गाथाहरु पनि वर्णन गर्नुभयो । ती मध्ये सव्बेसु भुतेसु निधाय दण्डं भन्ने गाथाको उत्पत्ति यसरी आज्ञा भएको छ – प्रत्येकबोधिसत्व काश्यपबुद्धको समयमा प्रव्रजित भई बीस लाख वर्ष व्रत पूरा गरी त्यहाँबाट पनि च्यूति भई कामावचर देवलोकमा उत्पन्न हुनु भयो र त्यहाँबाट पनि च्यूति भई वाराणसी महाराजको बडामहारानीको कोखबाट जन्मनु भयो । अनि यौवनावस्था पुगेपछि राजा हुनु भयो । उहाँको राज्यमा सुभिक्ष थियो, सुख सविधा थियो । तैपनि उहाँको मनमा पूर्व जन्मको वासनाले गर्दा शान्ति

थिएन । राज्य सुख भन्दा ध्यान सुखमा रमाउनु हुन्थ्यो । त्यसकारण धर्मपूर्वक तिमीहरुले राज्य चलाउनु भनी मन्त्रीहरुलाई राज्य सुम्पी दरवारको एकान्त अन्तपुरमा ध्यान सुखले रहन थाल्नुभयो । खानेकुरा ल्याउनेहरुलाई मात्र भेट्ने गर्थे । यसरी एकान्तवास वसी रहंदा राजमहिषी उत्सुक भई व्यभिचार गर्न थालिन् । यो कुरा कुनै व्यक्तिले राजाकहाँ सुतुक्क विन्ति गर्दा राजाले यस्तो विचार गर्नु भयो – यिनीहरुलाई मार्ने, पिट्ने, दण्ड दिउं भने हिंसा हुने भयो । यिनीहरुको सर्वश्व गरु भने अदिन्नादान हुने भयो । यसकारण यी व्यभिचार गर्ने मन्त्री र महारानीलाई देश निकाला गर्नु नै ठीक छ भन्ने विचार गरी देश निकाला गरे । अनि त्यसपछि सो मन्त्री अरु नै मुलुकको राजाकहाँ गई वाराणसी राजाको राज्य अहिले सजिलैसंग हमला गरेर लिन सकिन्छ । उहाँ लड्न र हिंसा गर्न चाहँदैन, पत्याउनु हुन्न भने चारजना मानिस उहाँको दरवारमा चोर्न पठाउनु होस्, अनि थाहा पाउनु हुनेछ भनी विन्ती गरे । अर्को मुलुकको सो राजाले पनि उनले भने अनुसार चोर्न पठाउंदा ती चोरहरुलाई दण्ड दिनुको वदला प्रशस्त धन दिई अब उप्रान्त यस्तो काम नगर भनी सम्भाएर पठाए । यस्तो रहस्य थाहा पाइसकेपछि त्यो राजाले वाराणसी राज्यमा हमला गर्न पठाए । यसरी आफ्नो राज्यमा हमला गरेको कुरा मन्त्रीहरुले विन्ति गर्दा राजाले उनीहरुलाई फकाई फुलाई फर्काउनु भनी आज्ञा भयो । यसरी हमला गर्दा लडाई नगरी केवल शत्रुको फौज हेर्दै यिनीहरुको भलाइ होस्, वढिया होस्, यी सवै प्राणीहरु सुखी होउन्, शत्रु नभएका होउन्, आपत्ति नभएका होउन् भनी मैत्री भावना गर्दागर्दै सोही मैत्री भावनाको आधारमा विपश्यना भावना, प्रत्येक वोधिज्ञान साक्षात्कार गरी प्रत्येकवुद्ध हुनुभयो । त्यसवेला मन्त्रीहरुले राजालाई विन्ति गरे – महाराज ! शत्रुले हमला गर्न लागे । हामीले पनि हमला गर्छौं, हुकुम पाउं । अनि राजाले आज्ञा भयो – वावु ! अव म राजा होइन, प्रत्येकवुद्ध हुं । अनि मन्त्रीले भने – महाराज ! प्रत्येकवुद्धको त दुई औंलामात्र लामो कपाल हुन्छ । भिक्षु, प्रत्येकवुद्धहरुको पात्र, चीवर आदि अष्ट परिष्कारले युक्त भएको हुन्छ । यस्तो विन्ती गरेको सुनी राजाले आफ्नो दाहिने हातले शिरमा मुसार्ने वित्तिकै सवै गृहस्थीको लक्षण हराई शान्त प्रत्येकवुद्धको लक्षण देखापऱ्यो । अनि हात्ती चढेको राजा लड्न आएका शत्रुका सेना र आफ्नो सेनाहरुको सामु आकाशमा उडी पलेटी मारी वस्नुभयो । अनि त्यहाँ उपस्थित मन्त्रीहरुले वन्दना गर्दै भन्ते ! हजुरले कुन ध्यानको भावना गरी प्रत्येकवुद्ध हुनु भएको हो भनी विन्ती गरे । त्यसवेला राजाले आफूले गरेको मैत्री भावना तथा त्यसैलाई आधार मानी गरेको विपश्यनाद्वारा म प्रत्येकवुद्ध भएको हुं भनी यो उदान गाथा भन्नुभयो –

*सर्वेसु भूतेसु निधाय दण्डं ।*
*अविहेठयं अञ्ञतरं ! पि तेसं ॥*
*न पुत्तमिच्छेय कुतो सहायं*
*एको चरे खग्गविसाणकप्पें ॥*

अर्थात् सबै प्राणीहरुलाई दण्ड दिने, दु:ख दिन छोडेर तथा छोरालाई पनि चाहना गरिदैन भने सहायताको चाहना कहां गरिन्छ । गैंडाको सिङ एउटै भए जस्तै एक्लै बस्न चाहन्छ । यो उदान प्रत्येकबुद्धले गाएको थियो भनी वर्णन गर्दै श्री भगवान बुद्धले आनन्दलाई प्रत्येकबुद्धको चर्या आज्ञा भयो ।

यसरी नै चालीसवटा प्रत्येकबुद्धहरुको जीवनी श्री भगवान् बुद्धले आज्ञा भएको छ । सो सूत्रलाई खग्गविसाण्णसुत्त भनिन्छ । यी चालीसवटा जीवनीमा निम्नलिखित प्रत्येकबुद्धको नियमहरु उल्लेख गरिएको पाइन्छ ।

प्रत्येकबुद्धको चर्या अनुसार प्राणीहरुलाई बध, बन्धन नगर्नु तथा दमन नगर्नु, छोरा छोरी तथा कसैको पनि सहायता नखोज्नु । संसर्गद्वारा प्रेम स्नेह हुने हुन्छ । सोही स्नेहबाट दु:ख उत्पन्न हुन्छ । यसरी स्नेहको दोष थाहा पाई कसैको पनि स्नेह नगर्नु । इष्टमित्रहरुसंग धेरै परिचय नगर्नु, स्वास्नी छोराछोरीसंग आसक्त नहुनु, स्वतन्त्र चर्या गर्नु, इष्टमित्रसंग आवत जावत नबढाउनु, हंसी ठट्टा, खेल तमासामा नलाग्नु, बाँसको झांग झैं परस्परमा आसक्त नहुनु, बाँसको टुसो झैं अलगिएर बस्नु, मैत्री, करुणा, मुदिता, उपेक्षाको भावना गर्नु, असल विज्ञजनको सहायता पाए मात्र सहवास गर्नु, नत्र एक्लै बस्नु, दुईजना संगै बस्दा संघर्ष हुने हुँदा एक्लै बस्न मन पराउनु, सुख भोगले मन अन्योल पनि हुन्छ । अत: सुखभोग छोड्नु, दु:ख, उपद्रव, रोग आदि रहित सुखभोग दुर्लभ हुन्छ भन्ने भावना गर्नु, गरम सर्दी, भोक प्यास, दु:ख कष्ट सबै सहनु, शाश्वत दृष्टि त्याग्नु, मीठो खानु पिउनुमा नलोभिनु, अरुको गुणलाई नदबाउनु, काय वाक् चित्तको दुश्चरित्रलाई त्याग्नु, तृष्णा छोड्नु, खराब व्यक्तिको संगत छोड्नु, बहुश्रुत धर्मचारीको संगत गर्नु, प्रज्ञाद्वारा सद्धर्ममा शङ्का निवारण गर्नु, खेलबाड, सुखभोग, श्रृङ्गार तथा विलासिताका सामानहरुलाई त्याग गर्नु, स्वास्नी, छोराछोरी, आमाबाबु, धनसम्पति, इष्टमित्रहरुमा पनि आसक्त नहुनु । सुखको आसक्ति एक प्रकारको रोग नै हो । यसबाट भविष्यमा दु:ख नै हुन्छ भन्ने सम्झनु, संयोजनलाई चुंडेर क्लेशलाई भस्म गर्नु, युगमात्र दृष्टि भई हातगोडा, मनलाई संयममा राखी मन शान्त गर्नु, गृहस्थी चर्या छोडी कषायवस्त्र धारणा गर्नु, रस तृष्णा छोडी कसैलाई भरण पोषण नगरी धनी गरीबको भेदभाव नगरी भिक्षाचरण गर्नु, पञ्चनीवरण छोडी

उपक्लेश शान्त गरी सुख, दु:खलाई उपेक्षा गरी शमथ विपश्यना भावना गर्नु, वीर्य उत्साह बढाई आलस्य त्यागी परमार्थप्राप्तिको लागि दृढपराक्रम गर्नु, सांसारिक जीवनमा दोष देख्नु, धर्ममा लाग्नु, ध्यान गर्न नछोड्नु, तृष्णा क्षय गर्न अप्रमादी भई स्मृति उपस्थित राखी प्रधान वीर्य हुनु, सिंह झैं कसैको शब्ददेखि नतर्सी, हावा झैं कुनै वस्तुमा नलागी अनासक्त हुनु । मैत्री, करुणा, मुदिता, उपेक्षा, भावना गरी जनताको अनुकुल हुनु, राग द्वेष मोहलाई शमन गरी संयोजनलाई दबाई, मरण भयबाट मुक्त हुनु । विना स्वार्थका मानिस दुर्लभ हुन्छन्, स्वार्थकै निमित्त हाम्रो हित गर्ने हुनाले यस्तो जनसमाजसंग नलागी खड्गविषाण जस्तै एक्लै चर्या गर्नु नै असल छ भन्ने खग्गविषाण सुत्तको शिक्षा हो"

एउटा अट्ठकथा अनुसार राजगृहमा बस्नुभएको मातंग नामको प्रत्येकबुद्ध थियो । सो प्रत्येकबुद्धलाई सबभन्दा पहिलो प्रत्येकबुद्ध भनिन्छ ।

"रागं च दोसं चा ति का उप्पति ?

राजगृह किर उपनिस्साय मातङ्गो नाम पच्चेक बुद्धोविहरति सब्बपच्छिमो पच्चेक बुद्धानं ।"

किनभने बुद्ध उत्पन्न हुने भएपछि प्रत्येकबुद्धहरु हिमालयको महाप्रपात पर्वतमा निर्वाण हुन्छन् । त्यसकारण मातङ्ग प्रत्येकबुद्ध पनि गौतम बुद्ध उत्पन्न हुने थाहा भएपछि रागं च दोषं च आदि उदान गाथा पढ्दै निर्वाण हुनुभयो भन्ने कुरा सुत्तनिपातको अट्ठकथामा उल्लेख भएको पाइन्छ ।

यही कुरा ललितविस्तरको कुलपरिशुद्धि परिवर्तमा पनि उल्लेख भएको छ तथा अन्योऽपि देवपुत्रा जम्बुद्वीपमागत्य प्रत्येकबुद्धेभ्य आरोचयतिस्म–रिञ्चत मार्षं बुद्धक्षेत्रम् । इतो द्वादशवत्सरे बोधिसत्व मातु: कुक्षिमवक्रमिष्यति । तेन खलु पुनर्भिक्षव समयेन राजगृहे महानगरे गोलाङ्गुल पर्वते मातङ्गो नाम प्रत्येकबुद्धो विहरति स तं शब्दं श्रुत्वा कर्दम इव शिलायां प्रस्थाय विहायसा सप्ततालमात्रमत्युद्गम्य च तेजो धातु समापद्योल्केव परिनिर्वाति स्म: ।

अर्थात् कुनै देवपुत्रहरु जम्बुद्वीपमा आई प्रत्येकबुद्धहरुलाई यसरी बिन्ती गरे– भन्ते ! बुद्धक्षेत्र खाली गर्नुहोस् । बाह्र वर्षपछि बोधिसत्व आमाको गर्भमा प्रवेश गर्नुहुनेछ । त्यसबेला गोलाङ्गुल पर्वतको मातङ्ग प्रत्येकबुद्ध आकाशमा उडी तेजो धातुद्वारा निर्वाण भए ।

यो एउटा विचारणीय कुरा हो । यसबाट बुद्धभन्दा पहिले धेरै प्रत्येकबुद्धहरु हुँदा रहेछन भन्ने कुरा स्पष्ट हुन्छ । यति मात्र होइन, बुद्ध धर्म प्रचार भएपछि प्रत्येकबुद्धका सिद्धान्तहरु र मूर्तिहरु पनि लोप भएर गए होलान् भन्ने तर्क उठ्नु स्वाभाविक हो । यसकारण हाल एक दुई ठाउँमा चतुर्दिग वा चतुर्मुख चैत्य भनिने स्तम्भाकार चैत्यमा पञ्चबुद्धको मूर्तिमुनि चारैदिशामा प्रत्येकबुद्ध तथा देवावतार बोधिसत्वहरु राखेका चैत्यहरु पाइन्छन् । स्वयम्भूमा शान्तिपुर मन्दिरको ढोकाको बायाँपट्टि देब्रेहातले चीवर समाई बस्नु भएका चार फुट जति अग्लो प्रत्येकबुद्धको मूर्ति पाईन्छ । यस्तै मूर्ति करीब तीन फुट जति अग्लो उठेर बस्नुभएको प्रत्येकबुद्धको मूर्ति पशुपतिघाटमा पनि पाइन्छ । कसै कसैको भनाइअनुसार देवावतार नामको मूर्ति पनि प्रत्येकबुद्धको मूर्ति हो भन्दछन् । यस बाहेक कुनै ग्रन्थहरुमा प्रत्येकबुद्ध यस्तो हुन्छ भन्ने ध्यान कहीं उल्लेख भएको पाइँदैन । यसबाट पनि बुद्ध धर्मको प्रचारपछि प्रत्येकबुद्धको प्रचार गर्न ध्यान आदि लेख्न मूर्तिहरु स्थापना गर्न गाह्रो मानेको हुनुपर्छ । प्रत्येकबुद्धलाई देवावतार मान्नु उचित नै छ । किनभने प्रत्येकबुद्धले कुनै देवताको अवतार लिएको वर्णन पाइँदैन । प्रत्येकबुद्धहरु स्वयम् आफू एक्लै प्रत्येकबुद्धत्व लाभ गरी निर्वाण हुने हुँदा उहाँहरुले कुनै देवताहरुको अवतार लिनु हुने कल्पना गर्नु उचित हुँदैन । देवतावतार भन्ने शब्द त केवल नाम मात्र हो । फेरि अर्को कुरा देवावतार प्रत्येकबुद्ध नहुँदो हो त उहाँको ध्यान तथा मूर्ति पूजा गर्न धार्मिक व्यक्तिहरुले देवावतारको मूर्ति स्थापना गरेको पाइनु पर्ने हो । सो नपाइएकोले पनि देवावतार नामको मूर्ति प्रत्येकबुद्ध नै हुनुपर्छ भन्ने कल्पना गर्नु स्वभाविकै हो ।

विभिन्न अवदान तथा अट्ठकथा खग्गविसाणकप्प सुत्त आदि ग्रन्थमा प्रत्येकबुद्धको नाम उल्लेख हुँदा नेपालमा पनि प्रत्येकबुद्धको प्रसिद्धी भएको हुनुपर्छ । त्रिपिटक आदि बुद्ध ग्रन्थमा अरहतभन्दा प्रत्येकबुद्धको दर्जा बढी हुन्छ भन्ने देखाएको हुँदा नेपालमा पनि प्रत्येकबुद्धको मानसम्मान हुनु तथा उहाँको महत्व बढ्नु स्वभाविक नै मान्नुपर्दछ ।



# बोधिसत्व

बोधिसत्व शब्द स्थविरवाद तथा महायानका ग्रन्थहरुमा प्रयोग भएको पाइन्छ । बोधिसत्व शब्दको अर्थ बुद्धघोषको विसुद्धि मग्गाको टीकामा यस्तो लेखिएको छ - "बोधिसत्ता ति बुज्भनकसत्ता, बोधिया वा नियतभावेन सत्ता लग्गा अधिमुत्ता तन्निना तप्पोणा ति अत्थो ।" अर्थात् बुभ्ने व्यक्ति अथवा बोधिज्ञानको निमित्त निर्यमित रुपले लाग्ने व्यक्ति अथवा बोधिलाई दृढ विश्वास गर्ने, बोधितिर ढल्केका, बोधितिर भुकेका व्यक्तिलाई बोधिसत्व भनिन्छ ।

महायानको प्रसिद्ध ग्रन्थ अष्टसाहस्रिका प्रज्ञापारमिता सूत्रको ११ पृष्ठमा यस्तो लेखिएको छ - "सर्व धर्माणां हि सुभूते बोधिसत्वो महासत्वो ऽसक्ततायां शिक्षते । सर्व धर्माणां हि सुभूते बोधिसत्वो महासत्वो ऽनुबोधनार्थेन असक्ततायामनुत्तरां सम्यक संबोधिमभिसंबुध्यते । बोध्यर्थेन तु सुभूते बोधिसत्वो महासत्व इत्युच्यते" । अर्थात् श्री भगवान् भन्नुहुन्छ - "हे सुभूति ! बोधिसत्व महासत्वहरु सबै वस्तुमा आसक्ति नहोस् भन्ने ज्ञान सिक्छन् तथा सबै वस्तुमा अनासक्त भई सम्यक संबोधि लाभ गर्दछन् । हे सुभूति ! बोधिको निमित्त लाग्ने हुनाले नै बोधिसत्व महासत्व भनिएको हो" । यहि वाक्यको व्याख्यान् गर्दै भगवान् भन्नुहुन्छ - "असंख्य प्राणीहरुलाई उद्धार गर्न तथा बोधिज्ञान दिलाउन प्रयत्न गर्ने हुनाले पनि बोधिसत्व महासत्व भनिएको हो ।" श्री भगवान् बुद्धको वचनलाई समर्थन गर्दै सारिपुत्र भन्नुहुन्छ - "आत्म दृष्टि, सत्व दृष्टि, जीव दृष्टि, भव दृष्टि, विभव दृष्टि, उच्छेद दृष्टि, शाश्वत् दृष्टि, सत्काय दृष्टिहरुलाई प्रहाण गर्ने उपदेश दिने व्यक्तिलाई पनि बोधिसत्व भनिन्छ होला"। त्यस्तै सुभूतिले पनि आफ्नो विचार यसरी व्यक्त गरे - "हे भगवान् ! सर्वज्ञत्ताचित्त, अनास्रवचित्त, असमचित्त, असमसमचित्त, श्रावक, प्रत्येकबुद्धहरु भन्दा असाधारण चित्तमा पनि आसक्त नहुने तथा नलाग्ने व्यक्तिलाई बोधिसत्व महासत्व भनिन्छ होला" । यस्तै गरी बोधि चर्याको पञ्जिकाको दुई पृष्ठमा पनि बोधिसत्व शब्दको अर्थ लेखिएको पाइन्छ - "आत्मनो जाता: आत्म जा: सुगतानामात्मजा: जिनपुत्रा: बोधिसत्वा इत्यर्थ: । तेषां संवरावतारम् संवरणं संव्रियते वा अनेनेति संवर:, बोधिचित्त ग्रहणपूर्वकं बोधिसत्व शिक्षा समादानम् ।" यसबाट बुद्धो भवेयं जगतो हिताय भनी बोधिचित्त ग्रहणपूर्वक बोधिसत्वको नियम पालना गर्ने व्यक्तिलाई बोधिसत्व भनिने रहेछ भनी थाहा हुन्छ । जेहोस् भावी बुद्धलाई बोधिसत्व भन्ने व्यवहार गरिंदो रहेछ भन्ने कुरा महावस्तु आदि ग्रन्थबाट पनि ज्ञान हुन्छ . जस्तै

"द्वादशेहि महामौद्गल्यायन वर्षेहि दीपकरो बोधिसत्वो तुषितभुवनातो च्यविष्यति"। अर्थात् बाह्र वर्षपछि दीपकर बोधिसत्व तुषित भुवनबाट अवतार लिनुहुनेछ । यसरी दीपकर बोधिसत्व बुद्ध हुनुभन्दा पहिले तुषित भुवनबाट च्यूति भई दीपावती राजधानीमा अर्चिमान राजाको छोरा भई जन्म लिनु हुने कुरा उल्लेख गरेको पाइन्छ ।

श्री भगवान् बुद्धले दीपंकर बुद्धको सामु म बुद्ध हुन सकूं भनी अधिष्ठान (प्रणिधान) अथवा प्रार्थना गरेको थियो । त्यसवेला दीपंकर बुद्धले भविष्यमा तिमी बुद्ध हुनेछौ भनी व्याकरण (भविष्यवाणी) गर्नुभएको थियो । त्यसबेला गौतम बुद्धको नाम सुमेध तापस थियो । त्यस जन्मदेखि चार असंख्य कल्प तथा एक लाख कल्पभित्र पटक पटक गरी जन्मेका थिए । ती जन्मका कुरालाई नै जातक भनिन्छ । हाल स्थविरवादीहरुको ग्रन्थअनुसार पााचसय सतचालीस जातकको वर्णन पाइन्छ । ती जातकहरुमा पारमिता, उपपारमिता, परमार्थपारमिता गरी जम्मा तीस पारमिता बोधिसत्वले पूर्ण गरेको कुरा सुनिन्छ । वेस्सन्तर जातकमा छोरा छोरी, आफ्नो भार्या, आफ्नो शरीर पनि दान गरी दानपारमिता पूर्ण गर्नुभयो । शंखपाल जातकमा शीलपारमिता, चूडसुतसोम जातकमा खम्मपारमिता तथा सेनकपण्डित जातकमा प्रज्ञापारमिता, महाजनक जातकमा वीर्यपारमिता, खन्तिवाद जातकमा क्षान्तिपारमिता, महासुतसोम जातकमा सत्य पारमिता, मूगपक्ख जातकमा मैत्रीपारमिता, लोमहर्ष जातकमा उपेक्षापारमिता पूर्ण गरी बुद्धत्व लाभ गरे भन्ने कुरा स्थविरवादीहरुको ग्रन्थमा पाइन्छ ।

हुनत बुद्ध हुन दशपारमिता पूर्ण नगरी हुँदैन । महायानीहरुको दशपारमिताका नामहरु केही फरक छन् । महायानीहरु दान, शील, क्षान्ति, वीर्य, ध्यान, प्रज्ञा यी षटपारमिता र उपाय, प्रणिधान, बल, ज्ञान, यी चारसमेत दशपारमिता भनी मान्दछन् । यसमा पनि उपाय, प्रणिधान, बल, ज्ञान यी चार पारमिता प्रज्ञापारमितामै अन्तर्भाव हुने हुँदा छवटा पारमितामात्र पूर्ण गर्न सके पनि बुद्धत्व लाभ हुन्छ भन्ने महायानीहरुको विचार एवं श्रद्धा रहिआएको पाइन्छ ।

स्थविरवादका ग्रन्थ तथा जातकहरुमा जति पनि बोधिसत्वको उल्लेख भएका छन्, ती सबै गौतम बुद्धकै पूर्व जन्मका कुराहरु मात्र छन् । बोधिसत्वको नाममा अर्को कुनै नाम आउँछ भने त्यो हो, मैत्रेय बोधिसत्व । हुनत स्थविरवादीका ग्रन्थहरुमा अरु केही व्यक्तिहरुले पनि गौतम बुद्धको सामु भविष्यमा म बुद्ध हुन सकूं भनी प्रार्थना गरेको पाइन्छ । तर महायानमा असंख्य बोधिसत्वहरुको नाम उल्लेख गरिएको छ । तीमध्ये प्रसिद्ध बोधिसत्वहरुको नाम यस प्रकार छन् । अस्सी लाखमध्ये प्रमुख मेरु

बोधिसत्व, भद्रकल्पिक बोधिसत्वहरुमा प्रमुख अजित (मैत्रेय) बोधिसत्व, अनुपमचित्तका साथी बोधिसत्वहरुमध्ये प्रमुख मञ्जुश्री बोधिसत्व तथा आर्यावलोकितेश्वर, महास्थाम प्राप्त, रत्नपाणि, वज्रपाणि, चन्द्रप्रभ, महाप्रतिभान्त, आकाशगर्भ, क्षितिगर्भ, समन्तभद्र, अक्षयमति, सागरमति, जालनारप्रभ, प्रतिभानकूट आदि बोधिसत्वहरुको वर्णन पाइन्छ ।

यी उपर्युक्त बोधिसत्वहरु भोका नाङ्गा कोही नहुन्, सबैले शिल्पकलाहरु सिकून्, जसबाट सद्धर्मपूर्वक जीवनयापन गर्न सकून् भन्ने प्रचारमा लागेका हुन्छन् साथै सबैलाई सुलभ औषधोपचार गरिदिने तथा त्यस्तो ज्ञान दिने काममा निरन्तर लागेका हुन्छन् । उपर्युक्त बोधिसत्वहरुले भद्रचर्या प्रणिधान जस्ता प्रार्थनाहरु सामुहिक रुपमा पाठ पनि गर्ने गर्दछन् ।

यहाँनिर बोधिसत्वहरु मैत्रीपूर्वक कतिसम्म प्रणिधान गर्दछन् भन्ने कुरा व्यक्त गर्न बोधिचर्यावतारको दुई श्लोक उद्धरण गर्नु उचित होला ।

*येषां क्रुद्धा प्रसन्ना वा मामालम्ब्य मतिर्भवेत् ।*
*तेषां स एव हेतु:स्यान्नित्यं सर्वार्थसिद्धये ॥*
*अभ्याख्यास्यन्ति मां येच येचान्येऽप्यपकारिण: ।*
*उत्प्रासका स्तथान्येऽपि सर्वे स्युर्बोधि भागिन: ॥*

वो.च. तृतीय परिच्छेद १५

अर्थात् जो व्यक्ति म देखि रिसाउँछ वा प्रसन्न हुन्छ, त्यस व्यक्तिको पनि सबै इच्छा पूर्ण होस् । मलाई झुठा आरोप लगाउने वा मानसिक दु:ख दिने तथा गिल्ला र उपहास गर्ने सबै व्यक्तिहरुले पनि वोधिज्ञान लाभ गर्न सकून् ।

यसरी लोकोपकार गर्ने बोधिसत्वहरुले एकताका निकै उन्नति गरे, जनताको हृदय जिते । तर जतिसुकै उन्नति भएपनि समय अनुसार सुधार भएन भने विलीन भएर जाने कुरा हालको बोधिसत्वयानले देखाउँछ ।

यस्तै यी महायानका बोधिसत्वहरुलाई वज्रयानीहरुले आफ्नै ढङ्गले स्वीकारेका छन् । महायान विलीन भए पछि वज्रयानले निकै उन्नति गर्‍यो । यिनीहरुले पनि औषधोपचार आदिद्वारा सर्वप्रकारं जगतो हितायको मार्ग नछोडी जनहित गर्दै आएको देखिन्छ, तर यी वज्रयानी बोधिसत्वहरुलाई बोधिसत्व भन्नुभन्दा सिद्ध तथा योगी भन्न जनताले रुचाए । वज्रयानका बोधिसत्वहरुले पनि धेरै तन्त्रहरु रचे । त्यसमा लाग्ने बोधिसत्वहरुको दिनचर्या अर्थात् शील नियमहरु एकै किसिमका छैनन् । यी कुराहरु

उनीहरुको ग्रन्थबाट व्यक्त हुन्छ । अब, हालसम्म यी सबै सम्प्रदाय र निकायहरु विलीन प्राय: भइसक्यो । यो कुरा सबैलाई विदित नै छ ।

संक्षेपमा भन्नुपर्दा स्थविरवादको जातक अनुसार खरायो, बाादरदेखि चक्रवर्ती राजासम्म पनि बोधिसत्वको रुपमा पाइन्छ । त्यस्तै महायानमा पनि पाइन्छ, परन्तु महायानमा अभिताभ बुद्ध पश्चिमतिर अनन्त गगनको सुखावती भुवनमा हालसम्म पनि धर्मोपदेश गर्दै रहनुभएको छ र उहाँको साथमा आर्यावलोकितेश्वर बोधिसत्व आदि रहनुभएको छ भनी विश्वास गरिन्छ । सोही लोकेश्वरलाई यहाँ सेतो मछिन्द्रनाथ तथा पद्मपाणि बोधिसत्वलाई रातो मछिन्द्रनाथ भनी पूजा गर्ने प्रचलन छ । उहाँहरु अहिले पनि यत्रतत्र लोक धातुहरुमा जानु भई जन उद्धार गर्ने गर्नुहुन्छ भन्ने जनविश्वास हालसम्म पनि विद्यमान नै छ । उहाँहरु अवैवर्तिक बोधिसत्वको श्रेणीमा पर्नुहुन्छ । अर्थात् कुनै बोधिसत्वहरुको चित्त परिवर्तन भई बुद्ध हुने उदेश्य छोड्ने हुन्छन्, परन्तु अवैवर्तिक बोधिसत्वहरु कुनै न कुनै समयमा पछि निश्चित रुपले बुद्ध हुने नै छन् भन्ने जनविश्वास छ । महायानको विचारधारा अनुसार अवैवर्तिक बोधिसत्वले जनतालाई हुने जे चिताए पनि चिताउने वित्तिकै सो प्रणिधान पूर्ण हुन्छ, तर अवैवर्तिक बोधिसत्व भएको छैन, हुन लागेको छ भने त्यसको चित्तमा अभिमान उत्पन्न गराउन मारले सबै इच्छा पूर्ण गरि दिन्छ र अभिमानी बनाई हुन लागेको सफलतालाई पनि व्यर्थ बनाई दिन सक्छ भनी अष्टसाहस्रिका प्रज्ञापारमितामा वर्णन गरेको पाइन्छ । यी सबै महायानी विचारधाराहरु हुन् ।

यसरी बोधिसत्वको विभिन्न क्रियाकलापहरु सानो लेखमा उतार्नु तिलसंग हिमालयको तुलना गर्नु समान हो ।



# प्रज्ञोपाय

महायान बुद्ध धर्ममा संवृति सत्य र परमार्थ सत्यका भेदले सत्य दुई प्रकारका हुन्छन् । यिनीहरुको लक्षणहरु बोधिचर्यावतारमा यसरी लेखिएको छ -

*"संवृतिः परमार्थश्च सत्यद्वयमिदं मतं*
*बुद्धेर गोचरस्तत्वं बुद्धिः संवृति रुच्यते"*

अर्थात् नाक, कान आदि ज्ञानेन्द्रियले जानिने, बुझिने वस्तु संवृति सत्य हुन् । ज्ञान बुद्धिले नभ्याउने, नबुझिनेलाई तत्व वा परमार्थ सत्य भनिन्छ । यही संवृति सत्यलाई उपाय भनिन्छ तथा परमार्थ सत्यलाई उपेय पनि भनिन्छ भनेर बोधिचर्यावतारको टीकामा प्रज्ञाकरमतिले यस्तो उल्लेख गरेको छ । "उपायभूतं व्यवहार सत्यमुपेयभूतं परमार्थ सत्यम्" अर्थात् व्यावहारिक सत्य (संवृति सत्य) उपाय हो । परमार्थ सत्य उपेय हो । यहाँ दान, शील, क्षान्ति, वीर्य र ध्यान यी पांच पारमिताहरुलाई व्यावहारिक चर्या भएको हुंदा संवृति सत्य मानिएको हो । यही दानादि चर्यारुपी उपायद्वारा पाइने हुंदा तत्व (परमार्थ तत्व वा प्रज्ञा) लाई उपेय भनिएको हो । संस्कृत भाषामा बुद्धि, ज्ञान, प्रज्ञा शब्दहरु पर्यायवाची जस्तो देखिए पनि परमतत्वलाई मात्र प्रज्ञा शब्द महायान आदि दर्शनमा प्रयोग हुंदोरहेछ भन्ने कुरा बोधिचर्याको यस श्लोकबाट व्यक्त हुन्छ -

*"इमं परिकरं सर्वं प्रज्ञार्थं हि मुनि जगौ*
*तस्मादुत्पादयेत् प्रज्ञां दुःख निवृत्तिकाङक्षया"*

अर्थात् उपर्युक्त दानादि चर्या सबै प्रज्ञा (परमार्थ तत्व) कै निमित्त श्री भगवान् बुद्धले आज्ञा दिनु भएको हो । त्यसकारण सांसारिक जन्म मरण आदि सबै दुःख निवारण गर्ने इच्छाले प्रज्ञा उत्पन्न गर्न योग्य छ, साक्षात्कार गर्न योग्य छ । अतः महायानको दृष्टिकोण अनुसार दान, शील, क्षान्ति, वीर्य र ध्यान यी पांच पारमिताहरु उपाय हुन् । परमार्थ सत्य प्रज्ञा हुन्, परम तत्व हुन् । यी दुवैलाई नै प्रज्ञोपाय भनिन्छ ।

बोधिचर्यावतारको नवम् परिच्छेद जम्मै यही प्रज्ञाको विषयमा लेखिएको छ । यसैको टीकामा हेतुभूत र फलभूतका भेदले प्रज्ञा दुई प्रकारमा विभक्त छन् । प्रज्ञा अर्थात् निर्वाणलाई साक्षात्कार गर्न मद्दत गर्ने प्रज्ञा पनि अधिमुक्ति चर्यामा लागेको र प्रमुदितादि भूमिमा पुगेका व्यक्तिका भेदले दुई प्रकारका हुन्छन् । फलभूत प्रज्ञा त निर्वाणको साक्षात्कार नै भयो । यसलाई सर्वाकारवरोपेत सर्वधर्म शून्यताको अनुभूति भनिन्छ तथा अनिमित्त विमोक्ष पनि भनिन्छ । यहाँ हेतुभूत प्रज्ञालाई श्रुतमयी,

चिन्तामयी तथा भावनामयी प्रज्ञाको रुपमा क्रमश: अभ्यासद्वारा साक्षात्कार गर्नुपर्ने कुरा पनि बिसर्नु हुँदैन।

यही प्रज्ञा र उपायलाई मन्त्रयानअनुसार स्वर अक्षर प्रज्ञा, व्यञ्जन अक्षर उपाय, ललना नाडी प्रज्ञा, रसना नाडी उपाय भनिन्छ भने बाह्य जगतको चन्द्र, उपाय, सूर्य प्रज्ञा भन्ने व्यवहार गरेको पनि पाइन्छ । "त एव ललना रसने चन्द्रसूर्यौ प्रज्ञोपायौ" भनी हेवज्रतन्त्रको टीकामा कृष्णाचार्यले उल्लेख गरेको छ । यति मात्र होइन, कालचक्र (प्रकाशितको १७२ पृष्ठ) मा त विश्व नै प्रज्ञा र उपायको रुपमा वर्णन गरिएको छ । यही भावनालाई प्रज्ञोपायालिङ्गन मण्डल भावना भनिन्छ ।

*प्रज्ञोपायो ऽस्थिमांसं ससलिल रुधिरं पावको मूत्रमेव*
*वातो विट्शून्य शुक्रं भवति वरतनौ श्री रजश्चितमेव*
*श्रोत्राच्छब्दादयोर्न्यं स्वजन कुल वशाद्वाकस्वरुपादयश्चा*
*एवं देव्य: संबुद्धा विषयविषयिणो मण्डले वेदितव्या:*

प्रज्ञा अस्थि, उपाय मांस, पृथ्वी प्रज्ञा, संस्कारस्कन्ध उपाय, आलिप्रज्ञा, वेदनास्कन्ध उपाय, अग्निप्रज्ञा संज्ञास्कन्ध उपाय, अपानवायुप्रज्ञा मल उपाय, रज:प्रज्ञा, शुक्र उपाय, शब्दप्रज्ञा श्रोत्रेन्द्रिय उपाय, गन्ध प्रज्ञा घ्राणेद्रिय उपाय, रुप प्रज्ञा, चक्षु उपाय, रस प्रज्ञा, जिह्वेन्द्रिय उपाय, स्पर्श प्रज्ञा, कायेन्द्रिय उपाय, धर्मधातु प्रज्ञा, मल उपाय, विट्श्राव प्रज्ञा, गुद्द्वार उपाय, गति प्रज्ञा, पाद उपाय, आदान(लिनु) प्रज्ञा, हात उपाय, बोली प्रज्ञा, वागिन्द्रिय उपाय, मूत्रत्याग प्रज्ञा, भग वा लिङ्ग उपाय, शुक्रच्युति प्रज्ञा, शाङ्खनी इन्द्रिय उपाय तथा मामकी, लोचनी, पद्मिनी, तारा आदि देवी प्रज्ञा, वैरोचन आदि बुद्ध उपाय हुन् भनी प्रज्ञोपायको व्यापकता देखाएको छ । माथि आलि (स्वर) प्रज्ञा भनी उल्लेख गरिसकें, अब स्वरमा पनि ऱ्हस्वस्वर उपाय, दीर्घस्वर प्रज्ञा भनी सूक्ष्म भेद गरेको डाकार्णवतन्त्रको सप्तम पटलमा पाउँछौं । "ऱ्हस्वोपाय स्वभावं चेद् दीर्घ प्रज्ञा ऽभिधियते" अर्थात् ऱ्हस्वस्वर "अ" उपाय दीर्घस्वर "आ" प्रज्ञा हो । यही नियम अनुसार अइउऋऌ उपाय आईऊॠॡ ए ऐ ओ औ अं अ: प्रज्ञा हुने भयो ।

यति मात्र होइन, देवीदेवताले लिने वज्रलाई उपाय, घण्टालाई प्रज्ञा भनिन्छ । संक्षेपमा भनूं भने दाँया हातले लिइने जति वस्तुहरु छन्, ती सबै उपाय वर्गमा पर्दछन् भने बायाँ हातले लिइने घण्टा, पुस्तक आदि सबै प्रज्ञा वर्गमा गनिन्छन् । अत: मन्त्रयान तथा वज्रयान अनुसार संसारका सम्पूर्ण पदार्थहरू उपाय र प्रज्ञामा अन्तर्भाव हुने हुन्छन् ।



# बौद्ध धर्ममा पञ्चकायको अवधारणा

पञ्चकाय शब्द विशेष गरेर नामसङ्गीति आदिमा प्रयोग गरिएको देखिन्छ । सोही ग्रन्थको मन्त्रार्थावलोकिनी टीकामा यस्तो लेखिएको छ । "तत्र पञ्चकायत्मकेनि स्वाभाविक, साम्भोगिक, वैपाकिक, निर्माणिक धर्मकायात्मका: पञ्चकाया" भनी पञ्चकायको उल्लेख गरिएको पाइन्छ । यी कायहरुमध्ये स्थविरवादिहरुको त्रिपिटक ग्रन्थमा निर्माण काय र धर्म कायको उल्लेख पाइन्छ । उल्लेख नभएपनि सम्भोग काय पनि छ भनी भन्नै पर्छ । किनभने त्रिपिटकमा रुपकायको वर्णन त छँदैछ । नामसङ्गीतिको टीकामा यस्तो लेखिएको छ - "त्रिकाय धृक इति त्रिकाया धर्म, सम्भोग, निर्माण लक्षणा: तांधारयतीति त्रिकाय धृक" यसरी धर्म, सम्भोग, निर्माण कायको वर्णन गरेका छन् । नागार्जुनले भने चतुस्तवमा चार कायको स्तुति गरेको कुरा सेकोंदेसटीकावाट थाहा पाउँछौं । त्यसमा धर्म काय, सम्भोग काय, निर्माण काय, महासुख कायहरुको वर्णन गरिएको छ ।

## सम्भोग काय

ज्ञान सम्भार र पुण्य सम्भार पूर्ण गरी प्राप्त गरेको शरीरलाई सम्भोग काय भनिन्छ । सोही सम्भोग कायले जनसमूहलाई उद्धार गर्न महाअभिनिष्क्रमण, बुद्धत्व लाभ, धर्मचक्र प्रवर्तन आदि लीला देखाउने हुन्छ । जसरी गौतम बुद्ध, मायादेवीको कोखवाट जन्म भई बुद्धत्व लाभ गर्नु भयो, यस्तो शरीरलाई सम्भोग काय भनिन्छ । यसलाई स्थविरवादिहरु रुपकाय पनि भन्दछन् ।

## निर्माण काय

भगवान गौतम बुद्धले यमक प्रातिहार्य देखाउनु हुँदा आकाशमा बसी आफू समानको अर्को बुद्धलाई निर्माण गर्नुभयो । सो निर्मित बुद्धले गौतम बुद्धलाई प्रश्न गरेको कुरा त्रिपिटकहरुमा उल्लेख भएको पाइन्छ । यस्तो निर्मित बुद्धको शरीरलाई निर्माण काय भनिन्छ ।

परन्तु महायानका एक सम्प्रदायका अनुसार अकनिष्ठ भुवनमा मात्र सम्भोग काय रहन्छ । यहाँ लुम्बिनीमा उत्पन्न भएको गौतम बुद्धको शरीर निर्माण काय हो भनी ज्ञानेन्द्र तिलकको कुरा उद्धरण गरेको हामी पाउछौं । जस्तै-

*"अकनिष्ठ भुवनेरम्ये शुद्धा वास विवर्जिते ।*
*तत्र वुद्ध्यन्ति सम्वुद्धाः निर्मित त्त्विह वुद्ध्यते ॥"*

भनी सम्भोग कायको वर्णन गरिएको छ ।

## धर्म काय

त्रिपिटकमा धर्मकायको उल्लेख भएको छ, तापनि त्यहाँ केवल भगवान वुद्धले उपदेश दिनु भएको स्मृत्युपस्थानादि वोधि पाक्षिक धर्महरुलाई नै धर्मकाय भनेको देखिन्छ । तर पछि धर्मकाय एक पनि होइन, अनेक पनि होइन, भाव पनि होइन, अभाव पनि होइन, आकाश जस्तो निर्लेप, निर्विकार, व्यापक अनिर्वचनीय छ भनी उल्लेख गरिएको छ । त्यो धर्मकाय प्रत्यात्मवेद्य हुन्छ भनि नागार्जुनले वर्णन गरेको छ । यसरी समय समयमा वुद्धोक्त धर्मका शव्दहरुको पनि विभिन्न अर्थमा प्रयोग भएको पाइन्छ । यही धर्म कायलाई ज्ञान धर्मकाय भनी आफ्नू अभिसमयालङ्कारको टीकामा हरिभद्रले उल्लेख गरेको छ । किनभने धर्मकाय नै निस्प्रपञ्चात्मक ज्ञान हो भनिन्छ ।

नामसङ्गीति आदि वज्रयानका ग्रन्थमा भने ज्ञानकाय, समाधिकाय, महासुखकाय, सहजकाय आदि मुख्य कायहरुको पनि उल्लेख गरिएको पाइन्छ ।

## स्वभाविक काय

यस कायको लक्षण मैत्रयनाथले अभिसमयालङ्कारमा यस्तो लेखेका छन् -

*सर्वाकारां विशुद्धिं ये धर्माः प्राप्ता निरास्रवाः ।*
*स्वाभाविको मुनेः कायः स्तेषां प्रकृतिलक्षणः ॥*

ज्ञान स्वभावका स्मृत्युपस्थान आदि धर्म नै अनास्रव तथा अमल, अनागन्तुकरुपले सर्वाकार विशुद्धि भएपछि स्मृत्युपस्थान आदि धर्म नै स्वाभाविककाय हुन्छन् । किनभने वुद्धको प्रकृति स्वभावको लक्षण नै त्यही स्वाभाविक काय हो ।

## वैपाकिक काय

वोधिसत्व अवस्थामा महायानमा रुचि, त्यस विषयमा प्रसाद, रागादी, क्लेशहरुको प्रशम, प्राणीहरु उपर अनुकम्पा, दुष्कर चर्यामा क्षमता, धर्म ग्रहण, धारण, प्रतिवेध गर्नमा मेधा, मार र अरु दार्शनिकहरुवाट अहार्यता तथा प्रहाण गर्ने अङ्गहरुले युक्त हुनु

यी नौ गुणहरुले बोधिसत्वको आत्मभाव परिपक्व हुन्छ । यसरी परिपक्व भएपछि बुद्धत्व लाभ हुन्छ । यही गुणहरुले परिपक्व भएको फलात्मक कायलाइं वैपाकिक काय भनिन्छ ।

अभिसमयालङ्कार तथा नागार्जुनले चतुःस्कायस्तवः आदिमा वैपाकिक काय बुद्धत्वमा नै अन्तर्भाव हुने हुनाले मानेको देखिंदैन । यसैगरी कतै कतै वज्रकायको पनि उल्लेख भएको पाइन्छ । यी सबै कायहरुको विभिन्नता, सम्प्रदाय, गुरु परम्पराका भेदले पनि भिन्न भएको देखिन्छ ।



# प्रणिधि बोधिचित्त

*ॐ नमो बुद्धाय*

*चतुरत्नमयं मेरुमष्टद्वीपोपशोभितम् ।*
*नानारत्नसमाकीर्णं ददेनुत्तरदायिने ॥*
*गुरुभ्यो बुद्ध धर्मेभ्यो संघेभ्यश्च तथैवच ।*
*निर्यातयामि भावेन सम्पूर्णरत्नमण्डलम् ॥*

अर्थात् आठ द्वीपले सुशोभित नाना उत्तम वस्तुले युक्त चतुर्महाभूतरुपी सुमेरुलाई अर्थात् आफ्नू आत्मभावलाई म गुरु बुद्ध, धर्म र संघहरुमा समर्पण गर्दछु, चढाउँछु । यो शरीर हजुरकै हो भनी आत्मभाव त्याग गरी नि:स्वार्थ भाव व्यक्त गर्न गरिने गुरुमण्डलको यो प्रार्थना हो ।

हाल नेपालमा प्रचलनमा आइरहेको बौद्ध धर्म सम्यक सम्बोधिको निमित हो भन्ने कुरा यहाँहरुसामु व्यक्त गर्ने उद्देश्यले मेरा अरु लेखहरुमा पनि व्यक्त भइसकेका छन् । यो सम्यक सम्बोधि लाभ गर्न बोधिचित्त स्थिर गर्नुपर्छ । बोधिचित्त स्थिर गर्न समता भावना गर्नुपर्छ भन्ने कुरा विर्सनु हुन्न । वास्तवमा बोधिचित्त दुई प्रकारले उत्पन्न गरिन्छ । बोधिचित्त पालन गर्न इच्छुक व्यक्तिले सर्वप्रथम "जगतको हित गर्न म बुद्ध हुन सकूं" भन्ने केवल अधिस्थान, प्रार्थना, प्रणिधान मात्र गर्ने हुन्छ । यसरी प्रार्थना गर्नुलाई प्रणिधि बोधिचित्त भनिन्छ । तदुपरान्त यो बोधिचित्तलाई स्थिर गर्न अर्थात् नि:स्वार्थभावले जनहित गर्न हामीले षट्पारमिताको अनुशीलन गर्नुपर्छ । यसरी यी पारमितापूर्ण गर्न दानादी गर्ने अभ्यास गर्नुलाई प्रस्थान बोधिचित्त भनिन्छ । यी दुवै बोधिचित्तको असंख्य पुण्य हुने कुरा श्री शान्तिदेव आचार्यले बोधिचर्यावतारमा यसरी उल्लेख गर्नु भएको छ -

*बोधिप्रणिधिचित्तस्य संसारेऽपि फलं महत् ।*
*न त्वविच्छिन्नपुण्यत्वं यथा प्रस्थानचेतस: ॥*

अर्थात् प्रस्थान बोधिचित्तको समान अविच्छिन्न पुण्य नभए पनि प्रणिधि बोधिचित्तको पनि संसारमा ठुलो पुण्य हुन्छ । त्यसकारण दानादि पारमिताको अभ्यास गर्न नसके पनि "बुद्धो भवेयम् जगतो हिताय" मात्र भनी केवल मनले जगतको हित चिताउने अभ्यास मात्र गर्न सकेमा त्यो पुण्यको प्रभावले जगतमा शान्ति, समृद्धि एवं सुस्वास्थ्य लाभ हुन्छ भन्ने कुरामा सन्देह छैन । जसको ज्वलन्त प्रमाण हो,

श्री भगवान् बुद्धले "मनो पुब्बंगमा धर्मा" भनी उपदेश दिनु, अर्थात् म आफ्नो घरमा शान्ति कायम गर्छु, आफ्नो देशमा शान्ति कायम गर्छु र विश्वभरी शान्ति नै शान्ति ल्याई दिउँ भन्ने भाव सर्वप्रथम मनमा उठाउनु पर्छ । यदि त्यस्तो भाव मनमै उठेन भने आफ्नू घर, राष्ट्र तथा विश्वमा शान्ति ल्याउँछु भन्ने कुरा सम्भव हुँदैन । त्यसैले प्रणिधि बोधिचित्तको पनि महत् फल हुन्छ भनी प्रशंसा गरिएको हो ।

त्यसकारण दानादि पारमिता पूर्ण गर्न नसके पनि केवल पूर्ण गर्न सकूं भन्ने पारमिता भावनाको प्रणिधि विधि व्यक्त गर्ने गाथा यहाँहरुसमक्ष प्रस्तुत गर्न चाहान्छु -

*जगतको दुःख हर्नु छ धेरै, स्वार्थ विनाको करुणा राखी*
*भोकालाई खाना दिई, नंगालाई लुगा दिई ।*
*चाहना हेरी चाहेको दिई बोधिचित्त स्थिर गरी ॥*
*जगतको दुःख ..........*

*जगतको प्यारो शील लिई, लोकमा मिल्ने मार्ग लिई ।*
*आशय मिल्दो शील दिई, बोधिचित्त स्थिर गरी ॥*
*जगतको दुःख ..........*

*गाली गर्ने, कुट्नै आउने, प्राणीको पनि जय नै गर्दै ।*
*दुःखै भएपनि संधै सहँदै बोधिचित्त स्थिर गरी ॥*
*जगतको दुःख ..........*

*मुटु नै फुट्ला, हाडै गल्ला, तैपनि जनहित गरी छोड्छु ।*
*भन्ने वीर्य मनमा लिई, बोधिचित्त स्थिर गरी ॥*
*जगतको दुःख ..........*

*मैले जस्तै सबैले सुख चाहेकोले म र अरुमा समता नै छ ।*
*भन्ने समता ध्यान गरी बोधिचित्त स्थिर गरी ॥*
*जगतको दुःख ..........*

*माया ममता सपना नै हो, देखेका ती सच्चा होइनन् ।*
*भन्ने प्रज्ञा पूर्ण गरी बोधिचित्त स्थिर गरी ॥*
*जगतको दुःख ..........*

उपर्युक्त "भोकालाई" भन्ने गाथामा भोका नंगालाई खाना दिन सकूं, लाउन दिन सकू, रोगीलाई औषधी दिन सकूं भन्ने नि:स्वार्थ भावले दानपारमिता पूर्ण गर्न गरिने प्रणिधान हो ।

"जगतको प्यारो" भन्ने गाथामा चोरी गर्नु, मारपिट गर्नु, झुठो बोल्नु, व्यभिचार गर्नु, मद्यपान गर्नु, आदि अकुशल कर्म कसैको लागि पनि राम्रो हुदैन । अत: यी अकुशल कर्म छोडी जगतलाई मनपर्ने शील पारमिता पूर्ण गर्न सकूं भन्ने प्रणिधान हो ।

"गाली गर्ने, कुट्नै आउने" भन्ने गाथामा दानादि पुण्य कर्म गर्दा दु:ख भएपनि सहेर क्षान्तिपारमिता पूर्ण गर्न सकूं भन्ने प्रणिधान हो ।

"मुट्‌ नै फुट्‌ला" भन्ने गाथामा जतिसुकै दु:ख कष्ट सहनु परे पनि जगतहित गर्ने काममा उत्साह गरी, प्रयत्न गरी वीर्यपारमिता पूर्ण गर्न सकूं भन्ने प्रणिधान हो ।

"म र उसले सुख चाहेमा" भन्ने गाथामा आफुलाई सुख मनपर्ने जस्तै अरुलाई पनि सुख मन पर्ला, दु:ख कदापि मन पर्ने छैन भनी सबै प्राणीलाई आफू समान भावना गर्न सकूं भनी गरिने ध्यानपारमिता पूर्ण गर्ने प्रणिधान हो ।

"माया ममता" भन्ने गाथामा म, मेरो भन्ने अहङ्कार, ममकार रहुन्जेलसम्म नि:स्वार्थ भावले जनहित गर्न नसकिने हुनाले यी जति पनि हामी देख्छौं, ती सबै सच्चा होइन, सपना समान हुन्‌ भनी भावना गर्नु प्रज्ञापारमिता पूर्ण गर्ने प्रणिधान हो ।

हाम्रा पूर्वजहरुले उपर्युक्त प्रणिधानहरु विहार-विहारमा प्रत्येक अष्टमी, पूर्णिमा आदि पुण्य पर्वहरुमा धार्मिकजनहरुसंग भेला भई अष्टमी व्रत, उपोषध व्रत आदि गर्दा यी प्रणिधान गरिन्थ्यो । अब पनि सामूहिक रुपमा यस्तो प्रणिधान मात्र गर्ने व्यवस्था मिलाउन सके पनि व्यक्ति व्यक्तिमा बोधिचित्त उत्पन्न भई शान्ति सुव्यवस्थाको वातावरण सृजना गर्न सहयोगी हुनेछ । आर्य धर्ममा एकता आउने वातावरण सृजना हुनेछ भन्ने मेरो विश्वास छ ।

उपर्युक्त धर्मानुस्मृतिको पुण्यले सम्पूर्ण प्राणी सुखी होउन्‌, निरोगी होउन्‌, सर्वत्र कल्याणै-कल्याण होस, शान्ति होस्‌ भनी म कामना गर्दछु ।

जय शान्ति क्षेत्र नेपाल !!!



# आत्म निरीक्षण

श्रावस्तीमा एउटी सेठनीले पावेय्य भन्ने आजीवकलाई छोरा जस्तै माया गरी सेवा गरेकी थिइन् । एकदिन उनका छिमेकीहरुले भगवान् बुद्धको धर्मदेशना सुनी बुद्धको प्रशंसा गर्न थालेको त्यो सेठनीले पनि सुनिन् । यसरी उनीहरुको कुरा सुनेर प्रभावित भई म पनि बुद्धको धर्म सुन्न विहारमा जान्छु भन्ने महान इच्छा गरेर उनीले आजीवकसंग सोधिन् । तर उनको इच्छा विपरीत आजीवकले बुद्धकहाँ नजाऊ भनेर रोक्यो । बुद्धको धेरै प्रशंसा सुनिसकेकी ती सेठनीले आजीवकसंग वारम्बार बुद्धकहाँ जान्छु भन्दा पनि रोकेकोले वरु भगवान्लाई मेरै घरमा निमन्त्रणा गरेर भोजन पनि गराउंछु, धर्म पनि सुन्छु भन्ने निधो गरिन् । अनि साँझपख आफ्नो छोरालाई बोलाएर जाऊ बाबु, भोलिको निमित्त भगवान् बुद्धलाई निमन्त्रणा दिएर आऊ भनी पठाइन् । छोरो पनि जाँदा जाँदा आजीवकको बस्ने ठाउँमा पहिले गएर वन्दना गरी बस्यो । आजीवकले कहाँ जान लागेको बाबु भनेर सोध्यो । त्यसले पनि भगवान् बुद्धलाई निमन्त्रणा दिन आमाले पठाएको हो भनी जवाफ दियो । अनि आजीवकले बाबु तिमी बुद्धकहाँ नजाऊ भन्दा म आमासंग डराउंछु, म त जान्छु बा भनेर सेठनीको छोराले जवाफ दियो । आजीवकले फेरि भन्यो "बुद्धकहाँ नजाऊ, वरु भोलि बुद्धको लागि तयार पारेको सत्कार हामी दुईले बाँडेर खाउँला ।" त्यसो भन्दा पनि सेठनीको छोरा आमाले गाली गर्नुहुन्छ भनेर जान लागेको देखेर आजीवकले उनलाई भन्यो - "त्यसोभए मेरो घरको ठेगाना यो हो भनी नबताइकन आऊ । फर्कंदा पनि अर्कै बाटोबाट आऊ भनी कुरा सिकायो ।

त्यो सेठनीको छोराले पनि आजीवकले सिकाएजस्तै भगवान् बुद्धकहाँ निमन्त्रणा दिएर फर्के । सेठनीले सोध्दा निमन्त्रणा दिएर आएँ भनी जवाफ दिए । आजीवक भोलिपल्ट विहान सबेरै सेठनीको घरमा आईपुग्यो र सेठनीको छोरासँगै कोठाभित्र लुकेर बसे । आमाचाहिं छिमेकीहरुसहित घरमा लिपपोट गरी लावा, फूलहरु छरी राम्रो आसन बिछ्याई सबै कुरा ठीक पारी राखे । भगवान् बुद्ध पनि विहान सबेरै पात्र, चीवर लिई उपासिकाको घरमापाल्नुभयो । भगवान् बुद्धलाई देख्नासाथ पञ्चाङ्ग प्रणाम गरी घरभित्र लगी आसनमा बसाइन् । अनि हात गोडा धुवाई उत्तम भोजन गराइन् । भोजन सिद्धिएपछि भगवान् बुद्धबाट धर्मदेशना सुन्ने महान् इच्छा गरी सेठनीले भगवानको पात्र लिइन् । भगवानले पनि मधुर शब्दमा पुण्यानुमोदना गर्नुभयो । सेठनीले पनि भगवान् बुद्धको धर्मदेशनालाई श्रद्धापूर्वक साधुकार दिंदै सुनिरहेकी

थिइन् । यो देखेर कोठाभित्र लुकेर बसेको पावेय्य आजीवकले सहने सकेन । बुद्धको अघिल्तिर आएर उनले बुद्धलाई पनि, सेठनीलाई पनि गाली गरी बाहिर निस्क्यो । भगवान् बुद्धले शान्तपूर्वक धर्मदेशना गरी नै रहनुभयो । तर लज्जाले गर्दा उपासिका सेठनीको चित्त धर्मदेशनामा गएन । अनि उपासिका ! तिम्रो मन धर्मदेशनामा लागेन ? भनेर बुद्धले आज्ञा भयो । सेठनीले पनि हो भन्ते, आजीवकले गर्दा मेरो चित्त खलबलियो भनेर बिन्ती गरिन् । अनि भगवान्ले आज्ञा भयो - धर्म गर्दा यस्ता बेमेलका मानिसहरुको कुरालाई मनमा लिनुहुँदैन, यिनीहरुको कुरा मनमा नलिई बरु आफ्नै बारे मात्र राम्रो र नराम्रो ख्याल राख्नुपर्छ भनी निम्नलिखित गाथा भगवान्ले आज्ञा भयो -

*न परेसं विलोमानि न परेसं कताकतं ।*
*अत्तनोव अवेक्खेय्य, कतानि अकतानि च ॥७॥*

(धम्मपद पुप्फ वर्ग)

अर्थात् हामीलाई अरुले चित्त दुख्ने गरी गरेको निन्दा तथा गालीलाई हामीले सम्झनु हुँदैन । अरुले असल गऱ्यो वा असल गरेन, उन्नति गऱ्यो वा उन्नति गरेन पुण्य गऱ्यो वा पुण्य गरेन आदि मनमा लिईरहनु पनि हुँदैन । असल काम गर्न चाहनेले अर्काको चिवा चर्चा र निन्दा प्रशंसा गर्नु आवश्यक छैन । आफ्नैबारे मात्र मैले असल काम गरे वा गरिन ? पुण्यादिकर्म मैले गरे वा गरिन ? भनी निरन्तर सम्झना तथा प्रत्यवेक्षना मात्र गरिरहनु पर्छ । तसर्थ तिमीले आफ्नो अनित्य, दुःख, अनात्मको भावना गरिरहनुपर्छ, आजीवकको कुरा मनमा लिईरहनु हुँदैन भनी भगवान्ले धर्मदेशना टुङ्ग्याउनुभयो ।

भगवान् बुद्धको धर्मदेशना सुनेर त्यसैबेला ती उपासिकाले स्रोतआपत्ति फल प्राप्त गरिन् । यो उपदेशबाट बहुजन हित पनि भयो । किनभने यो उपदेश धार्मिक क्षेत्रमा मात्र होइन, अरु क्षेत्रमा कार्यरत व्यक्तिहरुको लागि पनि त्यत्तिकै फलदायी र उपयोगी छ । हामीले आफ्नो कार्य सफल गर्न होस् या देश विकास गर्न होस्, यस गाथाबाट यथेष्ट प्रेरणा पाउन सकिन्छ । यो संसारमा जतिसुकै उत्तम कार्य गरेपनि अरुले गाली नगर्ला, दोष नदेखाउला भन्न सकिँदैन । अतः अरुको निन्दा वा प्रशंसा मनमा नलिइकन उन्नति एवं विकास गर्दै लैजानुपर्छ भन्ने उपदेश यो गाथाबाट हामी पाउँछौं । साथै अरुको टीका टिप्पणीमा नलागी आफूले ठीक कार्य गरेको छ वा छैन भनेर आफ्नै विषयमा मात्र चिन्तन गर्नु उचित छ भन्ने सत्य उपदेश पनि हामी यसबाट पाउँछौं ।



# सम्यक् सम्बोधि

श्री भगवान गौतम बुद्ध हाम्रो राष्ट्रको भूभाग लुम्बिनीमा अवतरण हुनुभएको कुरा सर्वविदित छ । उहाँको धर्म भारत, श्रीलङ्का, बर्मा, थाइल्याण्ड, तिब्बत, चीन, मङ्गोलिया आदि विभिन्न क्षेत्रमा धेरै समय अघि नै प्रचार भइसकेको कुरा पनि सर्वविदित छ । तर वातावरण अनुसार प्रत्येक क्षेत्रमा भगवान बुद्धको धर्मको परम्परा पनि थोर बहुत परिवर्तन हुँदै गइरहेको पाइन्छ । त्यति मात्र होइन, जनसमाजको मनोवृत्ति हेरी व्यक्ति सुहाउँदो धर्मदेशना गर्न भगवान बुद्धले सम्यक सम्बोधि, प्रत्येक बोधि र श्रावक बोधिका भेदले उपदेश दिनुबाट पनि यो कुरा अझ बढी स्पष्ट हुन आउँछ । वस्तुत: यी उपदेशहरु सर्वमान्य नै छन् भन्दा अत्युक्ति नहोला ।

अब यी तीन बोधिमध्ये हाल हाम्रो नेपालमा कुन परम्पराको बोधि चलेको छ भन्ने अवगत गर्नु उपयुक्त देखिन्छ । नेपाली परम्परामा गुभाजु, शाक्य, उदास आदि विभिन्न वर्गहरुले गर्दै आएका पूजाआजाको अध्ययनबाट हामी यहाँको धर्म परम्पराको विचारधारा थाहा पाउन सक्छौं । गुभाजुहरु जातकर्मदेखि अन्त्येस्तिसम्मका पूजाआजा गर्ने पुरोहित आचार्यको रुपमा देखिन्छ । उपर्युक्त पूजाआजा गर्दा सबभन्दा पहिले गुरुमण्डल पूजाबाट आरम्भ गर्ने चलन छ । यो कुरा विज्ञजनहरुबाट छिपेको छैन । यसरी सबै पूजामा गुरुमण्डल पूजालाई किन अग्रस्थान दिइयो भन्ने शङ्का हाम्रो मनमा यदाकदा उठ्नु स्वाभाविक छ । तर गुरुमण्डल पूजालाई नियालेर हेर्दा केही महत्वपूर्ण कुराहरु हाम्रो सामु यसरी देखा पर्दछ -

*रत्नत्रयं मे शरणं सर्वं प्रतिदिशाम्यघम् ।*
*अनुमोदये जगद्पुण्यं बुद्ध बोधौ दधे मन: ॥*
*आयोधात् शरणं यामि बुद्ध धर्म गणोत्तमे ।*
*बोधिचित्तं करोम्येष स्वपरार्थ प्रसिद्धये ॥*

*उत्पादयामि वर बोधिचित्तम्*
*निमन्त्रयामि अहु सर्वसत्वान् ।*
*ईत्थं चरिसे वर बोधि: चर्यांम्*
*बुद्धो भवेयं जगतो हिताय ॥*

अर्थात् म वुद्ध, धर्म, संघको शरण परेको छुं र आस्तिक दृष्टि लिएको हुँदा पुण्यको स्वर्गादि सुख र पापको नरकादि दुःख फल हुन्छ भन्ने मैले विश्वास गरेको छुं। त्यसकारण जानी नजानी आमा बाबु, गुरु तथा श्रमण, ब्राम्हण आदि मान्यजनप्रति पनि कुभलो चिताई मैले गरेका अकुशल कर्महरु त्रिरत्न साम् व्यक्त गरी पापदेशना गर्दैछु । जुन पाप अव उपरान्त फेरि कहिल्यै नगर्ने प्रतिज्ञा गरी अकरण संवरशील पनि ग्रहण गर्दैछु । शैक्ष, अशैक्ष, प्रत्येक वुद्ध तथा वोधिसत्व र वुद्धहरुवाट दशै दिशामा जव असंख्य पुण्य कर्म गर्नुभएको कुरा म सुन्छु, तव म आनन्दले पुलकित भई हर्षित हुन्छु, अनुमोदित हुन्छु साथै सम्यक सम्वोधि अर्थात् सम्यक सम्वुद्धको वोधिमा मेरो मन श्रद्धाले विह्वल हुन्छ । यही सम्यक सम्वोधिप्रतिको श्रद्धाले म वुद्ध, धर्म र संघको शरणमा परेको हुं तथा स्वहित र परहित हुने वोधिचित्त धारण गरेको हुं । अरु सहस्र चित्तहरुमध्ये वोधिचित्त नै एकमात्र उत्तम चित्त भएकोले कहिल्यै पनि यो वोधिचित्त मैलै छोड्ने छैन, सधैं वोधिचित्त उत्पन्न गरी राख्ने छु । त्यति मात्र होइन, सवै जनतालाई पनि यो उत्तम वोधिचित्त उत्पन्न गर्न म आह्वान गर्दछु, आमन्त्रणा गर्दछु । यसरी वोधिचर्या पालन गरी जगतको हित गर्न म वुद्ध हुन सकूं ।

उपर्युक्त प्रार्थनावाट नेपालमा चलेको वुद्ध धर्म सम्यक सम्वोधिको निमित्त रहेछ भन्ने कुरा हामीलाई स्वतः स्पष्ट हुन आउंछ । सम्यक सम्वोधि लाभ गर्नुको निमित्त वोधिचर्या वा भद्रचर्या पालन गरिन्छ । यो चर्याको कुनै जाति विशेष वा सम्प्रदायसंग सम्वन्ध छैन । जसको चित्त जगत उद्धारमा लागेको छ, सम्यक सम्वोधि प्राप्त गर्न उद्यत छ, केवल उनैसंग यो चर्याको सम्वन्ध छ । जगत हित गरुं, वुद्ध वनुं भन्ने भावमा समर्पित व्यक्तिहरुको लागि सम्यकसम्वोधि (वुद्धवोधि)को उपदेश भगवानले दिनुभएको हो । सम्यक सम्वोधि त्यसै लाभ गर्न सकिंदैन । वोधिचित्त उत्पन्न गर्न सकेमा मात्र सम्यक सम्वोधि लाभ हुने हुन्छ । वोधिचित्त पनि त्यसै स्थिर हुंदैन । समता भावना गर्न सके मात्र वोधिचित्त लाभ हुन्छ भन्ने कुरा व्यक्त गर्न श्री शान्ति देव आचार्यले आफ्नू शिक्षा समुच्चयमा यसरी उल्लेख गर्नुभएको छ -

*यदा मम परेपाञ्च भयं दुःखं च न प्रियम् ।*
*तदात्मनः को विशेषो यत्तं रक्षामि नेतरम् ॥*
*दुःखान्तं कर्तुकामेन सुखान्तं गन्तुमिच्छता ॥*
*श्रद्धामूलं दृढीकृत्य वोधौ कार्या मतिदृढा ।*

अर्थात् मलाई भय, दुःख, रोग, व्याधि, अशान्ति मन पर्दैन । निर्भय, स्वतन्त्रता, सुस्वास्थ्य र शान्ति मात्र मनपर्छ । त्यस्तै अरुलाई पनि भय, दुःख, रोग, व्याधि,

अशान्ति अवश्य मनपर्ने छैन । अत: म र अरुमा के फरक छ ? यरु समान छ भन्ने विचार लिई आफू र पराइ समान छ भन्ने समता भावना दिनौं अभ्यास गर्ने गर्नुपर्छ । अनि मात्र म मात्र सुरक्षित होउं, अरु जेसुकै होस् भन्ने विचार हटी आफू र जगतलाई हित गर्ने विचार उत्पन्न हुन्छ, बोधिचित्त उत्पन्न हुन्छ ।

त्यसकारण आफ्नू र जगत्सत्वको दु:ख अन्त गरुं, अपार सुख प्राप्त गरुं भन्ने व्यक्तिले श्रद्धारुपी जरोलाई निश्चल बनाउनुपर्छ । अनि मात्र स्वहित र परहित गर्ने बोधिचित्त दृढ हुन्छ । यहाँनिर श्री भगवान बुद्धले उपदेश दिनुभएको श्रद्धादि पञ्चइन्द्रियलाई सन्तुलन गर्ने समता भावनाको कुरा थाहा पाउनु उचित सम्झन्छु ।

श्रद्धा, वीर्य, प्रज्ञा, समाधि, स्मृति यी पाँच मनोवृतिलाई श्रद्धादि पाँच इन्द्रिय तथा आवश्यकता अनुसार पञ्चबल भनेर पनि श्री भगवानले संज्ञा दिनुभएको देखिन्छ । श्रद्धाको विरोध भाव प्रज्ञा हो । वीर्यको विरोध भाव समाधि हो । तर स्मृति चाहिं यी चारै मनोवृतिको सहयोगी तथा पोषक तत्व हो । बोधिचित्तलाई दृढ र स्थिर बनाउन श्रद्धा र प्रज्ञाको सन्तुलन जति गर्नु आवश्यक छ, उत्तिकै वीर्य र समाधिको पनि सन्तुलन गर्नु आवश्यक छ । स्मृतिले भने यी चारै मनोभावलाई टेवा दिइरहेको हुन्छ । यदि श्रद्धा प्रबल भयो र प्रज्ञा मन्द भयो भने हित अहित विचार नगरी जसले जे भन्यो त्यही कुरा मान्ने अन्धश्रद्धा, अन्धविश्वास प्रबल हुन्छ । पुन: प्रज्ञा मात्र प्रबल भई दियो भने आफ्नू मात्र स्वार्थ सिद्ध गर्ने प्रवृति उत्पन्न हुन्छ । अनि स्वपर हित गर्ने बोधिचित्तमा श्रद्धा मन्द हुन थाल्छ । यी कुराको मनमा स्मृति राखी श्रद्धा एवं प्रज्ञाको उचित सन्तुलन मिलाई बोधिचित्त स्थिर राख्ने प्रयास गर्नुपर्छ भन्ने भाव पनि श्री शान्ति देवको शिक्षामा झल्कन्छ ।

फेरि बोधिचित्त स्थिर गरी सम्यक सम्बोधि लाभ गरुं भन्ने व्यक्तिले वन्दना, पूजना, पापदेशना, अनुमोदना, अध्येषणा, याचना, पुण्य परिणामना यी सात पूजा विधिको अभ्यास गर्नुपर्छ । बोधिचर्यामा यी सात विधिलाई सप्त विधानुत्तर पूजा भनिन्छ । यी मानसिक पूजालाई बोधिचर्याको प्रबल अङ्ग मानिन्छ । जुन पूजा यस प्रकार अभ्यास गरिन्छ –

## वन्दना

दशै दिशामा अनन्तलोक धातुहरु छन्, ती लोक धातुहरुमा अनन्त बुद्ध, धर्म, संघहरु हुन सक्छन् । उहाँहरुको गुणात्मक स्तुति प्रणाम गर्नुलाई वन्दना भनिन्छ ।

## पूजना

उत्तम पुष्प, धूप, दीप, नैवेद्य, सुगन्ध, वस्त्र, छत्र आदि त्रिरत्नलाई चढाउनुलाई पूजा भनिन्छ ।

## पाप देशना

श्री गुरु बुद्ध आदिको प्रतिमा अगाडी आफूले गरेको पाप अकुशल कर्महरु सम्झी यसको फल नराम्रो नै हुन्छ, यी पापहरु अब उप्रान्त मैले गर्ने छैन भनी पाप व्यक्त गर्नुलाई पाप देशना भनिन्छ ।

## अनुमोदना

दशै दिशामा शैक्ष, अशैक्ष, प्रत्येक बुद्ध, बोधिसत्व तथा बुद्धहरुबाट गर्नु भएको पुण्यहरु सम्झी प्रसन्न हुनु, हर्षित हुनुलाई अनुमोदना भनिन्छ ।

## अध्येषणा

अनन्त लोक धातुमा अनन्त बुद्धहरु हुन सक्छन् । उहाँहरु यस लोकमा पाल्नु भै धर्म देशना गर्नु हुनेछ, धर्मचक्र परिवर्तन गर्नुहुनेछ भनी सम्झनुलाई अध्येषणा भनिन्छ ।

## याचना

बहु जनहित, बहु जनसुख हुने बुद्ध कृत्य पूर्ण गरी निरुपाधिशेष निर्वाण हुन चाहने बुद्धहरु पनि हुन सक्छन् । उहाहरु निर्वाण नहुनहोस्, यहीं पृथ्वीमा क्षेत्र रज प्रमाण कल्पसम्म स्थिर भएर बस्नुहोस् भनी प्रार्थना गर्नु, माग गर्नुलाई याचना भनिन्छ ।

## पुण्यपरिणामना

मैले वन्दना, पूजना, पापदेशना, अध्येषणा याचना आदि गरी केही पुण्य लाभ गरेको छु भने त्यो पुण्यद्वारा जनहित होस्, बुद्धबोधि लाभ गर्न सकोस् भनी आफ्नू पुण्य जनहितमा परिवर्तन गर्नुलाई पुण्य परिणामना भनिन्छ ।

यी उपर्युक्त सप्तविधानुत्तर पूजा शरणगमन, दान, शील, क्षान्ति, वीर्य, ध्यान जस्ता पारमितालाई अंगाली नित्य पूजाआजाको रुपमा गुरुमण्डल पूजालाई अग्रस्थान दिई नेपाली परम्पराले सम्यक सम्बोधि प्राप्त गर्नलाई नै निरन्तर प्रयास गर्दै आइरहेको कुरा स्पष्ट हुन्छ ।



# अवलोकितेश्वरको आदर्श परात्मपरिवर्तन

अष्टोत्तरशत अवलोकितेश्वरको महिमा समस्त बौद्धमार्गीहरुको लागि कुनै नौलो कुरा होइन । बौद्धमार्गीहरुले अवलोकितेश्वरमा ठूलो श्रद्धा भाव गर्दै आइरहेको कुरा सर्वविदितै छ । तर यी लोकेश्वरहरु कुनै शान्त मुद्रामा अवस्थित छन त कुनै धेरै हातहरु भएका र ती हातले विभिन्न वस्तुहरु जस्तै कि कमल, कमण्डलु, त्रिशुल आदि समाइरहेको देखिन्छ । यसरी श्री अवलोकितेश्वरहरुले विभिन्न समाई राख्नु र विभिन्न मुद्रामा अवस्थित रहनुको अर्थ के हो ? उद्देश्य के हो ? भन्ने विषयमा जिज्ञासु पाठकहरुसमक्ष केही छोटो परिचय व्यक्त गर्ने इच्छा राखिएको छ ।

आफ्नू मनोवैज्ञानिक विश्लेषणको आधारमा श्री भगवान शाक्यमुनिले सम्पूर्ण मनुष्यको प्रकृति चौरासी हजार प्रकारमा वर्गीकरण गर्नुभएको छ । यही चौरासी हजार प्रकारका व्यक्तिहरुलाई चौरासी हजार प्रकारकै धर्मदेशनाद्वारा मात्र उद्धार गर्न सकिने हुनाले नै भगवानले चतुराशीति सहस्र धर्मस्कन्ध देशना गर्नु भएको हो भन्ने विद्वानहरुको विचार छ ।

यही दृष्टिकोणकै आधारमा श्री अवलोकितेश्वरले पनि व्यक्तिको स्वभावलाई उपयुक्त हुने रुपले विभिन्न स्वभावका व्यक्तिहरु उद्धार गर्न अष्टोत्तरशत रुप धारण गरी जगत उद्धार गरी रहनुभएको छ भन्ने कुरा विभिन्न कथाहरुद्वारा स्पष्ट हुन्छ । त्यस्तै एउटा प्रासङ्गिक कथा तल उद्धृत गरिन्छ ।

कुनै दिन भगवान तथागतले भन्नुभयो - "एक वेला जब म सुगन्धमुख भन्ने वणिकपुत्र भएर मनुष्य जन्म लिइराखेको थिएं, त्यत्ति वेला पनि मैले श्री विपश्वी तथागतको मुखबाट श्री आर्यावलोकितेश्वरको गुण वर्णन सुनेको थिएं" ।

अनि त्यसपछि श्री शिखी तथागतसंग पनि आर्यावलोकितेश्वरको वर्णन यसप्रकार सुनेको थिएं -

श्री आर्यालवलोकितेश्वरले कहिले बुद्धको रुपमा जगत उद्धार गर्नुहुन्थ्यो त कहिले प्रत्येक बुद्ध, अर्हत भएर उद्धार गर्नुहुन्थ्यो । त्यत्तिमात्र होइन, महादेव, नारायण, ब्रम्हा, इन्द्र, वरुण, कुबेर, अग्नि, वायु, चन्द्र, सूर्य, गणेश, यक्ष आदि भएर त कहिले राजा, राजपुरुष, आमा-बाबुको रुप लिएर पनि प्राणी उद्धार गरेको कुराहरु मेरो पूर्वजन्महरुमा पहिलेका बुद्धहरुको मुखबाट मैले श्री आर्यावलोकितेश्वरको महिमा, महात्म्य तथा गुण वर्णनहरु सुनेको छु ।

श्री शाक्यमुनि भगवानले आज्ञा भएका यी उपर्युक्त कुरा गुणकारण्ड व्यूह महायान सूत्रमा लेखिराखेको पाइन्छ ।

यसरी परापूर्वकालदेखि नै श्री आर्यावलोकितेश्वरले जुन-जुन रुपद्वारा विनीत गर्न योग्य छ, सद्धर्ममा स्थिर राख्न सकिन्छ, त्यही, त्यही रुपले जगत उद्धार गर्दै आउनुभएको कुरा स्पष्ट हुन्छ । अत: आर्यावलोकितेश्वरको गुण, रुप तथा मूर्तिको अन्त छैन भनी दृढ निश्चय गरी १०८ अवलोकितेश्वरहरुले पनि विभिन्न समयमा विभिन्न रुप लिएर जगत कल्याण गरिरहनुभएको छ भन्ने कुरामा श्रद्धा गर्नु उचित छ । वुद्ध, वोधिसत्वहरुको विषयमा हामी जस्तो साधारण व्यक्तिले चिवा चर्चा गर्नु उपयुक्त छैन । यस्तो चिवा चर्चा र विचिकित्सा (शङ्का)द्वारा हाम्रो चित्त विक्षिप्त हुनसक्छ भन्ने आचार्यहरुको भनाइ छ ।

१०८ लोकेश्वरहरुमध्ये धेरैजसो लोकेश्वरहरुको साधन गर्ने विधि साधनमाला भन्ने पुस्तकमा लेखिएको पाइन्छ । जुन साधनमालाकै विधिद्वारा श्री आर्यावलोकितेश्वरको साधना गरी वस्ने व्यक्तिहरु अद्यापि हाम्रो समाजमा नपाइएका होइनन् । उक्त साधकहरुको हित, सुख र मङ्गलको कामना गरी श्री शान्ति देव आचार्यको परात्मपरिवर्तन भन्ने उपदेशको केही अंश यहाँ उल्लेख गर्नु उपयुक्त ठान्दछु । वास्तवमा यही साधनाको आदर्शमा अवलोकितेश्वरको महात्म्य अवस्थित छ ।

## परात्मपरिवर्तन

हामीले जति पनि प्राणीहरु देखेका छौं, सम्झेका छौं, ती सम्पूर्ण प्राणीहरु अरु होइन, म आफैं हुं भनी अरुलाई आफू, आफूलाई अरु सम्झने महान विधिलाई परात्मपरिवर्तन भावना भनिन्छ । यस्तो भावना गर्ने व्यक्तिमा "मलाई जसरी रोग मनपर्दैन, दु:ख कष्ट मनपर्दैन, खान नपाएको मनपर्दैन, त्यस्तै अरुलाई पनि रोग, दु:ख, कष्ट, खान नपाउनु आदि मनपर्दैन भन्ने वुझेर सम्पूर्ण प्राणीहरुलाई रक्षा गर्ने, उद्धार गर्ने, दया गर्ने चित्त उत्पत्ति हुन्छ । यही परात्मपरिवर्तन ध्यान भावना गरी जगत उद्धार गर्ने सदासर्वदा उद्यत रहने श्री करुणामयलाई अवलोकितेश्वर भनिन्छ । किनभने उहाँ श्री अवलोकितेश्वरले जुन-जुन व्यक्तिलाई अवलोकन गर्नुहुन्छ, हेर्नुहुन्छ, तद् तद् व्यक्तिलाई आफू नै ठान्नुहुन्छ र आफू नै अरु ठान्नुहुन्छ । जुन कुरा

श्री शान्तिदेव आचार्यले बोधिचर्यावतारको ध्यानपारमिता अष्टम परिच्छेदमा यसरी व्यक्त गरेको छ -

*"अध्यतिष्ठदतो नाथः स्वनामाप्यवलोकितः ।"*

अर्थात् यही परात्मपरिवर्तन ध्यान भावना गर्नु हुने भएकोले उहाँ श्री करुणमयनाथले आफ्नू नाम नै अवलोकित भनेर अधिस्थान गर्नुभयो । जति पनि दीन दुःखीहरु देख्नुभयो, ती सबै म आफैं हुं भन्ने सम्झेर अरुको दुःखमा आफू दुःखी भएर करुणा राख्ने हुनाले नै करुणामयलाई अवलोकितेश्वर भनिन्छ ।

यो परात्मपरिवर्तन भावना गर्ने व्यक्तिलाई निन्दा चर्चा आदि विभिन्न विघ्न वाधाहरु आउन सक्छ, जीवन नै निरस लाग्नसक्छ । तर वास्तवमा यही परात्मपरिवर्तनको भावना विना कुनै पनि कार्य सिद्धि हुँदैन । वोधिचित्त पनि स्थिर हुँदैन । वोधिचित्त स्थिर भएन भने वोधिज्ञान लाभ हुनु असम्भव छ । अतः आचार्य शान्ति देवले यही ध्यान भावनालाई दृढ गर्नुपर्छ भनेर यसरी आज्ञा भएको छ -

*"आत्मानं चापराञ्चैव यः शीघ्रं त्रातुमिच्छति ।*
*सचरेत्परमं गुह्यं परात्मपरिवर्तनम् ।"*

अर्थात् आफूलाई पनि अरुलाई पनि रक्षा तथा उद्धार गर्ने इच्छा भएको व्यक्तिले परम गुह्य यो परात्मपरिवर्तन ध्यान भावना गर्नु नितान्त योग्य छ ।

यो परात्मपरिवर्तनको रहस्य धेरै साधकहरुले अपनाउँदै आएको कुरा साधनमालामा मात्र होइन, वज्रयानको सम्पूर्ण ग्रन्थमा वर्णन गरिराखेको पाइन्छ । जस्तै -

"लोकेश्वरमात्मानं भावयेत् श्री अवलोकितेश्वरलाई आफू नै सम्झनुस् भन्ने भावना पनि परात्मपरिवर्तन भावना नै हो । त्यस्तै शून्यता ज्ञान वज्र स्वभावात्मकोऽहं अर्थात् शून्यतारुपी ज्ञानवज्रको स्वभाव नै म हुं भन्ने सम्झनु पनि परात्मपरिवर्तन ध्यान भावनाको एकरुप हो । यही परात्मपरिवर्तन ध्यान भावना परम गुह्य भावना हो । यो भावनाको अभ्यासमा श्रद्धा राख्नुपर्छ भन्ने कुरामा धेरै साधकहरुको मतैक्यता पाइन्छ ।

यसरी सम्पूर्ण प्राणी नै म हुँ भनी प्राणी मात्रको दुःख कष्ट पीडामा द्रवीभूत भई करुणा राखी प्राणी मात्रको उद्धारमा सदा लागिरहने विभिन्न अवलोकितेश्वरहरुको महान आदर्शलाई बुझेर हामीले पनि तदनुरुप आचरण गर्न श्री अवलोकितेश्वरको आदर्शमा श्रद्धा राख्नु नितान्त आवश्यक छ । श्री अवलोकितेश्वरको यही परात्मपरिवर्तनको आदर्शमा लोक कल्याण आधारित छ ।

*अस्तु !*



# पासा मुनां यायेमा:गु ज्या

भीगु नेपालय् गुयलेंनिसें बुद्ध धर्म दुहां वल धैगु खं प्रश्न याये वह: मजू । श्री भगवान् बुद्ध जि नेपाली धका: धया विज्याला ? बिमज्याला ? व खं ला द हे दु । तर भीसं श्री भगवान् बुद्धयात नेपाली मधासें च्वने मफु । अथे जूगुलिं भगवान् बुद्धयागु समर्थनिसें हे भीथाय् बुद्ध धर्म दु धका: जिं भापा च्वना । वसपोल मनुष्यतयगु मनोवृत्ति स्वया श्रावक बोधि, प्रत्येक बोधि, बुद्ध बोधियागु उपदेश बिया बिज्यागु खं सुनानं मस्यू मजू । थ्व स्वंगू बोधिमध्ये भीथाय् गुगु बोधियात स्वीकार याना च्वंगु दु धैगु खं सिइके वह:जू । गुभाजु, शाक्य, उदास आदि आपालं वर्गतय्सं गुरुजुपिनिपाखें पूजाकर्म याना वया च्वंगु सर्वविदित हे दु । उकिसनं गुरुजुपिसं न्ह्यागु पूजा यासां दकले न्हापां गुरुमण्डल पूजा यायेगु नियम दुगु खं नं सकसिनं स्यूगु हे खं ख: । व गुरुमण्डल पूजाय् "बुद्धोभवेयम् जगतो हिताय" - जगत हित याये निम्ति जि बुद्ध जुइ फयेमा धैगु प्रार्थना अर्थात् प्रणिधि बोधिचित्त ग्रहण याना त:गु स्पष्ट खने दुगु जूगुलिं भीपिं बुद्ध बोधिया निम्ति हे प्रणिधान याना च्वनापिं धका: भापिमा: ।

जगत हित याये फयेमा धैगु नित्य प्रणिधान जक यासां आपालं पुण्य दु धैगु बुद्ध वचन नं मदुगु मखु । जगत हित याये फयेमा धैगु भावना हे मदुसा व व्यक्तिं शील पालन याये फइ धैगु सम्भव मदु । जित: दु:ख मय:, अथे हे मेपिन्त नं दु:ख यइ मखु । जित: सुख य:, मेपिन्त नं सुख यइ जुइ धका: हे भीसं शील आदि पालन याइगु ख: । अथे जूगुलिं जिं जगत हित याये फयेमा धैगु भीगु बुद्ध बोधिया मुल्यगु जग ख: धैगु स्यूसा थ:गु परिवारयात निं न्हापां हित सुख बिइगु भावना दयेमा । अनंलि थ:गु समाजयात हित, सुख बिइ फयेमा धैगु भावना दयेमा । अले थ:गु देशयात हित, सुख बिइ फयेमा धैगु भावना दयेमा । थथे हित, सुख याये फयेमा जक धायेवलय् स्वार्थ तया नं धायेफु । बोधिचित्तयात हथियार दयेका थ:गु स्वार्थ नं सिद्ध यायेफु, अथे मजुइमा ।

च्वय् कना थें ज्या जूसा भीगु बुद्ध धर्म लुधने वह:जू । लोभी गुरु पापी चेला, दोनों नरकमें थेलम् थेला धया थें जूसा लुधने वह:मजू ।

भीगु बौद्ध समाजया आदर्श हे नि:स्वार्थ भाव जनहित यायेगु ख: । आदर्श बौद्ध समाजया लक्षण न थ्व हे ख: । मे मेपिं धर्मावलम्वीलय् हप्ताय् छक: थ:थ:गु मन्दिरय् वना प्रार्थना यायेगु चलन दु । भीन न्हापा न्हापा अष्टमी व्रत, पूर्णिमा व्रत दना: सामूहिक पूजा याना मव:गु मखु । व सामुहिक पूजाय् ज्ञान वृद्धि जुइगु कम

जुया कर्मकाण्डयागु मात्रा जक वृद्धि जूगुलिं थःगु बुद्ध बोधिया भाव हे मयुया धर्म ज्यज्यं वंगु खनेदु ।

मनू पुलां जुलकि बुढा जुया वनीथें तुं धर्म पुलां जुइवलय् नं शीलाचरण छ्वासुया वनीगु स्वाभाविक हे खः । प्रबुद्ध वर्गपिसं थुजोगु विषयलय् चिन्ता कायेगु ल्वःगु हे खं खः ।

थौंया युवा बौद्ध कार्यकर्तापिसं हप्ताय् छकः बुद्ध बोधिसत्वपिनि न्ह्यने मुनाः "बुद्धोभवेयम् जगतो हिताय" धैगु बोधि प्रणिधि चित्त जक उत्पन्न यायेगु वातावरण तयार याये फःसां बुद्ध धर्मया प्रभावं परिवार परिवारय्, समाज समाजय्, देश देशय् शान्ति मजुइ धकाः धाये फइमखु । अथे जूगुलिं युवा बौद्ध कार्यकर्तापिसं साप्ताहिक प्रार्थना कार्यक्रम निं दकलय् न्हापां याये माःगु जिं भापा ।

*अस्तु !*



# छुं योजना दयेक्येबलय् विचाः याये माःगु खँ

छुं योजना दयेक्ये न्ह्यः शान्तिदेवयागु थ्व उक्ति लुमंकेगु अति आवश्यक खनेदु ।

*अनारम्भो वरं नाम न त्वारम्भ निवर्तनम्*
*पूर्वं निरुप्य सामग्रीमारभेन्नारभेत वा ॥*
*जन्मान्तरेऽपि सोऽभ्यास पापाद्दुःखं च वर्धते ।*
*अन्यच्च कार्यकालं च हीनं तच्च नसाधितम् ॥*

अर्थात् ज्या याये न्ह्यः थ्व ज्या यायेत फुक्क साधन दु ला मदुला धकाः न्हापा विचाः याना ज्या शुरु यायेगु अथवा शुरु मयायेगु निर्णय यायेमाः । थथे विचाः मयासे ज्या शुरु यानाः ज्या दिइगु सिबय् ज्या शुरु मयायेगु हे असल जू ।

ज्या शुरु यानाः ज्या दिइगुया न्यागु दोष दु । ज्या शुरु यानाः ज्या दिइगु वानी प्रतिज्ञा भंग जुइगुलिं पाप लायेफु । थ्व छगू फताहा खँ ल्हायेगु पाप थें खः । थ्व न्हापांगु दोष खः । थ्व वानी जन्मान्तरेनं (मेगु जन्मय् नं) सरे जुया वनेफु । थ्व निगूगु दोष खः । फताहा खँ ल्हायेगु पाप थें ज्या सिद्ध मजुइकं शुरु यानागु ज्या दिइगु नं पाप जूगुलिं थुकिं दुःख बृद्धि जुइफु । थ्व स्वंगूगु दोष खः । ज्या शुरु याना दिनागुलिं शुरु यासेंनिसें दिनाबलय् तक्कयागु समय नं बर्बाद जुल । थ्व प्यंगुगू दोष खः । शुरु यानागु ज्या त्वतेबलय् व ज्या ला सिद्ध मजूगु हे जुल । थ्व न्यागूगु दोष खः ।

अथे जूगुलिं योजना दयेक्येबलय् याये फइगु, सिद्ध जुइगु ज्या जक यायेमाः । ज्या शुरु यानाः ज्या दिइगु, प्रतिज्ञा भंग यायेगु अर्थात् मखुगु खँ ल्हायेगु सरह पाप खः धैगु धार्मिक संगठनतय्सं थुइके माःगु थें च्वना जिं थ्व नम्र निवेदन याना च्वना ।

ह्यर्थमूलाः सर्वारम्भा अर्थात् न्ह्यागु ज्या शुरु यासां लिमलाफमला ध्यबा निंनायः थें न्ह्यने च्वं वइ । विना ध्यबां छुं योजना नं सम्पन्न जुइ मखु । अथे जूगुलिं ध्यबा दःसा याये माःगु दीर्घकालीन योजना क्वय् प्रस्तुत याना च्वना -

१) कमसेकम थगु देशय् वा विदेशय् प्रकाशित जूगु सफुत संग्रह यायेमाः ।
अर्थात् पुस्तकालय छगू दयेमाः ।

२) आ: नं नेपालय् राष्ट्रिय पुस्तकालय् बौद्ध धर्मसम्बन्धी सफुत आपाल दान । व नं फोटोकपी याना संग्रह याये बहःजू ।

३) थ्व सफुत अध्ययन याये मफयेकं झीगु देशय् चलय् जुया च्वंगु बौद्ध धर्म छु ? उकि छु छु संस्कृति सुला च्वंगु दु धैगु खं सिइके फइमखु । अथे जूगुलिं संस्कृत अध्ययन याकेगु पाठशाला छगू दयेहेमा: ।

४) संस्कृत जक व्वना: वा धर्म, संस्कृति, कलायागु अध्ययन जक याना जीवनवृत्ति चलय् जुइगु खनेमदु । अथे जूगुलिं अध्ययन याइपिं व्यक्तितय्‌त नयेगु, त्वनेगु नि:शुल्क सुविधा दुगु छात्रावास दयेहेमा: ।

५) नेपालय् चलय् जूगु अनुसारं शिक्षकतय्‌त सन्तोषजनक वेतन बिइहेमा: ।

६) झीगु ग्रन्थत आपालं प्राचीन लिपिइ च्वयात:गु जूगुलिं विद्यार्थीतय्‌त शुरुनिसें लिपि ज्ञान, सदाचार, शील आदि पालन याकेगु नं परं आवश्यक जू ।

७) थुगुकथं शिक्षा बिइबलय् संस्कृतया नापं विभिन्न दर्शनया साधारण ज्ञान नं बिइहेमा: । संस्कृत ज्ञान बिइबलय् बौद्ध जातक, अवदान आदि हे बिइगु उचित जुइ ।

८) थुगुकथं प्यन्ह, न्यान्ह अध्ययन याये धुंकुपिन्त पूर्ण वेतन बिया: धर्म, संस्कृति, कलायागु बुलुहुं बुलुहुं अनुसन्धान यायेगुलि लगय्‌यायेमा: ।

९) संस्कृति अध्ययन यायेत पला:पतिकं इतिहासयागु नं आवश्यक जुइगुलिं नेपा:यागु प्राचीन तथा आधुनिक इतिहास नं अनुसन्धान याइपिन्त ज्ञान बिइमा: ।

१०) कलायागु अनुसन्धान यायेत साल मिति दुगु मूर्तितय्‌गु तथा पौभा:तय्‌गु अथे हे सफूति च्वयात:गु चित्रतय्‌गु फोटो संग्रह यायेगु अति आवश्यक दु । गुगु सम्वतय् गुलि अन्तर जुल धैगु ज्ञान थुकी हे दैगु ख: ।

११) च्वय् संग्रह यानागु बौद्ध सफुत प्रकाश यायेत निजी प्रेस नं अत्यावश्यक खनेदु ।

१२) उपर्युक्त फुक्क खंया आधारशिला थाय् जूगुलिं अनुकुलगु थाय् नं अर्थात् जग्गा नं आवश्यक दु ।

१३) च्वय्‌यागु योजना केवल खर्च यायेगु जक मखु, अप्रकाशित सफुत अंग्रेजी भाषां प्रकाश याना विश्वय् नं लाखौं प्रति बिक्री याना लाभ नं यायेज्यू ।

## तत्कालीन योजना

स्युस:पिं मनूतयत पूर्ण वृत्ति विया: संस्कृति तथा धर्म व कलायागु अनुसन्धान शुरु यायेमा: ।

दीर्घकालीन योजनाय् कनाथें चित्र आदि संग्रह यायेमा: तथा पुस्तक आदि संग्रह यायेमा: । थुकिया आधारय् अनुसन्धान यायेगु यायेमा: ।

अप्रकाशित सफुत विस्तृत अंग्रेजी भूमिका तयार याना प्रकाश या:सा आर्थिक लाभ जुइगुलिं तत्कालीक योजनाय् उपयोगी जू ।

कलायागु आधारय् मूर्ति थ:तय्‌गु जक मयासे तिसा:, वेशभूषा, मुद्रा आदियागु नं ध्यान त:सा बांलाई ।

फ:सा भीथाय् चलय् जूगु प्याखं, गाना बजाना, चचा आदियागु टेप, भिडियो आदि नं संग्रह या:सा आर्थिक लाभ जुइफु । सायय् उपर्युक्त चित्रत प्रदर्शन याना आर्थिक लाभ नं यायेजियेंच्वं । थुलि जिं स्युथें थुथें योजना प्रस्तुत यानागु जुल ।



# धर्मालोक (श्रद्धारूपी धर्मया प्रकाश) मुखपरिवर्तः

छन्हुया दिनय् श्री भगवान् बुद्ध अनाथपिण्डं दयेका व्यूगु जेतवन महाविहारय् बिज्याना भिक्षुपिन्त सम्बोधन याना थथे आज्ञा जुल - हे भिक्षुगणपिं ! श्वेतकेतु बोधिसत्वं थः बुद्ध जुइगु ई (काल), जन्म जुइगु द्वीप तथा देश व कुल नं विचाः याना बिज्यायेधुंका तुषित भुवनय् च्वंगु उच्चध्वज धैगु विमानय् च्वना आपालं देवतापिन्त धर्मदेशना याना च्वना बिज्यागु जुल । उगु बखतय् श्वेतकेतु बोधिसत्वं देवतापिन्त थथे आज्ञा जुया बिज्यात - छलपोलपिसं च्युति (मरण) जुइबलय् गथे जुया बइं धैगु खं सिइका बिज्यायेगु योग्य जू । छलपोलपिनि मनय् "जिमिसं थ्व तुषित भुवनय् च्वना आपालं कल्प सुख भोग याना वया च्वना, लिपा नं कल्पं कल्प सुख भोग याये मानि" धकाः हर्ष याना च्वन जुइमा, थ्व खं सत्य मखु । तुषित भुवनय् च्वंपिं सकल देवपुत्रपिं छन्हु अवश्य च्युति जुइ मानि । थुलि श्री श्वेतकेतु बोधिसत्वं उजं जुइ मात्र नं सकल देवतापिनि मनय् भय उत्पन्न जुया वल । रोगी, बुढा जुइ म्वापिं देवपुत्रपिनि नं न्हकुमं तितिं स्वानावल । थःगु वां बांलागु विमान तथा फ:फ:धागु सिंहासनत नं श्मशान थें भिंजामिंजा दना वल । थुगुकथं श्री श्वेतकेतु बोधिसत्वं च्युत्याकार प्रयोग नामगु धर्मानुस्मृति चर्या कना बिज्याये धुंका देवपुत्रपिन्त थथे उजं दयेका बिज्यात - "न्हापा न्हापायापिं दीपंकर आदि बुद्धपिसं नं थः च्युति जुया बिज्यायेत अष्टोत्तरशत धर्मालोकमुख अवश्य नं कना बिज्याना वःगु जुल । व हे चर्याअनुसार जिं नं थः च्युति जुयाः कपिलवस्तुइ शुद्धोदन महाराजया कुलय् मायादेवीया कोखय् उत्पत्ति जुइ न्ह्यः पूर्व बुद्धपिसं उजं जू थें धर्मालोकमुख कने त्यना, एकचित्त याना न्यने यहः जू ।

हे देवपुत्रपिं न्ह्यागु ज्या यायेत नं श्रद्धारुपी धर्मयागु आलोक (प्रकाश) मनय् लुयेमा, व आलोकं हे थःगु आसय, उद्देश्य स्थिर जुइ । उद्देश्य मदुम्ह तथा उद्देश्य स्थिर मजुम्ह व्यक्तिं याःगु छुं ज्या नं सफल जुइ मखु । अथे जूगुलिं श्रद्धायात प्रमुखगु धर्मालोक धकाः धाई । (१)

न्ह्यागु ज्या वा धर्म यायेत नं मन प्रसन्न याना ख्वाः चक्कंका यायेमा । अथे यामा हे न्ह्यागु ज्या नं न्ह्यइपुसे च्वंक सिद्ध जुइ । अथे जूगुलिं प्रसाद (मनयागु प्रसन्नता नं) छगू आलोक (प्रकाश) खः । थ्व प्रसाद आलोकं मनयागु म्हाइपु स्वभावगु मल लना बनी ।

मन सदां नं हर्षित याना न्ह्यु: ख्वा: याना च्वनेगु नं मनुष्य जीवन सफल यायेगु उपाय ख: । न्ह्यु: ख्वा: याना च्वम्ह व्यक्ति हे लोकय् प्रसिद्ध जुइ । अथे जूगुलिं प्रामोद्य (हर्षित जुइगु) नं छगू मुख्यगु धर्मालोक धर्मयागु प्रकाश ख: ।(२)

संतोषं परमं सुखं धैगु उखान साधारणगु मखु । थ:के दुगु धन, विद्या, गुणय् सन्तुष्ट जुया च्वनागुलिं चित्त शुद्ध जुया वइ । न्ह्यागु खाय् नं संतुष्ट जुइगु, तृप्त जुइगुयात प्रीति धाई अथवा सुं व्यक्ति खना संतुष्ट जुइगुयात न प्रीति धाई । प्रीति नं छगू मुख्यगु धर्मालोक ख: ।(३)

हिंसा मयायेगु, खुया मकायेगु, व्यभिचार मयायेगु मुख्यगु काय संवर ख: । अले हानं स्मृति संप्रजन्ययुक्त जुया ल्हा: तुतियात होसय् तया जक प्रयोग यायेगु, संकेगु नं काय संवर हे ख: । काय संवर नं मुख्यगु धर्मालोक ख: । थ्व: आलोकं काय परिशुद्ध जुइ ।(४)

फटाहा खं मल्हायेगु, चुक्ली मयायेगु, कडा वचनं व्यमविइगु, ज्याख्यलें मदुगु खं मल्हायेगु थ्व: प्यंगू मुख्यगु वाक् संवर धाई । स्मृति संप्रजन्य तथा उचितगु खं ल्हायेगु नं वाक संवर हे ख: ।(५)

अभिध्या (अन्यायपूर्वक कत:यागु वस्तु वा धनय् लोभ) मयायेगु, व्यापाद (कर्कित स्याये, पालेगु इच्छा) मयायेगु तथा मिथ्यादृष्टि (पुण्य, अपुण्य कर्मया फल मदु, स्वर्ग नरक मदु) धका: मभापेगु थ्व: स्वंगू नं मन संवर धाई । थ्व: नं मुख्यगु धर्मालोक ख: । थ्व: आलोकं मन शुद्ध जुइ ।(६)

बुद्ध तथा वसपोलयागु चर्यायात स्मरण यायेगुयात बुद्धानुस्मृति धाई । बुद्धानुस्मृति नं मुख्यगु धर्मालोक ख: । थ्व: धर्मालोक प्रकाशं भीत ख:सा हे बुद्ध कना: विज्यागु दर्शन विशुद्ध जुइ ।(७)

बुद्ध कना: विज्यागु आपालं उपदेश लुमंकेगुयात धर्मानुस्मृति धाई । थ्व: धर्मालोकं मन चक्कंसा हे वसपोलं कना: विज्यागु धर्म विशुद्ध रुपं थुइका काये फइ । अथे जूगुलिं धर्मानुस्मृति नं मुख्यगु धर्मालोक ख: ।(८)

श्रावक संघ तथा अवैवर्तिक बोधिसत्व संघ अनुस्मरण यानागुलिं अन्याय यायेगु चित्त मदया न्यायपरायण जुइ । अथे जूगुलिं संघानुस्मृति नं मुख्यगु धर्मालोक ख: ।(९)

त्यागया महत्व वर्णन यानां साध्य मजू । सम्पूर्ण वस्तुयात त्याग यायेगु हे निर्वाण खः । अथे जूगुलिं त्याग नं छगू प्रकारयागु मुख्यगु धर्मालोक खः । थ्वः आलोकं हे निर्वाण लाभ जुइगु खः । ।१०।

शीलयागु गुण स्मरण यायेगुयात शीलानुस्मृति धाई । शीलानुस्मृति भावना यानागुलिं थःगु प्रणिधान नं पूर्ण जुया वई । अथे जूगुलिं शीलानुस्मृति नं छगू मुख्यगु धर्मालोक खः । ।११।

देवतानुस्मृति भावना यानागुलिं चित्त उदार जुया वई । नुगः कयेकुनी मखु, उदार भाव वृद्धि जुई । अथे जूगुलिं देवतानुस्मृति नं छगू मुख्यगु धर्मालोक खः । ।१२। थुगुकथं श्री श्वेतकेतु बोधिसत्वं, मायादेवीया कोखय् उत्पत्ति जूवने न्ह्यः तुषित भुवनय् देवपुत्रपिन्त सच्छि व च्यागू धर्मालोकमुख वर्णन याना बिज्यात धकाः श्री भगवान् बुद्धं भिक्षुपिन्त आज्ञा जुया बिज्यात ।

(थ्वः चिचा हाकःगु लेखस सच्छि व च्यागू धर्मालोक च्वये मफूगुलिं क्षमा फ्वना च्वना, तर भीसं व्यवहारय् मयास्ये मगागु धर्मालोक धाःसा उपर्युक्त अनुसार अवश्य नं याये वह जूगु जिं अनुभव याना ।)



# प्रार्थना भजन

बुद्धया धर्मरथ, वुलुं वुलुं न्ह्यानावल ।
घः चुकु नकेमते, नकेमते नकेमते न्हां ॥ घु ॥

थ्वहे बुद्ध धर्मयागु, थ्वहे बुद्ध संघयागु ।
भावभक्ति शरण नं, त्वते मते त्वते मते न्हां ॥ (बुद्धया ...)

छु श्रावकयान, छु महायान, छु वज्रयान ।
न्ह्यागु जूसां त्वते मते, त्वते मते त्वते मते न्हां ॥ (बुद्धया ...)

स्याये पाले धाये मते, धेधे चुयेका जुयेमते ।
मय मय सात्तु साला, सुइतं गनं यंके मते न्हां ॥ (बुद्धया ...)

खुया हेका काये मते, जाल झेल याये मते ।
मखुगु खं ल्हाये मते, छाक्क खा नं ल्हाये मते न्हां ॥ (बुद्धया ...)

गुरु, जुजु, मां, अबु, हनेमाः थाये हेला याये मते ।
सरासर याये मते दुनेनिसें, याये मते न्हां ॥ (बुद्धया ...)

काय् कलाः मचा खाचा, त्वतातीता वने मते ।
दान धर्म त्वते मते, थःथिति त्वते मते न्हां ॥ (बुद्धया ...)

ज्ञान गुण त्वते मते, रितिथिति त्वते मते ।
थःगु देश, थःगु भाषा, नखःचखः त्वते मते न्हां ॥ (बुद्धया ...)

# सप्तविधानुत्तर मानसिक पूजा

## वन्दना

भिंगु दिशासं आपालं लोके, स्वंगुकालसं नरसिंह थें ।
जुया विज्यापिं गुरु बुद्धपिन्त, प्रसन्न मनं जिगु वन्दना ॥
वुइं गुलिखे धूग्व दै जुइ, उलि हे हिसापं गुरु बुद्धपिन्त ।
ह्वाल स्वया प्रणिधान याना, कायं मनं जिं प्रणाम याना ॥
धूग्व दथुइ आपलं बुद्ध, अथे हे आपालं धर्म व संघ ।
निश्चय नं दु धैगु भापा, लोक हे बुद्धं जागु ताया ॥

## पूजना

गवलें मफुइगु आखःया सागरं, गवलें मसुइगु सःया सागरं ।
भावं बुद्धया गुणसार कना, हुनुनु बुद्धया स्तोत्र ब्वना ॥
वां वां लागु स्वां व स्वांमा, बुद्धं बुद्धं सःवगु वाजं ।
अत्तर छत्तर धूप व दीपं, भक्तिं बुद्धया पूजन याना ॥
वां वां लागु सुगन्धी वस्त्र, न नस्वागु सुगन्ध इला ।
जियां जिक्व तः तः जिगु, वस्तुं बुद्ध पूजन याना ॥
गुलिखे अनुत्तर पूजा दु जुइ, बुद्धं न्हापा याना वन जुइ ।
व हे ज्वगु पूजा भापा, जि नं वन्दन पूजन याना ॥

## पापदेशना

काय तथा वचन, मन व, राग व द्वेष मोह वसं नं ।
गुलिखे पाप जिं याना धैगु लुमना ग्याना शरण वया ।
हानं मयायेगु प्रतिज्ञा याना, बुद्धया न्ह्यःने विन्ति याना ॥

## अनुमोदन

शैक्ष अशैक्ष प्रत्येक बुद्ध, बुद्ध पुत्र व बुद्धपिसं नं ।
भिंगु दिशासं गुलि जुल पुण्य धन्य धका जि हर्ष जुया ।

## अध्येषणा

भिंगु दिशासं ज्ञानया मत थें जागु बोधि लाभ याना ।
च्वपिं फुक्क बुद्धपिसं धर्मया चक्र हिके माल ॥

## याचना

जनहित याना निर्वाण जुइपिं बुद्धपिंके जिं फ्वना च्वना ।
क्षेत्र रजोपम कल्प कल्प, थन हे स्थिरं विज्याये माल ॥

## पुण्य परिणामना

वन्दन, पूजन, देशन याना, अनुमोदनाध्येषण याचना याना ।
गुलि जिगु पुण्य मुना च्वन, पुण्यं हे लोकया हित यायं फयेमा ॥

## षट्पारमिता बोधिचित्त भावना

जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मतसे करुणा तया । (धु)
नये धापिन्त नयेगु बिया, पुने धापिन्त पुनेगु बिया ।
मा: मा: पिन्त मा:गु बिया बोधिचित्त स्थिर याना ॥

जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मनसे करुणा तया (धु)
जगतया य:गु शील कया, लोके य:गु मार्ग ज्वना ।
ल्व ल्वकथं शील बिया बोधिचित्त स्थिर याना ॥

जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मतसे करुणा तया (धु)
व्वव्यूवइपिं दाहे वइपिं प्राणीया नं जय हे याना ।
न्ह्यागु हे जूसां सह हे याना बोधिचित्त स्थिर याना ॥

जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मतसे करुणा तया (धु)
नुगस्ये नायाहं, क्वें नं चनाहं, अयूसां जनहित याना त्वते ।
धैगु वीर्य क्वात्तुक ज्वना बोधिचित्त स्थिर याना ॥

जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मतसे करुणा तया (धु)
जि नं सुख य: वया नं सुख: य:, जि व, व व: समहे मखुला ?।
धैगु समता ध्यान याना बोधिचित्त स्थिर याना ॥

जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मतसे करुणा तया (धु)
माया ममता म्हंगु हे मखुला, खंगु ख:सां सच्चा मखु ।
धैगु प्रज्ञा पूर्ण याना बोधिचित्त स्थिर याना ॥
जगतया दु:ख फुके मानि, यक्व स्वार्थ मतसे करुणा तया (धु)



# स्मृतिसंप्रजन्य

श्री भगवान वुद्धले महासतिपट्ठान सुत्तमा भिक्षुहरुलाई सम्बोधन गर्दै भन्नुभयो - "एकायनो अयं भिक्खवे मग्गो सत्तानं विसुद्धियो सोकपरिदेवानं समतिकमाय दुक्खदोमनस्सानं अत्थङ्गमाय ञायस्स अधिगमाय निब्बानस्स सच्छिकिरियाय, यदिदं चत्तारो सतिपट्ठाना" ।

प्राणीहरुको शुद्धिको लागि तथा मनको शोक, दुःख, दौर्मनस्य हटाउनको लागि मार्गफल प्राप्त गर्न र निर्वाण साक्षात्कार गर्न यी चार स्मृति उपस्थानहरु नै एकमात्र उपाय हो ।

यो उपदेशवाट कायानुपश्यना, वेदनानुपश्यना, चित्तानुपश्यना, धर्मानुपश्यना यी चार उपाय नै मानसिक शान्ति तथा निर्वाणको मार्ग हो भन्ने स्पष्ट हुन्छ ।

उपर्युक्त सूत्रमा उल्लेख भएको कायानुपश्यना अन्तर्गत आनापानानुस्मृति भावना गर्नेहरुको निमित्त श्री भगवानले भिक्षुहरूलाई सम्बोधन गर्दै मध्यमनिकायमा भन्नुभयो - "नाहं भिक्खवे, मुट्ठसतिस्स असम्पजानस्स आनापानस्सति भावनं वदामि" (३-१४७मा) अर्थात् हे भिक्षुहरु हो ! स्मृति र संप्रजन्य नभएकाहरुलाई आनापानानुस्मृति भावना गर्नु ठीक छ भन्दिन ।

अतः कायानुस्मृति आदि भावना गर्नेहरुले स्मृति र संप्रजन्यलाई ठीकसंग अभ्यास गर्नुपर्छ भन्ने कुरा सिद्ध हुन्छ । अब तल स्मृति र संप्रजन्यको विषयमा वोधिचर्यावतारका केही उपदेशहरु वर्णन गरिन्छ -

*शिक्षां रक्षतुकामेन चित्तं रक्ष्यं प्रयत्नतः*
*न शिक्षा रक्षतुं शक्या चलं चित्तमरक्षता ।१।*

(संप्रजन्यरक्षणः नाम पञ्चम परिच्छेद)

श्री भगवान वुद्धको उपदेश पालन गर्छु भन्ने व्यक्तिले चञ्चल चित्तलाई स्थिर नगरिकन वुद्धको उपदेश पालन गर्न सक्दैन । अतः सर्वप्रथम प्रयत्नपूर्वक चित्तलाई नै रक्षा गर्नुपर्छ । यही कुरा धम्मपदमा पनि उल्लेख भएको पाइन्छ ।

*चित्तस्य दमनं साधु चित्तं दान्तं सुखावहम् ।*

अर्थात् चित्तलाई अनियन्त्रित रुपमा राख्नुभन्दा त्यसलाई दमन गर्नु असल हो । दमन गरी राखेको चित्तले नै सुख दिने हुन्छ ।

*यद्धश्चेच्चित्तमातङ्ग: स्मृतिरज्ज्वा समन्तत: ।*
*भयमस्तंगतं सर्वं कृत्स्नं कल्याणमागतम् ।*

चित्तरुपी मत्त हात्तीलाई स्मृतिरुपी डोरीले चारैतिर बाँधेर मर्के उसको मारा भय मुक्त भयो तथा सम्पूर्ण कल्याणकारी वस्तु लाभ भयो भने पनि हुन्छ ।

(बो. ५ श्लोक ३)

*चित्तं रक्षितुकामानां मयैष क्रियते ऽञ्जलि: ।*
*स्मृतिं च संप्रजन्यं च सर्वयत्नेन रक्षत । (बो. ५ श्लो.२३)*

शान्तिदेव आचार्य फेरि भन्नु हुन्छ - "चित्तलाई रक्षा गर्न चाहनेले स्मृति र संप्रजन्यलाई हरतरहले रक्षा गर्नुपर्छ भन्ने यो मेरो नम्र निवेदन छ" ।

यहाँ स्मृति शब्दको अर्थ सम्झनु हो । कामराग सम्बन्धी सम्झनु पनि स्मृति नै हो । व्यापाद (अर्कालाई विगार्ने विचार) लाई सम्झनु पनि स्मृति हो, तर यहाँ यस्तो स्मृति भनेको होइन । "भगवता विहितप्रतिषिद्ध योर्यथायोगं स्मरणं स्मृति:" भनेको हो, अर्थात् भगवान बुद्धले यो गर्नु कुशल हो भनेको हामीले गर्नु पर्छ, यो नगर्नु यो अकुशल हो भनेको कुरो गर्नु हुन्न भनी सम्झनु नै सम्यक स्मृति हो यही स्मृतिलाई हामीले उपस्थित गरिराख्नु पर्छ ।

*एतदेव समासेन संप्रजन्यस्य लक्षणम् ।*
*यत्कायचित्तावस्थाया: प्रत्यवेक्षा मुहुर्मुहु : ॥*

(बो. ५ श्लो.१०८)

शरीर र चित्तको अवस्था कस्तो भइरहेको छ भनी बारम्बार निरीक्षण गर्नु नै छोटकरीमा भनूँ भने संप्रजन्यको लक्षण हो । यसरी सुतेको भए म सुतेको छु, बसेको भए म बसेको छु, हिंडेको भए म हिंडेको छु, उठेको छु भनी शरीरको अवस्थालाई बारम्बार निरीक्षण गर्नु र मेरो मनमा अहिले लोभ उठेको छ, रिस उठेको छ तथा अभिमान उठेको छ आदि कुन कुन भावहरु चित्तमा उठेका छन्, त्यो, त्यो भावलाई निरीक्षण गरिरहनु ध्यान भावना गर्ने व्यक्तिको निमित्त अति आवश्यक छ ।

*व्याध्याकुलो नरो यद्वन्न क्षम: सर्वकर्मसु ।*
*तथाभ्यां विकलं चित्तं न क्षम सर्वकर्मसु ॥*

जसरी रोगीले आफ्नू काम गर्न समर्थ नहुने हुन्छ, त्यस्तै स्मृति र सप्रजन्य नहुने व्यक्तिले कुनै काम गर्न समर्थ हुँदैन ।

(बो. ५ श्लो २४)

स्मृति भए पनि संप्रजन्य नभएमा श्रुतमयी प्रज्ञा, चिन्तामयी प्रज्ञा, भावनामयी प्रज्ञाद्वारा लाभ भएको वस्तु पनि प्वाल परेको घडामा पानी जस्तै चुहेर जाने हुन्छ ।

(बो. ५ श्लो. २५)

*असंप्रजन्यचौरेण स्मृतिमोपानुसारिणा ।*
*उपचित्यापि पुण्याणि मुपिता यान्ति दुर्गतिम् ।*

(बो. ५ श्लो. २७)

श्री भगवान बुद्धको उपदेश बिर्सेको मौका छोपी असंप्रजन्यरुपी चोरले हामीले जम्मा गरेको पुण्यलाई चोरी दुर्गति (व्यर्थ) पारी दिने हुन्छ । अत: ध्यानीको लागि स्मृति पनि कम महत्वको छैन ।

यसरी स्मृति नहुँदा संप्रजन्य नहुने, संप्रजन्य नहुँदा स्मृति दुर्बल हुने हुन्छ । अत: यी दुवै कुरा प्रयत्नपूर्वक लाभ गर्नुपर्दछ । समथा ध्यान आदिको महिमा बुझेर उत्साहपूर्वक प्रयत्न गर्दा धर्ममा तीव्र आदर उत्पन्न हुन्छ । तीव्र आदर भएमा नै भगवान बुद्धको उपदेश स्मृति सम्झने हुन्छ अथवा आफूलाई उपदेश दिने आचार्य र उपाध्यायको उपदेशलाई कदर गर्दा पनि स्मृति बढ्ने हुन्छ तथा मान्यजनको सहवासले पनि सम्झना शक्ति बढ्ने हुन्छ । बुद्ध, बोधिसत्वहरु त्रिकालदर्शी हुनुहुन्छ । उहाँहरुले नदेख्ने ठाउँ कही पनि हुँदैन । अत: म उहाँहरुको सामु बसेको छु, अकुशल कर्म गर्नु हुँदैन, उहाँहरुको उपदेशलाई आदर गर्नुपर्छ तथा भगवान बुद्धको उपदेश अतिक्रमण होला भन्ने भय मान्नुपर्छ भनी भावना गरेमा पनि स्मरण शक्ति बढ्नुका साथै बुद्धानुस्मृति भावना पनि स्थिर हुँदै जाने हुन्छ ।

अत: स्मृति संप्रजन्य मजबुत गर्न व्यर्थको काम गर्नु हुँदैन भनेर शरीरलाई निश्चल बनाई हातगोडा नै नभएको जस्तो भएर काठको मुढाजस्तो भई बस्नुपर्छ अर्थात् उपेक्षा भावले बस्नुपर्छ । बेकाममा हातगोडा आँखा नचलाई आँखाले नाकको टुप्पामा मात्र हेरी बस्ने अभ्यास गर्नुपर्छ । कुनैबेला यताउता हेर्नै परे पनि सचेत भई हेर्नुपर्छ । कोही आयो भने आएको व्यक्तिलाई स्वागतको निमित्त हेर्नुपर्छ । बाटोमा हिंड्दा पनि कतैबाट केही आपत्ति आइपर्छ कि भन्ने विचारले यताउता फर्केर हेर्नुपर्छ । यसरी हेर्दा र हिंड्दा पनि मेरो शरीरको अवस्था यस्तो छ, मेरो मनको अवस्था यस्तो छ भन्ने संप्रजन्य ज्ञानलाई छोड्नु हुँदैन ।

*कुत्र मे वर्तत इति प्रत्यवेक्ष्यं तथा मन: ।*
*समाधानधुर नैव क्षणमप्युत्सृजेद्यथा ॥*

(बो. ५ श्लो. ४१)

ध्यान भावना गर्नेले पनि मेरो मन कुन अवस्थामा छ ? आफ्नू आलम्बन (विषय) मा नै छ कि अन्त गएको छ भनी प्रत्यवेक्षणा (निरीक्षण) गर्नुपर्छ । केही गरी आफूले ध्यान गरिरहेको आलम्बबाट मन अन्त गएको छ भने मोही ध्यानको आलम्बनमा मन लगाउनुपर्दछ । क्षणभर पनि आफ्नू आलम्बनलाई नछोडी ध्यान गर्नुपर्दछ । आफ्नै आलम्बनमा मन निरन्तर लागेको भए उपेक्षा गरी ध्यान लाभ गर्नुपर्छ । अतः स्मृति संप्रजन्यशील भन्नु र इन्द्रियसंवरशील भन्नु एउटै हो । यही कुरालाई चन्द्रप्रदीप सूत्रमा यसरी लेखिएको छ -

*क्षिप्रं समाधिं लभते निरङ्गण*
*विशुद्धशीलस्यामि आनुसंशाः ।*

विशुद्ध स्मृति संप्रजन्यशील हुने व्यक्तिले राग, द्वेष, मोहले रहित भएको समाधि चाँडै नै लाभ गर्ने हुन्छ । स्मृति संप्रजन्यको यही गुण हो । यसरी जान मन लाग्दा, बोल्न मन लाग्दा आफ्नू चित्तलाई प्रत्यवेक्षणा गरी धैर्यपूर्वक जाने र बोल्ने गर्नुपर्छ । राग, द्वेष, मोहको आवेशमा कुनै काम गर्नुहुँदैन । केही गरी राग, द्वेष, मोह मनमा उठ्यो भने मेरो मनमा राग, द्वेष, मोह उत्पन्न भयो, अब मैले कुनै काम गर्नु हुँदैन भनी काठ जस्तै निश्चल भई उपेक्षा गर्नुपर्छ । यस्तै गरी औद्वत्य ठट्टा, अभिमान, छलकपट, आफ्नू प्रशंसा अरुको निन्दा, आफ्नू लाभ सत्कार कीर्ति आदिको लोभ मनमा उठ्दा पनि निश्चल भई उपेक्षा गर्ने गर्नुपर्छ । धेरै कालसम्म यस्तो बानी बसालेमा स्मृति संप्रजन्य दृढ भई सम्पूर्ण कार्य सुसम्पन्न हुने हुन्छ ।



# पञ्चोपचार पूजा विधि

बुद्ध, वोधिसत्व, तारा, लोकेश्वर आदि देवी देवतापिन्त पञ्चोपचार पूजा यायेगु चलन भीथाय् परम्परांनिसें चले जुया वया च्वंगु खः । न्यागू उपचारद्वारा पूजा यायेगुयात पञ्चोपचार पूजा धाई । न्यागू उपचार धयागु रुप, शव्द, गन्ध, रस व स्पर्श खः । भीथाय् वहाः, वही पतिकं विभिन्न देवी देवतापिन्त न्हिथं नित्य पूजा कर्म याइवलय् नं थ्व हे पञ्चोपचार पूजा याइगु खः ।

रुप, शव्द, गन्ध, रस व स्पर्शयात "पञ्चकाम" धका नं धाई । पञ्चकाम सुख द्वहलप्येगु अर्थय् हे पञ्चोपचार पूजा खः । पञ्चकामया हे प्रतीक कथं विविध पूजा ज्वलं तई । थुकी रुपया प्रतीक कथं मत तई । मत च्याकलकि तिनि रुप खनी । उकिं देवा, इता, मत आदि रुपया प्रतीक खः । शव्दया प्रतीक कथं स्तोत्र व्वनेगु याई ।

अथे हे गन्धया प्रतीकया रुपय् विभिन्न सुवासं युक्तगु धूं, धुपाय्, सिन्हः (चन्दन) तःसा रसया लागि फलफूल, नैवद्य, मरिचरी आदि तयेगु चलन दु । वयें तुं स्पर्श धयागु म्हः थीगु, स्पर्श यायेगु खः । थुकीया प्रतीकया रुपय् स्नान याकेगु, धाःमण्डः थिकेगु, जजंकां क्वखायेकेगु याना वयाच्वन । थ्व वाहेक स्वाँ, ताय्, जाकि आदि मेमेगु नं अनेक ज्वलं तया पञ्चोपचार पूजा याई ।

थुगु पूजा विधिया वर्णन भीसं सु छम्ह पूज्यपात्रयात्र पूजा यायेगु भाःपिया च्वत धाःसा थ्वीके अपुइगु जूगुलिं आः जिं थन श्री करुणामय अमोघपाश लोकेश्वरयात पूजा यायेगु कथं थुगु पूजा विधि कथहनं च्वया यंके । न्हापां पूजा ज्वलंनिं मुंके अले पूजाभः तये ।

**पूजा ज्वलं**

१. स्वाँ
२. सिन्हः
३. जाकि
४. ताय्
५. इताः देवा, मैनवत्ती आदि ।
६. नीलः (कलश)
७. न्हायकं

८. जजका
९. धूं, धुपांय्, कपू
१०. नैवद्य, फलफूल, पञ्चामृत

## श्री आर्यावलोकितेश्वरयात पञ्चोपचार पूजा संकल्प याये

*अद्य श्रीमच्छ्री शाक्यसिंह तथागतस्य बुद्ध क्षेत्रे भद्रकल्पे जम्बुद्वीपे आर्यावर्ते पुण्य भूमि नेपाल देशे अमुक देवता (श्री अमोघपाश लोकेश्वर) सन्निधाने अद्य अमुक मासे अमुक तिथौ अमुक वारसरे श्री श्री आर्यावलोकितेश्वरस्य पञ्चोपचार पूजा निमित्यर्थं एतत्पुण्येन यजमानस्य आयु: आरोग्य लाभार्थं दुर्बुद्धि, दुर्व्यसन प्रमादालस्य निवारणार्थं सद्ज्ञानलाभार्थ सकल विघ्नोपद्रव शान्त्यर्थं सकल शुभकार्य सिद्धयर्थम् इद पुष्प धूप दीप गन्ध रस नैवद्यादिसहितं सुवर्ण पुष्पभाण्डं संकल्पयाम्यहं । ॐ नमो भगवते पुष्पकेतु राजाय तथागताय अर्हते सम्य सम्बुद्धाय तद्यथा ॐ पुष्पे पुष्पे महापुष्पे सुपुष्पे पुष्पोद्भवे पुष्पाव किरणे स्वाहा ।*

**भावार्थ :**

थौं श्रीमान् शाक्य सिंह तथागतया बुद्ध क्षेत्रे भद्रता जुयाच्वंगु कल्पे जम्बुद्वीपे आर्यावर्त नां जुयाच्वंगु पुण्यगु भूमि नेपाल देशे थुम्ह देवता (श्री अमोघपाश लोकेश्वर) या न्ह्योने थुगु महिनाय् थुगु तिथिइ, थुगु वारे श्री आर्यावलोकितेश्वरयात पञ्चोपचार पूजा यायेया निमित्ते, थ्व पुण्यं यजमानया आयु आरोग्य लाभ जुयेमा धका: तथा दुर्बुद्धि, दुर्व्यसन, प्रमाद मवयेमा धका:, सद्ज्ञान लाभ जुयेमा धका: फुक्क विघ्न उपद्रव शान्त यायेया निमित्ते सकल शुभकार्य सिद्ध जुयेमा धका: थ्व स्वां, धूप, सुगन्ध, चन्दन, मत, निवेदन याये योग्यगु वस्तु दुगु थुगु पूजाभ: जिं संकल्प याना च्वना । थ्व नापं पुष्पकेतु राजा नामं प्रसिद्धम्ह तथागत अर्हत् सम्यक् सम्बुद्धयागु पुष्पाधिष्ठान धारणी मन्त्र नं अधिष्ठान याना च्वनागु धारणीया भाव थथे ख: - हे तथागत अर्हत् सम्यक सम्बुद्ध भगवान ! छलपोल पुष्प पुष्प पतिकं अर्थात् प्रत्येक स्वांने विज्याना च्वन । महापुष्प तफ्व:गु स्वांने तथा सुपुष्प सुगन्धगु स्वांने नं विज्याना च्वना बिज्यात । उलिजक मखु छिपिं स्वांनं हे उत्पन्न जुया विज्याम्ह ख: । जगत सत्वयात आमोद प्रमोद जुयेमा, सुख सञ्चार जुयेमा धका: उखें थुखें स्वां ह्वला च्वना बिज्याम्ह ख: । हे तथागत ! छिपिनि ध्वांयूले नं स्वांयागु चिं दु । अथे जूगुलिं छिपिं पुष्पकेतु राजा धैगु नामं प्रसिद्ध जुया विज्यात । उजाम्ह छलपोलयात नमस्कार धैगु भावार्थ ख: । थ्व थन उल्लेख यानागु साधारण संकल्प ख: । यजमान तथा गुरुजुयागु ईच्छा अनुसारं घटी बढी नं यायेज्यू ।

## भावना स्वाँ तये

*श्री आर्यावलोकितेश्वरस्य पञ्चोपचार पूजा निमित्यर्थं, ॐ स्वभावशुद्धाः सर्वधर्माः स्वभावशुद्धो ऽहं शून्यता ज्ञान वज्रस्वभावात्मकोहम् ॥*

**भावार्थ :**

फुक्क वस्तु फुक्क खं स्वभावं हे शुद्ध खः । थ्व शुद्ध थ्व अशुद्ध धयागु मनयागु जक कल्पना खः । थ्व कल्पना मदुसा फुक्कं हे स्वभावं हे शुद्ध खः । अथे जूगुलिं जि नं स्वभावं हे शुद्ध धकाः भाःपा उलिजक मखु, शून्यता ज्ञानयागु भावनां जि नं परवादी च्छेदन, भेदन याये मफुगु वज्र समानगु स्वभावम्ह खः धकाः भाःपा थ्व मन्त्र वाक्य व्वना आर्यावलोकितेश्वर तथा मेमेपिं देवतापिन्त नं थःत नं शून्यता भावना याःगु खः । थथे यायेगुयात थौंकन्हे भावना स्वाँ तयेगु धकाः धायेगु चलन दु । तर गुरु परम्परा त्वःफ्युगुलिं शून्यता भावना याना च्वना तथा शून्यता भावनां क्लेश निर्मूल जुइ धैगु खं नं मथुल, शून्यता भावना याये नं मसल । तथापि न्हापायापिं आचार्यपिसं थुइका सिइका हे शून्यता भावना याना च्वंगु खः । *थुगु खं वसन्त तिलक तन्त्रया टीकां व्यक्त जू ।*

*निःस्वभावपदाभ्यासाद् देवतारुप भावना ॥*
*सा मता महती पूजा सर्व बुद्ध प्रसादनी ॥*

देवता, देवताया रुप, देवताया भावनायात नं निःस्वभाव धकाः भावना यायेगु अभ्यास फुक्कं वुद्धपिन्त प्रसन्न यायेगु पूजा खः । व हे निःस्वभाव भावना अर्थात् शून्यता भावना, तःधंगु पूजा खः । थन शून्यता, निःस्वभाव, भूतकोटि, अद्वय धयागुया अर्थ छगू हे खः धयागु खं ल्वःमंके मज्यू । अले हानं देवता भावनाया नाप नापं शून्यता नं भावना यायेगु वज्रयानया मूल सिद्धान्त खः धयागु नं लुमंका तयेमाः । थथे शून्यता भावना यायेगु खं तत्व ज्ञान संसिद्धि, काल चक्र आदि वज्रयानया तन्त्रय् नं उल्लेख याना तःगु दु । व लिपा प्रकाश याये ।

## धूँ च्याका आवाहन पूजा

*भगवन श्री अमुक सद्विद्याराजं नमस्तुते ॥*
*कर्तुमिच्छामि ते नाथ मण्डलं करुणात्मकम् ॥*
*शिष्याणा मनुकम्पार्थं "युष्माकं" पूजनाय च ॥*
*तन्मे भक्तस्य भगवन् प्रसादं कर्तुमर्हसि ॥२॥*

